# अथ सप्तमोऽध्यायः

## भरत चरित्र

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**भरतस्तु महाभागवतो यदा भगवतावनितलपरिपालनाय सञ्चिन्तितस्तदनुशासनपरः पञ्चजनीं विश्वरूपदुहितरमुपयेमे ॥ १ ॥**

**पदार्थ–**
**महाभागवतः** = भगवान्का परमभक्त
**भरतः** = भरतजी
**तु** = त
**यदा** = जुन वेला
**भगवता** = भगवान् ऋषभदेवद्वारा
**अवनितलपरिपालनाय** = पृथिवीको पालनका लागि
**सञ्चिन्तितः** = राजा बनाउन सोचिएका थिए (त्यतिखेर)
**तदनुशासनपरः** = ऋषभदेवको आज्ञा पालन गर्ने (भरतजीले)
**विश्वरूपदुहितरम्** = विश्वरूपकी छोरी
**पञ्चजनीं** = पञ्चजनीलाई
**उपयेमे** = विवाह गरे

**वाक्यार्थ–** हे राजा परीक्षित् ! भगवान् ऋषभदेवले भगवान्का परमभक्त आफ्ना छोरा भरतलाई राजा बनाई पृथिवीको रक्षा गर्ने काममा नियुक्त गर्ने विचार गरेपछि ती भरतले आफ्ना पिताको आज्ञाअनुसार विश्वरूपकी छोरी पञ्चजनीसँग विवाह गरे।

**तस्यामु ह वा आत्मजान् कार्त्स्न्येनानुरूपानात्मनः पञ्च जनयामास भूतादिरिव भूतसूक्ष्माणि ॥ २ ॥**

**पदार्थ–**
**ह** = निश्चय नै
**भूतादिः** = पञ्च महाभूतहरूले
**भूतसूक्ष्माणि इव** = पाँच तन्मात्राहरूलाई झैँ
**तस्याम् वा** = ती पञ्चजनीबाट
**कार्त्स्न्येन** = पूरै
**आत्मनः अनुरूपान्** = आफूजस्तै
**पञ्च** = पाँच (भाइ)
**आत्मजान्** = छोराहरू
**जनयामास** = जन्माए

**वाक्यार्थ–** पञ्च महाभूतहरूबाट पाँच तन्मात्राहरू उत्पन्न भए झैँ राजकुमार भरतले पञ्चजनीको गर्भबाट आफूसमान (सद्‌गुण र सद्‌बुद्धिले युक्त) भएका पाँच भाइ छोराहरू जन्माए।

**सुमतिं राष्ट्रभृतं सुदर्शनमावरणं धूम्रकेतुमिति। अजनाभं नामैतद्वर्षं भारतमिति यत आरभ्य व्यपदिशन्ति ॥ ३ ॥**

**पदार्थ–**
**सुमतिं** = सुमति
**राष्ट्रभृतं** = राष्ट्रभृत्
**सुदर्शनम्** = सुदर्शन
**आवरणं** = आवरण र
**धूम्रकेतुम्** = धूम्रकेतु
**इति** = यसप्रकार
**यतः** = जुन समयबाट
**आरभ्य** = आरम्भ गरेर

**अजनाभं नाम** = अजनाभ नाम भएको
**एतद्वर्षं** = यस वर्षलाई
**भारतम् इति** = (भरतको नामबाट) भारतवर्ष भनेर
**व्यपदिशन्ति** = भन्दछन्

**वाक्यार्थ–** राजा भरतका सुमति, राष्ट्रभृत्, सुदर्शन, आवरण र धूम्रकेतु नामका पाँच छोराहरू थिए। अजनाभ नाम भएको यस वर्षलाई उनै भरतको नामबाट यसै समयदेखि भारतवर्ष भन्न थालिएको हो।

**स बहुविन्महीपतिः पितृपितामहवदुरुवत्सलतया स्वे स्वे कर्मणि वर्तमानाः प्रजाः स्वधर्ममनुवर्तमानः पर्यपालयत्॥ ४॥**

**पदार्थ–**
**सः** = ती
**बहुवित्** = धैरै ज्ञान भएका
**महीपतिः** = राजा (भरतले)
**पितृपितामहवत्** = बुबा (ऋषभ) र हजुरबुबा (नाभि आदिले) जैँ
**स्वधर्मम्** = आफ्नो धर्मलाई
**अनुवर्तमानः** = पालन गर्दै
**उरुवत्सलतया** = ज्यादै दयालु भएका हुनाले
**स्वे स्वे** = आ-आफ्नो
**कर्मणि** = कर्तव्यमा
**वर्तमानाः** = रहेका
**प्रजाः** = प्रजाहरूलाई
**पर्यपालयत्** = पालन-पोषण गरे

**वाक्यार्थ–** धैरै ज्ञान भएका ती ज्यादै दयालु राजा भरतले आफ्नो धर्म र मर्यादामा रहेर ऋषभदेव, नाभि आदि बाबु-बाजेहरूले जैँ आ-आफ्नो कर्तव्यमा लागेका प्रजाहरूको पालन-पोषण गर्न लागे।

**ईजे च भगवन्तं यज्ञक्रतुरूपं क्रतुभिरुच्चावचैः श्रद्धयाहृताग्नि-होत्रदर्शपूर्णमासचातुर्मास्यपशुसोमानां प्रकृतिविकृतिभिरनुसवनं चातुर्होत्रविधिना॥ ५॥**

**पदार्थ–**
**यज्ञक्रतुरूपं** = यज्ञस्वरूप
**भगवन्तं** = भगवान्लाई
**च** = पनि
**श्रद्धया** = श्रद्धापूर्वक
**चातुर्होत्रविधिना** = होता, अध्वर्यु, उद्गाता र ब्रह्मा यी चार ऋत्विग्हरूद्वारा गरिने विधिले
**आहृताग्निहोत्रदर्शपूर्णमास-चातुर्मास्यपशुसोमानां** = अग्निहोत्र, दर्श, पूर्णमास, चातुर्मास्य, पशु तथा सोम आदि
**उच्चावचैः** = ठुला र साना
**प्रकृतिविकृतिभिः** = प्रकृति र विकृति संज्ञक
**क्रतुभिः** = यज्ञहरूद्वारा
**अनुसवनं** = समयअनुसार
**ईजे** = यज्ञ गरे

**वाक्यार्थ–** ती राजा भरतले होता (ऋग्वेदपाठी), अध्वर्यु (यजुर्वेदपाठी), उद्गाता (सामगान गर्ने) र ब्रह्मा (कृताकृत हेर्ने) गरी चार किसिमका ऋत्विग्हरूद्वारा गराइने प्रकृति (सम्पूर्ण अङ्गले युक्त भएको) र विकृति (सबै अङ्ग पूर्ण नभएको)का भेदले दुई प्रकारका अग्निहोत्र, दर्श, पूर्णमास, चातुर्मास्य, पशु तथा सोम आदि साना-ठुला यज्ञहरूद्वारा श्रद्धापूर्वक भगवान्को पूजा गरे।

**विवरण–** यहाँ भगवान्लाई यज्ञरूप र क्रतुरूप भनिएको छ। सामान्यतया यज्ञ र क्रतु दुबै शब्दले एउटै अर्थ बुझाउछन् तर यहाँ यी दुई बीचको भिन्नतातर्फ सङ्केत गरिएको छ। वैदिक हवन कार्यमा

प्रयोग गरिने खयरबाट बनेको आठ कोण पारेर ताछिएको काष्ठविशेषलाई यूप भनिन्छ। त्यसको प्रयोग हुने अनुष्ठानलाई क्रतु र प्रयोग नहुनेलाई यज्ञ भनिन्छ। अग्निहोत्र आदि यज्ञका प्रकृति र विकृति गरी दुई भेद रहेका छन्। जुन यज्ञमा आवश्यक सम्पूर्ण अङ्गहरूको उपदेश र प्रयोग हुन्छ त्यसलाई प्रकृति याग भनिन्छ भने अङ्गविशेषको मात्र उपदेश र प्रयोग हुने यज्ञलाई विकृति याग भनिन्छ।

**सम्प्रचरत्सु नानायागेषु विरचिताङ्गक्रियेष्वपूर्वं यत्तत् क्रियाफलं धर्माख्यं परे ब्रह्मणि यज्ञपुरुषे सर्वदेवतालिङ्गानां मन्त्राणामर्थनियामकतया साक्षात्कर्तरि परदेवतायां भगवति वासुदेव एव भावयमान आत्मनैपुण्यमृदितकषायो हविःष्वध्वर्युभिर्गृह्यमाणेषु स यजमानो यज्ञभाजो देवांस्तान् पुरुषावयवेष्वभ्यध्यायत्॥ ६॥**

**पदार्थ—**
**विरचिताङ्गक्रियेषु** = अङ्गक्रिया सम्पन्न भइसकेका
**नानायागेषु** = विभिन्न यज्ञहरू
**सम्प्रचरत्सु** = सुरु भइसकेपछि
**अध्वर्युभिः** = ऋत्विग्हरूद्वारा
**हविःषु** = यज्ञका हविहरू
**गृह्यमाणेषु** = ग्रहण गरिएपछि
**धर्माख्यं** = धर्म नामक
**यत्** = जुन
**अपूर्वं** = अपूर्व हो
**तत्** = त्यो
**क्रियाफलं** = यज्ञकर्मको फल
**सर्वदेवतालिङ्गानां** = इन्द्र आदि सम्पूर्ण देवताहरूका प्रकाशक
**मन्त्राणाम्** = मन्त्रहरूका
**अर्थनियामकतया** = अर्थ नियामक
**यज्ञपुरुषे** = यज्ञपुरुष
**परे ब्रह्मणि** = परब्रह्ममा
**साक्षात्कर्तरि** = साक्षात् कर्ता
**परदेवतायां** = परदेवतारूप
**भगवति** = भगवान्
**वासुदेवे** = वासुदेवमा
**एव** = नै
**भावयमानः** = निष्काम भावनाले अर्पण गर्दै
**आत्मनैपुण्यमृदितकषायः** = भगवान्प्रतिको श्रद्धाका कारणले आफ्नो राग-द्वेष आदि मललाई समाप्त पार्दै
**सः** = ती
**यजमानः** = यजमान भरतले
**यज्ञभाजः** = यज्ञभागका अधिकारी भएका
**तान्** = ती
**देवान्** = इन्द्र आदि देवताहरूलाई
**पुरुषावयवेषु** = यज्ञपुरुष भगवान्का अवयवहरूमा
**अभ्यध्यायत्** = ध्यान गरे

**वाक्यार्थ—** यसप्रकार अङ्गकर्मसहितका विभिन्न यज्ञहरू गर्ने क्रममा जब ऋत्विग्हरू आहुति दिन हातमा चरु लिन्थे, तब यजमान राजा भरत त्यस यज्ञद्वारा प्राप्त हुने पुण्यरूप फल यज्ञपुरुष भगवान् वासुदेवलाई नै अर्पण गरिदिन्थे। वास्तवमा इन्द्र आदि सम्पूर्ण देवताहरूलाई प्रकाशित गर्ने मन्त्रहरूका पनि अर्थलाई नियमन गर्ने भगवान् वासुदेव नै मुख्य कर्ता एवं प्रधान देवता हुनुहुन्छ भन्ने निश्चय गरेर उनले यज्ञभागका अधिकारी इन्द्र आदि देवताहरूलाई पनि भगवान्का अङ्गहरूमा नै ध्यान गर्दथे, अर्थात् उनी भगवान्कै अङ्गमा सम्पूर्ण देवताहरूको भावना गर्दथे।

**विवरण—** कर्महरू गरिसकेपछि फलप्राप्ति हुनुभन्दा पहिलेको अवस्थालाई अपूर्व भनिन्छ।

अपूर्वका सम्बन्धमा विद्वान्हरूको फरक-फरक धारणा पाइन्छ । कर्म गर्नेबित्तिकै सूक्ष्मरूपमा उत्पन्न हुने स्वर्ग आदि फल नै अपूर्व हो भन्ने एकथरी मीमांसकहरूको मत छ भने कालान्तरमा स्वर्ग आदि फल दिन सक्ने धर्म आदि शक्ति नै अपूर्व हो भन्ने अर्काथरी विद्वान्हरूको मत छ। यहाँ **धर्माख्यं** र **क्रियाफलं** यी दुई पदले यिनै मतहरूलाई सङ्केत गरेका छन्। यज्ञ आदि विभिन्न सत्कर्महरू गर्दा उत्पन्न भएको धर्मलाई भरतले आफ्नो ठानेनन् अपितु भगवान्को नै ठाने।

मीमांसाशास्त्रमा देवताहरू मन्त्रमय हुन्छन् भनी बताइएको छ। इन्द्र, वरुण, अग्नि आदि अनेक देवताहरू मन्त्रका नै अर्थरूप हुन्, उनीहरूको छुट्टै कुनै आकार छैन भन्ने सिद्धान्त रहेको छ। भगवान् ती देवताहरूको पनि नियामक अर्थात् सञ्चालक हुनुहुन्छ। त्यसैले उहाँलाई **परदेवता** भनिन्छ। विभिन्न कर्मका कर्ता जीवात्माहरूलाई पनि अन्तर्यामी रूपले भगवान्ले नै प्रेरित गर्नुहुन्छ, त्यसैले उहाँलाई **साक्षात्कर्ता** भनी बताइएको छ। प्रायः मानिसहरू राम्रा कर्महरू मैले नै गरेको हुँ र तिनबाट उत्पन्न धर्म पनि मेरो नै हो भनी घमण्ड गर्दछन्। आफूलाई धर्मात्मा अर्थात् धर्मको आश्रय मान्ने ती मान्छेहरू अज्ञानमा फसेका हुन्। कर्मद्वारा देवताहरूको आराधना हुने हुँदा कर्मबाट उत्पन्न धर्म आदि देवताहरूमा नै रहन्छ भन्ने मान्ने हो भने पनि देवताहरूका समेत नियामक भगवान् नै अपूर्वको आश्रय सिद्ध हुनुहुन्छ। त्यसै गरी कर्म गर्ने यजमानमा नै धर्म रहन्छ भन्ने हो भने पनि सबैका अन्तर्यामी र ती-ती कर्महरूमा यजमानलाई प्रेरित गर्ने परमात्मा नै वास्तवमा कर्ता भएकाले उहाँ नै धर्मका आश्रय हुनुहुन्छ। भित्र बसी-बसी कर्म गर्ने परमात्मालाई नचिनी सामान्य मान्छेहरू निमित्त मात्र बनेको आफैँलाई नै कर्ता मान्दछन्। यस्तो उल्टो बुद्धि भरतमा थिएन र यही निपुणता अर्थात् चलाखीका कारण सबै थरी धर्म आदिको बन्धनलाई भगवान्मा अर्पण गरी उनी पापपुण्यको बन्धनबाट रहित बनेका थिए।

भगवद्गीता (२।५०)मा निष्काम कर्मयोगको परिभाषा गर्दै भनिएको छ– **योगः कर्मसु कौशलम्** अर्थात् कुशलतापूर्वक कर्म गर्नु नै योग हो। कर्म गरिसकेपछि त्यसको पुण्यपापरूपी फल अवश्य प्राप्त हुन्छ तर आसक्तिरहित भई कर्मको फल भगवान्मा अर्पण गरिन्छ भने त्यस कर्मको फलले आफूलाई छुँदैन। कर्म गर्दागर्दै पनि त्यसबाट उत्पन्न हुने पुण्यपापले आफूलाई बन्धनमा पार्न नसक्ने बन्नु नै निष्काम कर्मयोगको रहस्य हो। कर्ममा कुशलता प्राप्त गर्नु भनेको यही नै हो।

**एवं कर्मविशुद्ध्या विशुद्धसत्त्वस्यान्तर्हृदयाकाशशरीरे ब्रह्मणि भगवति वासुदेवे महापुरुषरूपोपलक्षणे श्रीवत्सकौस्तुभ-वनमालारिदरगदादिभिरुपलक्षिते निजपुरुषहृल्लिखितेनात्मनि पुरुषरूपेण विरोचमान उच्चैस्तरां भक्तिरनुदिनमेधमानरया-जायत ॥ ७ ॥**

**पदार्थ–** **एवं** = यसरी **कर्मविशुद्ध्या** = कर्मको

शुद्धिद्वारा
**विशुद्धसत्त्वस्य** = चित्त शुद्ध भएका राजा भरतको
**अन्तर्हृदयाकाशशरीरे** = भित्री हृदयरूप आकाश नै अभिव्यक्ति स्थल भएका
**महापुरुषरूपोपलक्षणे** = महापुरुषरूप नै जसको आकार या उपलक्षण छ त्यस्ता
**श्रीवत्सकौस्तुभवनमालारिदर-गदादिभिरुपलक्षिते** = श्रीवत्स, कौस्तुभ, वनमाला, चक्र, शङ्ख, गदा आदिद्वारा चिनिनुभएका
**निजपुरुषहृल्लिखितेन** = नारद आदि भक्तहरूद्वारा सधैँ हृदयमा चिन्तन गरिने हुनाले
**आत्मनि** = अन्तःकरणमा
**पुरुषरूपेण** = पुरुषरूपले
**विरोचमाने** = विराजमान हुनुभएका
**ब्रह्मणि** = परब्रह्मस्वरूप
**वासुदेवे** = वासुदेव
**भगवति** = भगवान्मा
**अनुदिनम्** = दिनदिनै
**एधमानरया** = अत्यन्त वेगले बढिरहेको
**उच्चैस्तरां** = अति उत्कृष्ट
**भक्तिः** = भक्ति
**अजायत** = पैदा भयो

**वाक्यार्थ–** यसरी निष्काम कर्म गर्नाले राजा भरतको चित्त शुद्ध भएको थियो। त्यस पवित्र चित्तमा श्रीवत्स, कौस्तुभमणि, वनमाला, शङ्ख, चक्र, गदा आदि चिह्नले सुशोभित भएर हृदयरूप आकाशमा प्रकट हुनुहुने, आफ्ना प्रियभक्त नारद आदिको हृदयमा निश्चलभावले विराजमान पुरुषरूप सर्वव्यापक भगवान् वासुदेवप्रति उनको उत्कृष्ट भक्ति बढ्दै गयो।

**एवं वर्षायुतसहस्रपर्यन्तावसितकर्मनिर्वाणावसरोऽधिभुज्यमानं स्वतनयेभ्यो रिक्थं पितृपैतामहं यथादायं विभज्य स्वयं सकलसम्पन्निकेतात् स्वनिकेतात् पुलहाश्रमं प्रवव्राज ॥ ८ ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार राजकाज चलाउँदै
**वर्षायुतसहस्रपर्यन्तावसितकर्म-निर्वाणावसरः** = दश लाख वर्षसम्म आफ्नो राज्यसम्बन्धी कर्म समाप्त गरेर
**अधिभुज्यमानं** = आफूले भोग गरिरहेको
**पितृपैतामहं** = बाबुबाजेको
**रिक्थं** = राज्य तथा धनसम्पत्ति
**स्वतनयेभ्यः** = आफ्ना छोराहरूमा
**यथादायं** = भागअनुसार
**स्वयं** = आफैँले
**विभज्य** = विभाग गरिदिएर
**सकलसम्पन्निकेतात्** = सम्पूर्ण सम्पत्तिको खानी भएको
**स्वनिकेतात्** = आफ्नो दरबारबाट
**पुलहाश्रमं** = पुलह ऋषिको आश्रम (हरिहरक्षेत्र)मा
**प्रवव्राज** = गए

**वाक्यार्थ–** यसप्रकार दश लाख वर्षसम्म राज्य गरिसकेपछि राजा भरतले आफूले भोग गरिरहेको बाबु-बाजेबाट प्राप्त सम्पूर्ण राज्य-सम्पत्ति शास्त्रीय विधिअनुसार आफ्ना छोराहरूलाई भाग लगाइदिए। सम्पत्तिले पूर्ण भएको राजमहललाई छाडेर उनी आफू चाहिँ पुलह ऋषिको आश्रम हरिहरक्षेत्रमा गए।

**यत्र ह वाव भगवान् हरिरद्यापि तत्रत्यानां निजजनानां वात्सल्येन सन्निधाप्यत इच्छारूपेण ॥ ९ ॥**

**पदार्थ–**
**यत्र** = जुन हरिहर क्षेत्रमा
**ह वाव** = निश्चय नै
**भगवान्** = भगवान्
**हरिः** = श्रीहरि
**अद्य अपि** = आज पनि
**तत्रत्यानां** = त्यहाँ बस्ने
**निजजनानां** = आफ्ना भक्तहरूको
**वात्सल्येन** = प्रेमको कारणले
**इच्छारूपेण** = इच्छाअनुसार (इष्टदेवको रूपमा)
**सन्निधाप्यते** = नजिकै प्राप्त हुनुहुन्छ

**वाक्यार्थ–** त्यस हरिहरक्षेत्रमा अहिले पनि भक्तहरूको इच्छाअनुसार भगवान् श्रीहरि आफ्ना प्रेमीहरूको साथमा रहनुहुन्छ।

**यत्राश्रमपदान्युभयतो नाभिभिर्दृषच्चक्रैश्चक्रनदी नाम सरित्प्रवरा सर्वतः पवित्रीकरोति ॥ १० ॥**

**पदार्थ–**
**यत्र** = जहाँ
**उभयतोनाभिभिः** = दुबै पट्टिबाट नाभिजस्तो लाग्ने
**दृषच्चक्रैः** = चक्रले युक्त शालग्राम शिलाहरूद्वारा
**चक्रनदी नाम** = चक्रनदी नाम गरेकी
**सरित्प्रवरा** = श्रेष्ठ नदीले
**आश्रमपदानि** = आश्रम क्षेत्रलाई
**सर्वतः** = सबै प्रकारले
**पवित्रीकरोति** = पवित्र बनाउँछिन्

**वाक्यार्थ–** त्यहाँ चक्रनदी (काली गण्डकी) नाम गरेकी प्रसिद्ध नदी बग्दछिन्। ती काली गण्डकीले तल-माथि दुबैतिर नाभिसमान चिह्न भएका चक्राकार शालग्राम शिलाहरूद्वारा सम्पूर्ण आश्रम क्षेत्रलाई नै सबै प्रकारले पवित्र गरिरहन्छिन्।

**विवरण–** हिमवत्खण्डको शिरोभागमा रहेको मुक्तिक्षेत्रबाट प्रवाहित नदी कृष्णा गण्डकीलाई पावन नदीको रूपमा शास्त्रहरूमा प्रशंसा गरिएको छ। वराह, पद्म, स्कन्ध आदि पुराणहरूमा यससम्बन्धी विभिन्न प्रसङ्गहरू पाइन्छन्। वराह पुराणअनुसार पवित्र मुक्तिक्षेत्रमा रही भगवान् विष्णुले लोकहितका लागि भगवान् शङ्करको तपस्या गर्दा उहाँको गण्डस्थल (गाला)को पसिनाबाट बनेकी नदी भएकीले यिनलाई गण्डकी भनिएको हो। एकपटक यिनले आफ्ना अधिष्ठाता उनै भगवान् विष्णुको तपस्या गरिन् र भगवान्लाई आफ्नो गर्भभित्र पुत्ररूपले रहन प्रार्थना गरिन्। सर्वव्यापी नारायण प्रभु शालग्रामको रूप लिएर नदीभित्र प्रवेश गर्नुभयो। यस कुराको वर्णन पुराणहरूमा विस्तृतरूपले गरिएको छ। गण्डकी नदीको किनारमा पुलहाश्रम, सिद्धाश्रम आदि तपःस्थलहरू रहेको चर्चा पुराणहरूमा पाइन्छ। भगवान् शङ्करले त्रिशूल प्रहार गर्दा निस्किएकी त्रिशूली नदी जुन ठाउँमा कृष्णा गण्डकीसँग मिल्दछिन् त्यो सङ्गमस्थललाई आदिप्रयाग भनी पुराणहरूमा वर्णन गरिएको छ। भगवान् विष्णु र भगवान् शङ्कर दुबैको सन्निधि भएको यो हरिहर क्षेत्रमा देवताहरू सधैं अटन (भ्रमण) गरिरहने हुनाले यसलाई देवघाटक्षेत्र भनिएको हो भनी पुराणहरूमा उल्लेख गरिएको छ। यस प्रकार सप्तगण्डकी क्षेत्र भगवान् शङ्कर र भगवान् विष्णुका पवित्र लीलाप्रसङ्गहरूले भरिएको छ।

भगवान् विष्णुको चक्रचिह्नयुक्त पवित्र शालग्रामशिला साक्षात् भगवान्कै स्वरूप मानिन्छन्। स्कन्दपुराणमा भगवान्को आज्ञाले विश्वकर्मा नै वज्रकीट बनेर काला चिल्ला

शिलाहरूलाई चक्रचिह्नयुक्त बनाउछन् भनिएको छ। सालङ्कायन ऋषिको तपस्याबाट प्रसन्न हुनुभएका भगवान् शालग्रामको रूपमा यस पुण्यक्षेत्रमा रहनुभएको प्रसङ्ग वराहपुराणमा पाइन्छ। शालग्राममा भगवान् शङ्कर र विष्णुको नित्य वास हुन्छ। यसको पूजा जहिले जसरी गरे पनि त्यो अपूर्ण हुँदैन भनिएको छ। हुन त कणकणमा परमात्मा व्यापक हुनुहुन्छ, उहाँको सच्चित् शक्ति पाएर नै जगत् प्रकाशित भएको छ तर सगुण परमात्माका उपासकहरूले आफ्ना इष्टदेवको धेरै कला अभिव्यक्त भएको यस्ता शालग्राम शिलामा पूर्ण भगवद्बुद्धि राख्नुपर्दछ भनी पुराणहरूमा बताइएको छ।

**तस्मिन् वाव किल स एकलः पुलहाश्रमोपवने विविधकुसुम-किसलयतुलसिकाम्बुभिः कन्दमूलफलोपहारैश्च समीहमानो भगवत आराधनं विविक्त उपरतविषयाभिलाष उपभृतोपशमः परां निर्वृतिमवाप ॥ ११ ॥**

**पदार्थ–**
**तस्मिन्** = त्यस
**पुलहाश्रमोपवने** = पुलहाश्रमको बगैंचामा
**वाव किल** = निश्चय नै
**एकलः** = एक्लै
**विविधकुसुमकिसलयतुलसिकाम्बुभिः** = धेरै प्रकारका फूल, पालुवा, तुलसी, जल आदिद्वारा
**कन्दमूलफलोपहारैः च** = कन्द, मूल, फलफूल आदिको उपहारद्वारा पनि
**भगवतः** = भगवान्को
**आराधनं** = आराधना (गर्ने)
**समीहमानः** = इच्छा गर्दै
**विविक्तः** = एकाग्र भएर
**उपरतविषयाभिलाषः** = सम्पूर्ण विषयको चाहनाबाट टाढा रहेर
**उपभृतोपशमः** = शम आदि साधनालाई स्वीकार गर्दै
**सः** = ती राजर्षि भरतले
**परां** = अत्यन्त ठुलो
**निर्वृतिम्** = आनन्दलाई
**अवाप** = प्राप्त गरे

**वाक्यार्थ–** पुलहाश्रममा पुगेका राजर्षि भरत त्यस उपवनको एकान्त ठाउँमा बसेर विभिन्न प्रकारका पत्र, पुष्प, तुलसीदल, जल, कन्दमूल, फल आदि सामग्रीले भगवान्को आराधना गर्न लागे। यसले गर्दा उनको अन्तःकरणबाट क्रमशः सम्पूर्ण विषयको अभिलाषा हट्दै गयो र निष्काम भावको वृद्धिले उनले परमानन्द प्राप्त गरे।

**तयेत्थमविरतपुरुषपरिचर्यया भगवति प्रवर्धमानानुरागभरद्रुतहृदय-शैथिल्यः प्रहर्षवेगेनात्मन्युद्भिद्यमानरोमपुलककुलक औत्कण्ठ्यप्रवृत्त-प्रणयबाष्पनिरुद्धावलोकनयन एवं निजरमणारुणचरणारविन्दानुध्यान-परिचितभक्तियोगेन परिप्लुतपरमाह्लादगम्भीरहृदयह्रदावगाढधिषण-स्तामपि क्रियमाणां भगवत्सपर्यां न सस्मार ॥ १२ ॥**

**पदार्थ–**
**इत्थम्** = यसरी
**तया** = त्यो पहिले भनिएझैं

**अविरतपुरुषपरिचर्यया** = निरन्तर गरिएको भगवान्को सेवाले
**भगवति** = भगवान्मा
**प्रवर्धमानानुरागभरद्रुतहृदय-शैथिल्यः** = भगवान्प्रतिको अनुराग बढ्नाले हृदय द्रवीभूत भएका
**प्रहर्षवेगेन** = अत्यधिक हर्षका कारण
**आत्मनि** = शरीरमा
**उद्भिद्यमानरोमपुलककुलकः** = रोमाञ्च छाएका
**औत्कण्ठ्यप्रवृत्तप्रणयबाष्प-निरुद्धावलोकनयनः** = अतिशय उत्कण्ठाको कारण प्रेमाश्रुले भरिपूर्ण हुँदा दृष्टि लुप्त भएका नयनले युक्त
**एवं** = यस्तो
**निजरमणारुणचरणारविन्दा-नुध्यानपरिचितभक्तियोगेन** = आफ्नो रमणस्थल भगवान्को केही राता चरणारविन्दको ध्यानरूपी भक्तियोगले
**परिप्लुतपरमाह्लादगम्भीरहृदय-ह्रदावगाढधिषणः** = सर्वत्र व्याप्त आनन्दै आनन्दको हृदयरूपी सरोवरमा बुद्धि डुबेका भरतले
**ताम्** = पूर्वोक्त
**क्रियमाणां** = सधैँ गरिरहेको
**भगवत्सपर्यां** = भगवान्को पूजा
**अपि** = पनि
**न सस्मार** = सम्झेनन्

**वाक्यार्थ–** यसप्रकार नियमपूर्वक भगवान्को सेवामा निरन्तर लागेपछि भरतमा दिनदिनै भगवान्प्रतिको प्रेम बढ्न लाग्यो। प्रबल प्रेमका कारण हृदय द्रवीभूत भएका उनलाई भगवान्को आराधना बाहेक अन्य कुराको होसै भएन। भगवान्को सेवाबाट प्राप्त आनन्दको वेगले शरीरमा रोमाञ्च हुन थाल्यो। अतिशय उत्कण्ठाका कारण आनन्दका आँसु भरिएका उनका आँखाले देख्न नै छाडे। यसरी आफ्ना प्रियतम भगवान्का राता-राता चरणकमलको ध्यान गर्दा भक्तियोग बढ्दै गयो। आनन्दै-आनन्दले परिपूर्ण हृदयरूपी सरोवरमा मन रमाउनाले आफूले सधैँ गरिरहेको भगवान्को पूजा, आराधना आदिको पनि उनलाई सम्झना भएन।

**विवरण**– हृदयद्रुति अर्थात् चित्त पग्लिनुलाई भक्तिशास्त्रमा ठुलो महत्त्वका साथ लिइएको पाइन्छ। परमात्मामा जसको जति बढी भक्ति हुन्छ त्यसको हृदय परमात्माका गुणहरू सुन्दासुन्दै त्यति नै बढी पग्लिन्छ। जसरी पगालिएको धातुलाई जस्तो साँचोमा हाल्यो त्यस्तै आकारको बन्दछ त्यसै गरी पग्लिएको चित्त पनि भगवान्मा झन्-झन् लीन बन्दै जान्छ।

भक्तिरसमा चुर्लुम्म डुबेको चित्तको स्थिति सामान्य अवस्थाभन्दा विलक्षण हुन्छ। सामान्य अवस्थामा एउटै मनमा उत्साह र उदासीनता यी दुई विरोधी भाव रहन सक्दैनन् तर भक्तियुक्त चित्त संसारबाट विरक्त र परमात्मा प्राप्तितर्फ अत्यन्त उत्साही बन्दछ। यहाँ आएको **हृदयशैथिल्यः** यो पदले कुनै पनि सांसारिक वस्तुको अपेक्षा नराख्ने भन्ने अर्थ बुझाउँछ। यहाँ **उत्कण्ठा** भनेको परमात्मालाई पाउन हृदय अत्यन्त छट्पटाउनु हो। यसप्रकार संसारको विषयमा वास्ता नगर्ने र परमात्मामा सधैँ उत्साह राख्ने भक्तमा रोमाञ्च हुने, आँसुका धारा बग्ने, बोल्न नसक्ने जस्ता सात्त्विक भावहरू देखिइरहन्छन्। परमात्माका चरणको ध्यानमा नै लीन भएर सुद्धिबुद्धि हराएर मस्त बनेका भरतले पनि बाहिरी संसारको कुनै वास्ता गरेनन्। अनन्त प्रेम र आदर मिसिँदा भक्तिको स्वरूप अत्यन्त विलक्षण बन्दछ। आदरका कारणले भक्तहरू भगवान्को चरणको सेवा गर्दछन् भने प्रेमका कारण त्यसमा मस्त बनिरहन्छन्। मनुष्यको बुद्धि जब यस्तो भक्तिरसमा चुर्लुम्म डुब्छ तब त्यस भक्तलाई आफूले भगवान्को सेवा गरिरहेको पनि थाहा हुँदैन। यसर्थ चित्तलाई पूर्ण रूपमा भगवान्मा समर्पित गरेर आफूलाई बिर्सनु नै भक्तिको उत्कृष्ट स्वरूप हो।

राजा भरत भगवद्भक्तिको यस्तै उत्कर्षमा पुगेका थिए।

**इत्थं धृतभगवद्व्रत ऐणेयाजिनवाससानुसवनाभिषेकार्द्रकपिश-कुटिलजटाकलापेन च विरोचमानः सूर्यर्चा भगवन्तं हिरण्मयं पुरुषमुज्जिहाने सूर्यमण्डलेऽभ्युपतिष्ठन्नेतदु होवाच ॥ १३ ॥**

**पदार्थ–**
**इत्थं** = यसप्रकारले
**धृतभगवद्व्रतः** = भगवान्को आराधनारूपी व्रतलाई धारण गरेका
**ऐणेयाजिनवाससानुसवना-भिषेकार्द्रकपिशकुटिलजटा-कलापेन च** = कृष्ण मृगचर्मलाई कपडाको रूपमा लगाएर दिनदिनै त्रिकालस्नानको कारणले चिसा र घुमेका जटासमूहले पनि
**विरोचमानः** = अति तेजस्वी देखिने भरत
**उज्जिहाने** = उदाउन लागेको
**सूर्यमण्डले** = सूर्यमण्डलमा
**सूर्यर्चा** = भगवान् सूर्यसम्बन्धी ऋचाले
**भगवन्तं** = भगवान्
**हिरण्मयं** = हिरण्मय
**पुरुषम्** = पुरुषलाई
**अभ्युपतिष्ठन्** = उपस्थान गर्दै वा आराधना गर्दै
**उ ह** = निश्चय नै
**एतत्** = यसो
**उवाच** = भन्दथे

**वाक्यार्थ–** यसप्रकारले भगवान्को आराधनारूपी व्रत धारण गरेका भरतले शरीरमा कृष्ण मृगचर्म धारण गरेका थिए। त्रिकाल स्नान गर्नाले सधैँ भिजिरहने खैरो रङको घुम्रिएको जटाले गर्दा उनी अत्यन्त राम्रा र तेजस्वी देखिन्थे। ती तेजस्वी भरतले सूर्योदयको समयमा उपस्थानका मन्त्रहरूद्वारा ज्योतिर्मय भगवान् सूर्यनारायणको आराधना गर्दै यसो भन्दथे।

**परोरजः सवितुर्जातवेदो**
**देवस्य भर्गो मनसेदं जजान।**
**सुरेतसादः पुनराविश्य चष्टे**
**हंसं गृध्राणं नृषद्रिङ्गिरामिमः ॥ १४ ॥**

**पदार्थ–**
**परोरजः** = प्रकृतिभन्दा पर रहेका
**जातवेदः** = सम्पूर्ण कर्मको फलप्रदान गर्ने तत्त्वले
**इदं** = यो चराचरात्मक सृष्टिलाई
**मनसा** = सङ्कल्प मात्रले
**जजान** = उत्पन्न गऱ्यो
**अदः** = सृष्टि गरिएको यो विश्वमा
**आविश्य** = अन्तर्यामीको रूपमा प्रवेश गरेर
**गृध्राणं** = कर्मफलमा आसक्त
**हंसं** = जीवलाई
**पुनः** = फेरि
**सुरेतसा** = चित्शक्तिको रूपमा
**चष्टे** = कल्याण गर्दछ
**नृषद्रिङ्गिराम्** = प्राणीहरूका बुद्धिवृत्तिलाई प्रेरित गर्ने
**देवस्य** = प्रकाशमान
**सवितुः** = सूर्यमण्डलाभिमानी परमात्माको
**भर्गः** = ज्योतिर्मय कान्तिको
**इमः** = शरणमा जाऔँ

**वाक्यार्थ–** सम्पूर्ण कर्मको फलदाता साक्षात् ईश्वररूप सूर्यमण्डलाभिमानी परमात्माको तेज प्रकृतिदेखि धेरै पर छ। उहाँले नै आफ्नो सङ्कल्पद्वारा यो चराचर जगत्को सृष्टि गर्नुभएको हो। आफूले उत्पन्न गरेको संसारमा अन्तर्यामीरूपले प्रवेश गरेर आफ्नो चित्शक्तिद्वारा उहाँ सुखको इच्छा गर्ने जीवको रक्षा गर्नुहुन्छ। हामी पनि सम्पूर्ण प्राणीको बुद्धिवृत्तिलाई प्रेरित गर्ने त्यही ज्योतिर्मय तेजको शरणमा जाऔँ।

**विवरण–** एउटै ब्रह्मतत्त्व आफ्नो मायाको कारण अध्यात्म, अधिभूत र अधिदैवको रूपमा देखिन्छ। शरीरभित्र रहने अन्तःकरण र इन्द्रिय अध्यात्म हुन्; रूप, रस आदि विषयहरू अधिभूत हुन् भने सूर्य आदि देवता अधिदैव हुन्। सूर्यमण्डलका अभिमानी हिरण्यगर्भ सम्पूर्ण देवताहरूका समष्टि वा मूल हुन्। उनलाई सविता पनि भनिन्छ। सविता शब्द **षूङ् प्राणिप्रसवे** धातुबाट बन्दछ, जसको अर्थ हुन्छ सम्पूर्ण प्राणीहरूको उत्पत्ति गर्ने। त्यही सविता तत्त्वको स्तुति यहाँ गरिएको हो।

गायत्री मन्त्र वेदको सार हो। यस मन्त्रमा ब्रह्म तत्त्वको रूपमा सविताको ध्यान गरिएको छ। सविताको उपासना वैदिक उपासना पद्धतिको महत्त्वपूर्ण पक्ष हो। सूर्यको लौकिक तेजसँग ब्रह्मको दिव्य ज्ञानस्वरूप तेजको समता देख्दै मन्त्रद्रष्टा ऋषिहरूले गायत्री मन्त्रद्वारा सविताको उपासना गरे झैँ भरतले पनि यस श्लोकद्वारा सविताको स्तुति गरेका हुन्।

**मनसा** अर्थात् मायावृत्तिद्वारा जगत्को सृष्टि गर्ने परमात्मा मात्र प्राणीहरूका अनन्त कार्य र तिनका फलहरूको ठीक–ठीक व्यवस्थापन गर्न सक्नुहुन्छ। कर्मफल दिने हुनाले नै परमात्मालाई **जातवेद** भनिएको हो। जगत्का उत्पत्तिकर्ता परमात्माको स्वरूपभूत तेजलाई यस श्लोकमा आएको **भर्ग** पदले बताइएको छ। जसरी आगो र त्यसको प्रकाश भिन्न–भिन्न वस्तु होइनन् त्यसै गरी परमात्मा र उहाँको ज्ञानस्वरूप तेज पनि भिन्न होइनन्। त्यसैले परमात्माको तेजलाई गरिएको प्रार्थना परमात्माको नै प्रार्थना हो। **रजः** भनेको प्रकृति हो, जो सत्त्व, रज आदि गुणहरूका कारण सधैँ मलिन रहन्छ। परमात्मा प्रकृतिदेखि **परः** अर्थात् माथि हुनुहुन्छ। **हंस** अर्थात् जीवात्माहरू आ–आफ्नो कर्मका फलहरूको सधैँ चाहना गरिरहन्छन्। अत्यन्त लोभी हुने हुनाले जीवहरूलाई यहाँ **गृध्राण** भनिएको हो। **सुरेतसा** अर्थात् आफ्नो ज्ञानशक्तिद्वारा आफूले नै रचना गरेका प्राणीका अन्तःकरणभित्र पसेर उनीहरूका सम्पूर्ण कर्म र कर्मफललाई परमात्मा हेरिरहनुहुन्छ। **नृषद्रिङ्गिराम्** शब्दको व्युत्पत्ति यसप्रकार गरिएको छ– **नृषु सीदति उपाधितया प्रविशति इति नृषद् बुद्धिः, तस्यां रिङ्गिं रिङ्गणं गतिं, राति ददाति इति नृषद्रिङ्गिराम्,** नृ अर्थात् जीवात्माहरूको उपाधिरूप जुन बुद्धि छ त्यसलाई प्रेरणा दिने परमात्मा भन्ने यस पदको अर्थ हो। त्यस्ता परमात्माको शरणमा **इमः** अर्थात् जान्छौँ भनी यहाँ प्रार्थना गरिएको छ। यस श्लोकमा प्रकारान्तरले गायत्री मन्त्रको अर्थ बताइएको छ। यस मन्त्रद्वारा वेदमा अधिकार नहुनेले पनि परमात्माको उपासना गर्न सक्छन्।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां पञ्चमस्कन्धे**

**भरतचरिते भगवत्परिचर्यायां सप्तमोऽध्यायः॥ ७॥**

# अथ अष्टमोऽध्यायः

## मृगको मोहमा फसेर भरतको मृगयोनिमा जन्म

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एकदा तु महानद्यां कृताभिषेकनैयमिकावश्यको ब्रह्माक्षरमभिगृणानो मुहूर्तत्रयमुदकान्त उपविवेश ॥ १ ॥**

**पदार्थ–**
**एकदा** = कुनै एक दिन
**तु** = त
**महानद्यां** = महानदी गण्डकीमा
**कृताभिषेकनैयमिकावश्यकः** = स्नान एवं नित्य नैमित्तिक आदि आवश्यक कर्म गरेका (राजा भरत)
**ब्रह्माक्षरम्** = ब्रह्म अक्षर ॐकारलाई
**अभिगृणानः** = जप गर्दै
**मुहूर्तत्रयम्** = तीन मुहूर्तसम्म
**उदकान्ते** = नदीको तीरमा
**उपविवेश** = बसे

**वाक्यार्थ–** परमभक्त ती भरत एकदिन गण्डकी नदीमा स्नान गरी आफ्ना नित्य, नैमित्तिक सम्पूर्ण कर्महरू समाप्त गरेर ॐकारको जप गर्दै नदीको किनारमा तीन मुहूर्त (२ घण्टा २४ मिनेट)सम्म बसिरहेका थिए।

**तत्र तदा राजन् हरिणी पिपासया जलाशयाभ्याशमेकैवोपजगाम ॥ २ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**तदा** = त्यस वेला
**तत्र** = त्यहाँ
**एका एव** = एउटी मात्रै
**हरिणी** = हरिणी
**पिपासया** = तिर्खाले व्याकुल भएर
**जलाशयाभ्याशम्** = नदीको तीरमा
**उपजगाम** = आइपुगी

**वाक्यार्थ–** त्यही समयमा तिर्खाले व्याकुल भएकी एउटी हरिणी पानी खानका लागि एक्लै त्यसै नदीको तीरमा आइपुगी।

**तया पेपीयमान उदके तावदेवाविदूरेण नदतो मृगपतेरुन्नादो लोकभयङ्कर उदपतत् ॥ ३ ॥**

**पदार्थ–**
**तया** = ती हरिणीले
**उदके** = पानी
**पेपीयमाने** = पिउँदापिउँदै
**तावत् एव** = त्यसै बखतमा
**अविदूरेण** = त्यहीं नजिकैबाट
**नदतः** = गर्जंदै गरेको
**मृगपतेः** = सिंहको
**लोकभयङ्करः** = लोकलाई तर्साउने
**उन्नादः** = ठुलो आवाज
**उदपतत्** = आयो

**वाक्यार्थ–** ती हरिणीले पानी पिउँदै गर्दा नजिकैबाट सिंहको अत्यन्त डरलाग्दो आवाज आयो।

**तमुपश्रुत्य सा मृगवधूः प्रकृतिविक्लवा चकितनिरीक्षणा सुतरामपि हरिभयाभिनिवेशव्यग्रहृदया पारिप्लवदृष्टिरगततृषा भयात् सहसैवोच्चक्राम ॥ ४ ॥**

**पदार्थ–**
**तम्** = त्यो (भयङ्कर सिंहनाद)
**उपश्रुत्य** = सुनेर
**प्रकृतिविक्लवा** = स्वभावैले व्याकुल चित्त भएकी
**चकितनिरीक्षणा** = डरले काँतर आँखा भएकी
**हरिभयाभिनिवेशव्यग्रहृदया** = सिंहको त्रासले व्याकुल मन भएकी
**पारिप्लवदृष्टिः** = आँखा चारैतर्फ घुमाएकी
**अगततृषा** = पानी पिएर पूरा प्यास नमेटिएकी
**सा मृगवधूः** = त्यो हरिणी
**अपि** = पनि
**सुतराम्** = अत्यन्त
**भयात्** = डरले गर्दा
**सहसा एव** = तत्कालै (नदीपारि पुग्नको लागि)
**उच्चक्राम** = उफ्रेर हाम्फाली

**वाक्यार्थ–** नजिकैबाट आएको त्यो डरलाग्दो सिंहनाद सुनेर स्वभावैले काँतर र चञ्चल आँखा भएकी त्यो हरिणी अत्यन्त डराएर तिर्खा नमेटिए पनि नदीपारि पुग्नको लागि तत्काल उफ्रेर पानीमा हाम्फाली।

**तस्या उत्पतन्त्या अन्तर्वत्न्या उरुभयावगलितो योनिनिर्गतो गर्भः स्रोतसि निपपात ॥ ५ ॥**

**पदार्थ–**
**उत्पतन्त्याः** = उफ्रने भएकी
**अन्तर्वत्न्याः** = गर्भिणी
**तस्याः** = त्यो हरिणीको
**उरुभयावगलितः** = ज्यादै डरको कारणले ठाउँबाट विचलित भएको र
**योनिनिर्गतः** = योनिबाट बाहिर निस्किएको
**गर्भः** = गर्भरूप पाठो
**स्रोतसि** = नदीको प्रवाहमा
**निपपात** = खस्यो

**वाक्यार्थ–** उफ्रनाले र ज्यादै डरले गर्दा गर्भाशयबाट सरेर योनिबाट बाहिर निस्किएको त्यस गर्भिणी हरिणीको पाठो नदीको प्रवाहमा खस्यो।

**तत्प्रसवोत्सर्पणभयखेदातुरा स्वगणेन वियुज्यमाना कस्याञ्चिद्दर्यां कृष्णसारसती निपपाताथ च ममार ॥ ६ ॥**

**तत्प्रसवोत्सर्पणभयखेदातुरा** = प्रसववेदना, हाम्फाल्दाको धपेडी तथा सिंहनादको त्रासले अत्यन्त व्याकुल भएकी
**स्वगणेन** = आफ्नो समूहबाट
**वियुज्यमाना** = छुटेकी
**कृष्णसारसती** = ती कृष्णसार मृगको पोथी (हरिणी)
**कस्याञ्चित्** = कुनै
**दर्यां** = गुफामा
**निपपात** = वेदनाको तोडमा पुगेर ढली र
**अथ च** = त्यसपछि
**ममार** = मरी

**वाक्यार्थ–** प्रसववेदना, हाम्फाल्दाको धपेडी तथा सिंहको आक्रमणको डरले अत्यन्त थाकेकी र

आफ्नो समूहबाट छुटेकी त्यो हरिणी त्यस वेदनाको तोडमा कुनै गुफामा पुगेर ढली र त्यहीं मरी।

**तं त्वेणकुणकं कृपणं स्रोतसानूह्यमानमभिवीक्ष्यापविद्धं बन्धुरिवानुकम्पया राजर्षिर्भरत आदाय मृतमातरमित्याश्रम-पदमनयत्॥ ७॥**

**पदार्थ–**
**स्रोतसा** = नदीको प्रवाहले
**अनूह्यमानम्** = बगाउँदै गरेको
**अपविद्धं** = आफन्तबाट छुटेको
**कृपणं** = अत्यन्त दुःखी
**एणकुणकं तु** = मृगको पाठोलाई चाहिँ
**अभिवीक्ष्य** = देखेर
**राजर्षिः भरतः** = राजर्षि भरतले
**बन्धुः इव** = बान्धवले झैँ
**अनुकम्पया** = अति दयाले
**तं** = त्यस पाठोलाई
**आदाय** = लिएर
**मृतमातरम् इति** = आमा मरेको टुहुरो भन्ने ठानेर
**आश्रमपदम्** = आफ्नो आश्रममा
**अनयत्** = लगे

**वाक्यार्थ–** नदीको प्रवाहमा बग्दै गरेको, आमा मरेकाले टुहुरो बनेको दुःखी मृगको पाठोलाई दयालु राजर्षि भरतले आफू त्यस पाठोको आफन्त जस्तै बनेर अति दयाले गर्दा उसलाई आश्रममा लिएर आए।

**तस्य ह वा एणकुणक उच्चैरेतस्मिन् कृतनिजाभिमानस्या-हरहस्तत्पोषणपालनलालनप्रीणनानुध्यानेनात्मनियमाः सहयमाः पुरुषपरिचर्यादय एकैकशः कतिपयेनाहर्गणेन वियुज्यमानाः किल सर्व एवोदवसन्॥ ८॥**

**पदार्थ–**
**एतस्मिन्** = त्यो
**एणकुणके** = कृष्णसारको पाठामा
**ह वा** = निश्चय नै
**उच्चैः** = अतिशय
**कृतनिजाभिमानस्य** = मेरो भन्ने ममत्वको अभिमान बढ्दै गएका
**तस्य** = ती राजर्षि भरतको
**अहरहः** = दिनदिनै
**तत्पोषणपालनलालनप्रीणना-नुध्यानेन** = त्यही मृगको पाठालाई खुवाउने, पियाउने, रक्षा गर्ने आदि काममा ध्यान दिनाले
**सहयमाः** = यम, नियम आदि आफ्ना साधनहरू र
**पुरुषपरिचर्यादयः** = भगवान्‌को पूजा, आराधनासमेत
**एकैकशः** = एकएक ओटा
**आत्मनियमाः** = आफ्ना नियमहरू
**कतिपयेन** = केही
**अहर्गणेन** = दिनपछि
**वियुज्यमानाः** = बिस्तारै छुट्दै छुट्दै
**किल** = निश्चित रूपमा
**सर्वे एव** = सम्पूर्ण नियमहरू नै
**उदवसन्** = छुटेर गए

**वाक्यार्थ–** त्यस मृगको अनाथ पाठोमाथि बिस्तारै-बिस्तारै भरतको मोह र ममता बढ्दै गयो। त्यसलाई खुवाउने, पियाउने र रक्षा गर्ने आदि काममा उनी ध्यान दिन थाले, यसले गर्दा उनका यम, नियम, भगवत्पूजा आदि नित्य कर्महरू दिनदिनै अलिअलि घट्दै गएर अन्तमा सबै छुटे।

**अहो बतायं हरिणकुणकः कृपण ईश्वररथचरणपरिभ्रमणरयेण स्वगणसुहृद्बन्धुभ्यः परिवर्जितः शरणं च मोपसादितो मामेव मातापितरौ भ्रातृज्ञातीन्यौथिकांश्चैवोपेयाय नान्यं कञ्चन वेद मय्यतिविस्रब्धश्चात एव मया मत्परायणस्य पोषणपालनप्रीणन-लालनमनसूयुनानुष्ठेयं शरण्योपेक्षादोषविदुषा ॥ ९ ॥**

**पदार्थ–**
**अहो** = आश्चर्य
**बत** = कठै
**अयं** = यो
**कृपणः** = दुःखी
**हरिणकुणकः** = हरिणको पाठो
**ईश्वररथचरणपरिभ्रमणरयेण** = कालचक्रको घुमाइको वेगले
**स्वगणसुहृद्बन्धुभ्यः** = आफ्नो समूह, साथी र दाजुभाइबाट
**परिवर्जितः** = छुटेर आएको
**मा च** = मेरो नै
**शरणं** = शरणमा
**उपसादितः** = प्राप्त भएको छ
**माम् एव** = मलाई नै
**मातापितरौ** = आमाबाबु
**भ्रातृज्ञातीन्** = भाइबन्धु र
**यौथिकान्** = समूहका सखीहरू
**च एव** = पनि
**उपेयाय** = मानेर
**अन्यं** = अरू
**कञ्चन** = कसैलाई
**न वेद** = जानेको पनि छैन
**मयि** = ममा
**अतिविस्रब्धः च** = अत्यन्त विश्वास गरेको पनि छ
**अतः एव** = त्यसैले
**शरण्योपेक्षादोषविदुषा** = शरणमा परेकोलाई उपेक्षा गर्दा लाग्ने दोष बुझेको
**मया** = मैले
**अनसूयुना** = यसको सेवामा लाग्दा म नियमबाट चुक्छु कि भन्ने चिन्तालाई वास्तै नगरी
**मत्परायणस्य** = मेरो शरणमा परेको यो मृगको
**पोषणपालनप्रीणनलालनम्** = लालनपालन र पोषण
**अनुष्ठेयं** = गर्नै पर्दछ

**वाक्यार्थ–** (यसै क्रममा ती तपस्वी भरतले सोच्न लागे) अहो ! यो आश्चर्यको कुरा हो, यो बिचरो दुःखी हरिणको पाठोलाई कालचक्रको वेगले आफ्नो बथान, साथी र बन्धुबान्धवदेखि बिछोड गराएर मेरो शरणमा ल्याइपुऱ्याएको छ। यसले मलाई नै आफ्ना आमाबाबु, भाइ-बन्धु, साथी-सङ्गी सम्झिएको छ। मबाहेक अरू कसैलाई पनि नचिनेको यसले ममाथि ठुलो विश्वास गरेको छ। शरणागतको उपेक्षा गर्नाले ठुलो दोष लाग्दछ भन्ने कुरा मैले जानेको छु, अतः मैले ममा आश्रित यो हरिणको पाठोको अत्यन्त सावधान भएर राम्रोसँग पालनपोषण गर्नुपर्दछ।

**नूनं ह्यार्याः साधव उपशमशीलाः कृपणसुहृद एवंविधार्थे स्वार्थानपि गुरुतरानुपेक्षन्ते ॥ १० ॥**

**पदार्थ–**
**नूनं हि** = निश्चय नै
**उपशमशीलाः** = विरक्तिएका भए पनि
**कृपणसुहृदः** = दीन, दुःखीलाई दया गर्ने
**आर्याः** = पूज्य
**साधवः** = सज्जनहरू
**एवंविधार्थे** = यस्तो परोपकारको सम्बन्धमा
**गुरुतरान्** = आफ्ना महत्त्वपूर्ण
**स्वार्थान्** = स्वार्थहरूलाई

**अपि** = पनि
**उपेक्षन्ते** = उपेक्षा गरिदिन्छन्

**वाक्यार्थ–** शान्त स्वभाव भएका र दीन-दुःखीहरूको रक्षा गर्ने परोपकारी सज्जनहरू यस्ता शरणमा आएकाहरूको रक्षाका लागि आफ्ना ठुला-ठुला स्वार्थको समेत वास्ता गर्दैनन्।

**इति कृतानुषङ्ग आसनशयनाटनस्थानाशनादिषु सह मृगजहुना**
**स्नेहानुबद्धहृदय आसीत्॥ ११॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**कृतानुषङ्गः** = हरिणको पाठोमा आसक्ति बढेका भरतको
**मृगजहुना सह** = मृगको पाठाको साथमा
**आसनशयनाटनस्थानाशनादिषु** = बस्दा, सुत्दा, घुम्दा, केही नगरी बस्दा र खाँदा पनि
**स्नेहानुबद्धहृदयः** = सधैँ चित्त मृगपाठाको स्नेहपाशमा बाँधिएको
**आसीत्** = थियो

**वाक्यार्थ–** यसप्रकारले हरिणको पाठोमा आसक्त बनेका भरतको चित्त बस्दा, सुत्दा, घुम्दा, केही नगरी बस्दा र खाँदा पनि त्यसैमा लागिरह्यो।

**कुशकुसुमसमित्पलाशफलमूलोदकान्याहरिष्यमाणो वृकसाला-**
**वृकादिभ्यो भयमाशंसमानो यदा सह हरिणकुणकेन वनं**
**समाविशति॥ १२॥**

**पदार्थ–**
**यदा** = जुन वेला
**कुशकुसुमसमित्पलाशफल-मूलोदकानि** = कुश, फूल, समिधा, पात, फल, कन्दमूल, जल आदि कुरा
**आहरिष्यमाणः** = ल्याउन जाँदा
**वृकसालावृकादिभ्यः** = ब्वाँसो, कुकुर आदिबाट
**भयम्** = डरको
**आशंसमानः** = आशङ्का गर्दै
**हरिणकुणकेन** = त्यही हरिणको पाठोको
**सह** = साथमा
**वनं** = वनमा
**समाविशति** = जान्थे

**वाक्यार्थ–** कुश, फूल, समिधा, पत्र, फल, कन्दमूल, जल आदि लिन वन जाँदा पनि ब्वाँसो, कुकुर आदि आएर मार्छन् कि भन्ने डरले भरत त्यस पाठोलाई सँगै लिएर जाने गर्दथे।

**पथिषु च मुग्धभावेन तत्र तत्र विषक्तमतिप्रणयभरहृदयः कार्पण्यात्**
**स्कन्धेनोद्वहति एवमुत्सङ्ग उरसि चाधायोपलालयन्मुदं**
**परमामवाप॥ १३॥**

**पदार्थ–**
**पथिषु च** = बाटोमा पनि
**तत्र तत्र** = ठाउँ-ठाउँमा
**मुग्धभावेन** = लोभिएर
**विषक्तम्** = रोकिएको
मृगशावकलाई

| | | |
|---|---|---|
| **अतिप्रणयभरहृदयः** = अनुरक्त र दयालु हृदय भएका राजाले | **उद्वहति** = बोक्दथे | **उपलालयन्** = खेलाउँदै |
| **कार्पण्यात्** = अति मोहका कारण | **एवम्** = यसै गरी | **परमाम्** = अत्यन्त |
| **स्कन्धेन** = काँधैमा | **उत्सङ्गे** = काखमा र | **मुदं** = आनन्द |
| | **उरसि च** = छातीमा पनि | **अवाप** = प्राप्त गरे |
| | **आधाय** = राखेर | |

**वाक्यार्थ–** बाटामा कमलो घाँस आदि देखेर लोभिएर रोकिएको हरिणको पाठोलाई भरतले अत्यन्त मोह र प्रेमले आफ्नो काँधमा बोक्दथे। यसै गरी कहिले काखमा लिएर र कहिले छातीमा च्यापेर खेलाउँदा उनलाई अत्यन्त आनन्दको अनुभव हुन्थ्यो।

**क्रियायां निर्वर्त्यमानायामन्तरालेऽप्युत्थायोत्थाय यदैनमभिचक्षीत**
**तर्हि वाव स वर्षपतिः प्रकृतिस्थेन मनसा तस्मा आशिष आशास्ते**
**स्वस्ति स्ताद् वत्स ते सर्वत इति ॥ १४ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **क्रियायां** = नित्य, नैमित्तिक आदि कर्महरू | **यदा** = जुन बखतमा | **तस्मै** = त्यस हरिणशावकलाई |
| **निर्वर्त्यमानायाम्** = सम्पन्न गरिसकेपछि | **एनम्** = यो हरिणशावकलाई | **वत्स** = हे हरिणशावक |
| **अन्तराले** = बीच-बीचमा | **अभिचक्षीत** = हेर्थे | **ते** = तिम्रो |
| **अपि** = पनि | **तर्हि वाव** = त्यसै बखतमा | **सर्वतः** = सबै तर्फबाट |
| **उत्थाय उत्थाय** = जुरुक्क जुरुक्क उठेर | **सः** = ती | **स्वस्ति** = कल्याण |
| | **वर्षपतिः** = भारतवर्षका मालिक राजा भरत | **स्तात्** = होस् |
| | **प्रकृतिस्थेन** = निर्मल भएको | **इति** = यसप्रकार |
| | **मनसा** = चित्तले | **आशिषः** = आशीर्वादको |
| | | **आशास्ते** = कामना गर्थे |

**वाक्यार्थ–** ती भरत नित्य र नैमित्तिक कर्महरू सम्पन्न गरिसकेपछि र कहिलेकाहीँ बीच-बीचमा नै पनि उठेर त्यो हरिणशावकलाई हेर्ने गर्दथे। त्यस समयमा उनी 'हे हरिणशावक ! तिम्रो सबैतिरबाट कल्याण होस्' भनी निर्मल चित्तले आशीर्वाद दिने गर्दथे।

**विवरण–** मोहमा परेपछि मनुष्यहरूको विवेकशक्ति कसरी नष्ट हुन्छ भन्ने कुरा यहाँ देखाइएको छ। साधारण मृगको बच्चोमा पनि असाध्य ममता गर्नु भरतको पतन हुनुको मुख्य कारण हो। दया गर्नेहरूले त्यति धेरै आसक्ति गरिरहनु आवश्यक छैन। अरू उनले त परमपुरुष भगवान्को सेवा नै छुट्ने गरी मृगको लालन-पालन र अनुध्यानसमेत गरे। सामान्य रूपले पालनमात्र गर्नु पर्नेमा आफ्नो मुख्य कर्तव्य नै छुट्ने गरी यति धेरै काम गर्नु गलत थियो। मोहमा परेपछि मान्छेले शास्त्रका वचनहरूलाई पनि आफूअनुकूल बनाउन खोज्दछ। परोपकार गर्नु शास्त्रीय विधान हो तर आफ्ना सम्बन्धी प्रिय व्यक्तिहरूमाथि अधिक आसक्त भई 'म विना यिनीहरू बाँच्न सक्दैनन् किनकि म नै एकमात्र यिनीहरूको आश्रय हुँ। त्यसैले मैले यिनीहरूको लालनपालन गरेर ठूलो उपकार गर्दैछु' भनी सोच्नु मूर्खता मात्र हो। कर्तृत्वाभिमानले रहित भई गरिने दया जीवन्मुक्त

महात्माहरूको लक्षण हो तर म कर्ता हुँ भन्ने अभिमान बाँकी रहेका साधकहरूलाई चाहिँ दया, उपकार आदि सत्त्वगुणी वृत्तिहरू पनि त्रिगुणात्मक संसारमा बाँध्ने कारण नै बन्दछन्। त्यसैले कुनै पनि बहानामा अरूमा आसक्त भएर आफ्नो कर्तव्य बिर्सनु हुँदैन भन्ने भाव यहाँ प्रकट गरिएको छ।

**अन्यदा भृशमुद्विग्नमना नष्टद्रविण इव कृपणः सकरुणमतितर्षेण हरिणकुणकविरहविह्वलहृदयसन्तापस्तमेवानुशोचन् किल कश्मलं महदभिरम्भित इति होवाच ॥ १५ ॥**

**पदार्थ–**
**अन्यदा** = एक दिन
**भृशम्** = अत्यन्त
**उद्विग्नमनाः** = अधीर भएर
**नष्टद्रविणः इव** = आफूले कमाएको धन हराए झैँ
**कृपणः** = दुःखी भएर
**सकरुणम्** = अति स्नेहले युक्त भएर
**अतितर्षेण** = अति उत्कण्ठाले
**हरिणकुणकविरहविह्वलहृदय-सन्तापः** = हरिणको पाठोको विरहले विह्वल भएर हृदयमा सन्ताप लिएका भरत
**तम् एव** = त्यसैलाई
**अनुशोचन्** = सम्झिँदै
**किल** = निश्चय नै
**महत्** = ठुलो
**कश्मलं** = मोहमा
**अभरम्भितः** = प्राप्त भएर
**ह** = निश्चय नै
**इति** = यसो
**उवाच** = भन्न थाले

**वाक्यार्थ–** एक दिन कुनै कारणवश त्यो हरिणको पाठोलाई अगाडि नदेखेर ती भरत धन-सम्पत्ति नष्ट भएको व्यक्ति झैँ व्याकुल भएर अत्यन्त दुःख मान्दै त्यस हरिणको पाठोको विरहले अति सन्तप्त भए अनि करुणाले गर्दा अत्यन्त उत्कण्ठित हुँदै मोहमा परी दिक्दार भएर यसो भन्न थाले।

**अपि बत स वै कृपण एणबालको मृतहरिणीसुतोऽहो ममानार्यस्य शठकिरातमतेरकृतसुकृतस्य कृतविस्रम्भ आत्मप्रत्ययेन तदविगणयन् सुजन इवागमिष्यति ॥ १६ ॥**

**पदार्थ–**
**अहो** = आश्चर्य
**अपि बत** = के निश्चय नै
**सः वै** = त्यो
**कृपणः** = अत्यन्त दुःखी
**मृतहरिणीसुतः** = आमा मरेको
**एणबालकः** = हरिणको बच्चो
**शठकिरातमतेः** = ठग ब्याधाजस्तो क्रूर बुद्धि भएको
**अकृतसुकृतस्य** = पुण्यरहित
**अनार्यस्य** = दुर्जन
**मम** = मेरो
**आत्मप्रत्ययेन** = शुद्धचित्त भएकाले
**कृतविस्रम्भः** = विश्वासमा परेको त्यो मृगको बच्चा
**सुजनः इव** = सज्जन व्यक्ति झैँ
**तत्** = त्यो गल्तीको
**अविगणयन्** = वास्तै नगरी
**आगमिष्यति** = (के विश्वास गरेर फेरि) आउला

**वाक्यार्थ–** अहो ! त्यो दुःखी टुहुरो हरिणको पाठो ब्याधाको जस्तो क्षुद्र बुद्धि भएको पुण्यहीन म अनाथलाई विश्वास गरेर फेरि मकहाँ फर्केर आउला के ?

**अपि क्षेमेणास्मिन्नाश्रमोपवने शष्पाणि चरन्तं देवगुप्तं द्रक्ष्यामि ॥ १७ ॥**

**पदार्थ—**
**अपि** = के
**अस्मिन्** = यही
**आश्रमोपवने** = आश्रमको बगैँचामा
**क्षेमेण** = कल्याणपूर्वक
**शष्पाणि** = कलिलो घाँस
**चरन्तं** = चर्दै गरेको
**देवगुप्तं** = ईश्वरले रक्षा गरेको त्यो मृगको पाठोलाई
**द्रक्ष्यामि** = देख्न पाउँला

**वाक्यार्थ—** के अब म फेरि त्यो हरिणको बच्चोलाई आश्रमको बगैँचामा भगवान्को कृपाले सुरक्षित भएर निर्विघ्नतापूर्वक कलिलो घाँस चर्दै गरेको देख्न पाउँला त ?

**अपि च न वृकः सालावृकोऽन्यतमो वा नैकचर एकचरो वा भक्षयति ॥ १८ ॥**

**पदार्थ—**
**अपि च** = के ?
**वृकः** = ब्वाँसो
**सालावृकः** = कुकुर
**अन्यतमः वा** = वा अरू कुनै
**नैकचरः** = एक्लै नहिँडी समूहमा हिँड्ने बँदेल आदिले
**एकचरः वा** = अथवा एक्लै हिँड्ने बाघ आदिले
**न भक्षयति** = खाई त सकेनन्

**वाक्यार्थ—** कुनै ब्वाँसो, कुकुर अथवा अरू कुनै समूहमा हिँड्ने बँदेल आदि वा एक्लै हिँड्ने बाघ आदिले त्यसलाई खाई त सकेनन् ?

**निम्लोचति ह भगवान् सकलजगत्क्षेमोदयस्त्रय्यात्माद्यापि मम न मृगवधून्यास आगच्छति ॥ १९ ॥**

**पदार्थ—**
**ह** = अत्यन्त दुःखको कुरा छ
**सकलजगत्क्षेमोदयः** = सम्पूर्ण लोककल्याणको लागि उदाउने
**त्रय्यात्मा** = वेदस्वरूप
**भगवान्** = ऐश्वर्यशाली भगवान् सूर्य
**निम्लोचति** = अस्ताउन लागिसक्नुभयो (तर)
**मम** = मेरो
**मृगवधून्यासः** = मृगीको नासो
**अद्य अपि** = अहिलेसम्म पनि
**न आगच्छति** = आएको छैन

**वाक्यार्थ—** अहो ! दुःखको कुरा, सम्पूर्ण जगत्को कल्याण गर्नका लागि उदाउनुभएको वेदस्वरूप सूर्य भगवान् समेत अस्ताउन लागिसक्नुभयो तर मृगीको नासो त्यो पाठो अहिलेसम्म पनि आइपुगेको छैन !

**अपि स्विदकृतसुकृतमागत्य मां सुखयिष्यति हरिणराजकुमारो विविधरुचिरदर्शनीयनिजमृगदारकविनोदैरसन्तोषं स्वानामपनुदन् ॥ २० ॥**

**पदार्थ—**
**अपि स्वित्** = के पक्कै पनि
**विविधरुचिरदर्शनीयनिजमृग-**

**दारकविनोदैः** = विभिन्न प्रकारको मनोहर र दर्शनीय हरिणका बच्चाहरूले गर्ने खेलहरूद्वारा
**स्वानाम्** = आफन्त भएका हामीहरूको
**असन्तोषम्** = दुःखलाई
**अपनुदन्** = हटाउँदै
**हरिणराजकुमारः** = हरिणको राजकुमारले
**आगत्य** = यहाँ आएर
**अकृतसुकृतम्** = पुण्य नगरेको
**मां** = म भरतलाई
**सुखयिष्यति** = सुख देला

**वाक्यार्थ—** के त्यो हरिणकुमारले पुण्यहीन मेरा नजिक आएर हरिणका बच्चाले गर्ने नाना प्रकारका मनोहर र दर्शनीय क्रीडाहरू गरेर मलाई फेरि आनन्दित पार्ला त ?

**क्ष्वेलिकायां मां मृषासमाधिनामीलितदृशं प्रेमसंरम्भेण चकितचकित आगत्य पृषदपरुषविषाणाग्रेण लुठति ॥ २१ ॥**

**पदार्थ—**
**मृषासमाधिना** = समाधिको बहानाले
**आमीलितदृशं** = केही आँखा चिम्लिएको जस्तो गर्ने
**मां** = मलाई
**क्ष्वेलिकायां** = क्रीडावस्थामा
**प्रेमसंरम्भेण** = प्रेमपूर्ण रिसका कारण
**चकितचकितः** = अत्यन्त पुलकित हुँदै
**आगत्य** = नजिकै आएर
**पृषदपरुषविषाणाग्रेण** = जलबिन्दु जस्तो कोमल सिङको टुप्पाले
**लुठति** = हान्ने वा सिङ कन्याउने गर्ला त

**वाक्यार्थ—** समाधिको बहानाले आँखा चिम्लिएको जस्तो गर्ने मलाई त्यो मृगशावकले खेल्ने क्रममा प्रेमपूर्ण रिसका कारण अत्यन्त पुलकित हुँदै के अब पनि नजिक आएर आफ्नो कोमल सिङको टुप्पाले हान्ने वा सिङ कन्याउने गर्ला त ?

**आसादितहविषि बर्हिषि दूषिते मयोपालब्धो भीतभीतः सपद्युपरतरास ऋषिकुमारवदवहितकरणकलाप आस्ते ॥ २२ ॥**

**पदार्थ—**
**आसादितहविषि** = हवन सामग्रीहरू राखिएका
**बर्हिषि** = कुशका आसन
**दूषिते** = चञ्चलताको कारण मुखले तानेर जुठो पारिदिँदा
**मया** = मद्वारा
**उपालब्धः** = हप्काइएको त्यो मृगशावक
**भीतभीतः** = अत्यन्त डराएर
**सपदि** = तत्कालै
**उपरतरासः** = आफ्ना क्रीडाहरूलाई पनि त्यागेर
**ऋषिकुमारवत्** = मानौँ ऋषिकुमार झैँ
**अवहितकरणकलापः** = इन्द्रिय आदि करणसमूहलाई संयमित गराएर (अलि पर गएर)
**आस्ते** = बस्दथ्यो

**वाक्यार्थ—** त्यो मृगशावकले जब कुशका आसनमा राखिएका हवन सामग्रीलाई मुखले तानेर अपवित्र पारिदिन्थ्यो र म उसलाई हप्काउँथे तब ऊ अत्यन्त डराएर उत्तिखेरै आफ्नो सबै चञ्चलता छाडेर अनुशासित ऋषिकुमार झैँ आफ्ना इन्द्रियलाई संयमित पारी अलि पर गएर बस्दथ्यो ।

**किं वा अरे आचरितं तपस्तपस्विन्यानया यदियमवनिः सविनय-कृष्णसारतनयतनुतरसुभगशिवतमाखरखुरपदपङ्क्तिभिर्द्रविणविधुरा-तुरस्य कृपणस्य मम द्रविणपदवीं सूचयन्त्यात्मानं च सर्वतः कृतकौतुकं द्विजानां स्वर्गापवर्गकामानां देवयजनं करोति ॥ २३ ॥**

**पदार्थ–**
**अरे** = अहो
**अनया** = यिनी
**तपस्विन्या** = तपस्विनी पृथिवीले
**किं वा** = कस्तो खालको
**तपः** = तपस्या
**आचरितं** = गरिन्
**यत्** = जो
**इयम्** = यिनी
**अवनिः** = पृथिवी
**सविनयकृष्णसारतनयतनुतर-सुभगशिवतमाखरखुरपदपङ्क्तिभिः** = विनीत कृष्णसार (हरिण) शावकको सानो-सानो अति राम्रो कल्याणकारक तथा अत्यन्त कोमल खुरयुक्त पदचिह्नद्वारा
**द्रविणविधुरातुरस्य** = मृगरूपी धन हराएर आतुर भएको
**कृपणस्य** = दुःखी
**मम** = मेरो
**द्रविणपदवीं** = मृगरूपी धन कता छ भन्ने कुराको
**सूचयन्ती** = सूचना गर्दै
**आत्मानं च** = आफूलाई पनि
**सर्वतः** = सबैतिरबाट
**कृतकौतुकं** = तिनै पदचिह्नद्वारा सबै किसिमले मङ्गलमय पार्दै
**स्वर्गापवर्गकामानां** = स्वर्ग तथा मोक्ष चाहने
**द्विजानां** = ब्राह्मणहरूको
**देवयजनं** = यज्ञीय भूमि
**करोति** = बनाउँछिन्

**वाक्यार्थ–** (यसरी कुटीभित्र धेरै चिन्ता गर्दै बाहिर आएर भुइँमा हरिणको खुरको चिह्न देखेर भरतले यसो भन्न लागे–) 'अहो ! यी पृथिवीमाताले यस्तो कुन तपस्या गरेकी रहिछन् ? जसले त्यो अति शिष्ट हरिणशावकका साना-साना अत्यन्त राम्रा र सुखकारी खुरका पङ्क्तिले, मृगरूपी धन हराएकाले व्याकुल बनेको मलाई त्यस वस्तु प्राप्तिको सूचना दिँदै आफ्नो शरीरलाई पनि ती चरणचिह्नले विभूषित गराई स्वर्ग तथा मोक्ष चाहने ब्राह्मणहरूको लागि पवित्र यज्ञभूमि बनाइरहेकी छन्। (कृष्णसार मृगको पादचिह्नद्वारा अङ्कित भएको भूमिलाई यज्ञीय भूमि भनिन्छ)

**अपि स्विदसौ भगवानुडुपतिरेनं मृगपतिभयान्मृतमातरं मृगबालकं स्वाश्रमपरिभ्रष्टमनुकम्पया कृपणजनवत्सलः परिपाति ॥ २४ ॥**

**पदार्थ–**
**अपि स्वित्** = के ?
**कृपणजनवत्सलः** = दुःखीमा दया राख्ने
**असौ** = यी
**भगवान्** = ऐश्वर्यशाली
**उडुपतिः** = नक्षत्रहरूका स्वामी (चन्द्रमाले)
**मृगपतिभयात्** = सिंहको डरले
**मृतमातरं** = आमा मरेको र
**स्वाश्रमपरिभ्रष्टम्** = आश्रमबाट पनि छाडिएको
**एनं** = यस
**मृगबालकं** = मृगशावकलाई
**अनुकम्पया** = अति दयाको कारण
**परिपाति** = रक्षा गरेका त होइनन्

**वाक्यार्थ–** (साँझमा चन्द्रोदयपछि चन्द्रमामा रहेको कालो धब्बालाई मृगको चिह्न जस्तो देखेर त्यसलाई लक्ष्य गर्दै भरत यसो भन्न लागे–) सिंहका डरका कारण आमा मरेकी र आश्रमबाट पनि बिछोडिएको त्यो दुःखी मृगशावकलाई नक्षत्रहरूका स्वामी दयालु चन्द्रमाले रक्षा गरिराखेका त होइनन् ?

**किं वात्मजविश्लेषज्वरदवदहनशिखाभिरुपतप्यमानहृदयस्थल-नलिनीकं मामुपसृतमृगीतनयं शिशिरशान्तानुरागगुणितनिजवदन-सलिलामृतमयगभस्तिभिः स्वधयतीति च ॥ २५ ॥**

**पदार्थ–**

**किं वा** = अथवा के ?
**आत्मजविश्लेषज्वरदवदहन-शिखाभिः** = पुत्रवियोगका सन्तापरूपी डढेलाको आगाको ज्वालाद्वारा
**उपतप्यमानहृदयस्थलनलिनीकं** = हृदयकमल डढेको
**उपसृतमृगीतनयं** = पुत्रको रूपमा मृगपुत्रलाई स्वीकारेको
**माम्** = म भरतलाई
**शिशिरशान्तानुरागगुणितनिज-वदनसलिलामृतमयगभस्तिभिः** = शीतल, शान्त र स्नेहमय आफ्ना अमृतमय किरणहरूद्वारा
**स्वधयति इति च** = मानौँ मलाई सेचन गरेर शान्त पारिरहेको छ ?

**वाक्यार्थ–** (फेरि चन्द्रमाको शीतल किरणले आनन्दित हुँदै भन्दछन्–) अथवा कतै हरिणको बच्चोको सहारामा बाँचेको मलाई पुत्रको वियोगरूप ज्वालाले पोलेको देखेर चन्द्रमाले दया गरेर आफ्नो शीतल, शान्त र स्नेहपूर्ण अमृतमय किरणले शान्त पारिरहेका त छैनन् ?

**एवमघटमानमनोरथाकुलहृदयो मृगदारकाभासेन स्वारब्धकर्मणा योगारम्भणतो विभ्रंशितः स योगतापसो भगवदाराधनलक्षणाच्च कथमितरथा जात्यन्तर एणकुणक आसङ्गः साक्षान्निःश्रेयस-प्रतिपक्षतया प्राक्परित्यक्तदुस्त्यजहृदयाभिजातस्य तस्यैवमन्तराय-विहतयोगारम्भणस्य राजर्षेर्भरतस्य तावन्मृगार्भकपोषणपालन-प्रीणनलालनानुषङ्गेणाविगणयत आत्मानमहिरिवाखुबिलं दुरतिक्रमः कालः करालरभस आपद्यत ॥ २६ ॥**

**पदार्थ–**

**एवम्** = यसरी
**अघटमानमनोरथाकुलहृदयः** = पूरा नहुने मनोरथले आकुल हृदय भएका
**मृगदारकाभासेन** = मृगशावकको रूपमा आएको
**स्वारब्धकर्मणा** = आफ्नै प्रारब्धकर्मद्वारा
**योगारम्भणतः** = योगसाधनाबाट र
**भगवदाराधनलक्षणात्** = भगवदाराधनरूप कर्मबाट
**च** = पनि
**विभ्रंशितः** = खसेका

**सः** = ती
**योगतापसः** = योगी भरत
**इतरथा** = यदि आफ्नै प्रारब्धकर्म नै मृगशावकको रूपमा नआएको भए
**प्राक्** = पहिले
**साक्षान्निःश्रेयसप्रतिपक्षतया** = मोक्षको साक्षात् बाधक सम्झेर
**परित्यक्तदुस्त्यजहृदयाभिजातस्य** = त्याग्न कठिन आफ्ना औरस पुत्र आदिलाई समेत त्यागेर आएका
**तस्य** = ती राजर्षि भरतको
**जात्यन्तरे** = अर्को जाति भएको
**एणकुणके** = मृगको पाठामा
**आसङ्गः** = आसक्ति
**कथम्** = कसरी हुन्थ्यो ?
**एवम्** = यसरी
**अन्तरायविहतयोगारम्भणस्य** = मृगमा भएको आसक्तिरूप विघ्नद्वारा योगसाधन नष्ट भएको
**मृगार्भकपोषणपालनप्रीणनलालनानुषङ्गेण** = मृगशावकको लालन, पालन, पोषण आदिले गर्दा
**आत्मानम्** = आत्मचिन्तनलाई
**विगणयतः** = वास्तै नगरेका
**राजर्षेः भरतस्य** = राजर्षि भरतको
**तावत्** = त्यतिखेर नै
**दुरतिक्रमः** = हजारौं उपायद्वारा पनि टार्न नसकिने
**करालरभसः** = भीषण वेगवान्
**कालः** = मृत्यु
**आखुबिलं** = मुसाको प्वालमा
**अहिः इव** = सर्प झैं
**आपद्यत** = आइपुग्यो

**वाक्यार्थ–** हे राजा ! यसप्रकार पुरा हुन असम्भव विभिन्न किसिमका कामनाले भरतको चित्त अत्यन्त व्याकुल हुन लाग्यो। मृगशावकको रूप धारण गरेर आएको आफ्नै प्रारब्धका कारण योगी भरत योगानुष्ठानदेखि भ्रष्ट भए। यसो नहुँदो हो त सम्पूर्ण राज्यसम्पत्ति र सन्ततिलाई समेत त्यागेर मोक्षमार्गमा लागेका उनको विजातीय हरिणको पाठोमा अकस्मात् यस्तो आसक्ति कसरी हुन सक्दथ्यो ? यसरी राजर्षि भरतले मृगमा भएको आसक्तिरूप विघ्नद्वारा योगसाधनदेखि भ्रष्ट भई तुच्छ हरिणको पाठाको पालनपोषणमा लागेर आफ्नो लक्ष्य आत्मचिन्तलाई बिर्सिदिए। यसै समयमा कसैले टारेर टार्न नसकिने भीषण वेगवान् काल मुसाको दुलोमा सर्प पसे झैं उनीसामु आइपुग्यो।

**तदानीमपि पार्श्ववर्तिनमात्मजमिवानुशोचन्तमभिवीक्षमाणो मृग एवाभिनिवेशितमना विसृज्य लोकमिमं सह मृगेण कलेवरं मृतमनु न मृतजन्मानुस्मृतिरितरवन्मृगशरीरमवाप ॥ २७ ॥**

**पदार्थ–**
**तदानीम्** = मृत्युको समयमा
**अपि** = पनि
**पार्श्ववर्तिनम्** = नजिकै रहेको
**अनुशोचन्तम्** = ज्यादै शोक गरिरहेको
**आत्मजम् इव** = आफ्नै छोरालाई झैं
**अभिवीक्षमाणः** = हेर्दै
**मृगे** = मृगमा
**एव** = नै
**अभिनिवेशितमना** = चित्त स्थिर गराएर
**मृगेण सह** = मृगसँगै
**इमं लोकम्** = यो पृथ्वीलोकलाई
**विसृज्य** = त्यागेर
**कलेवरं** = शरीर
**मृतम् अनु** = मरिसकेपछि पनि
**न मृतजन्मानुस्मृतिः** = पूर्वजन्मको स्मृति भने नष्ट नभई
**इतरवत्** = सामान्य मानिसको जस्तै
**मृगशरीरम्** = मृगको शरीर
**अवाप** = प्राप्त गरे

**वाक्यार्थ–** उनको मृत्युको समयमा समेत त्यो हरिणको बच्चो नजिकै बसेर छोराले झैँ शोक गरिरहेको थियो। अन्त समयमा पनि त्यसैलाई हेरिरहेकाले उनको चित्त त्यही मृगमा लागेको थियो। यसप्रकारको आसक्तिमा देह त्याग गरेकाले अन्तकालको भावनाअनुसार उनले पनि अन्य साधारण मानिसले जस्तै अर्को जन्ममा मृगकै शरीर पाए तर उनको पूर्वजन्मको स्मृति भने नष्ट भएन।

**विवरण–** पुनर्जन्मको सिद्धान्त वैदिक ऋषिहरूद्वारा अन्वेषण गरिएको विषय हो। जसरी बीजबाट वृक्ष बन्दछ, त्यस वृक्षमा फल लाग्दछ, बीज बन्दछ र त्यो बीजबाट फेरि अर्को नयाँ वृक्ष उम्रन्छ त्यसै गरी मानिसको पनि जन्म र पुनर्जन्मको चक्र चलिरहन्छ भन्ने वैदिक सिद्धान्त हो। यो कुरा कठोपनिषद् (१/१/६)मा **सस्यमिव मर्त्यः पच्यते सस्यमिवाजायते पुनः** भनी उल्लेख गरिएको छ।

शरीर त्याग गर्ने वेलामा जीव जुन वस्तुमा आसक्त भएको हुन्छ अर्को जन्ममा त्यो जीव त्यही योनिमा जन्म लिन्छ भन्ने शास्त्रीय सिद्धान्त रहेको छ। श्रीमद्भगवद्गीता (८/६)मा भनिएको छ– **यं यं वापि स्मरन् भावं त्यजत्यन्ते कलेवरम्। तं तमेवैति कौन्तेय सदा तद्भावभावितः।** अर्थात् 'जुन जुन भावहरूको स्मरण गर्दै जीवहरू अन्तिम समयमा शरीर त्याग गर्दछन्, त्यही भावनाद्वारा पूर्ण हुनाले उनीहरू तिनैको जुनी प्राप्त गर्दछन्।' त्यसैले यहाँ मृगमा नै निरन्तर आसक्ति गरेका कारण तपस्वी भरत पनि अर्को जुनीमा मृग भएर जन्मिए।

**तत्रापि ह वा आत्मनो मृगत्वकारणं भगवदाराधनसमीहा-**
**नुभावेनानुस्मृत्य भृशमनुतप्यमान आह ॥ २८ ॥**

**पदार्थ–**
**तत्र** = त्यस मृगयोनिमा
**अपि** = पनि
**ह वा** = निश्चय नै
**भगवदाराधनसमीहानुभावेन** = भगवान्को सेवा, अनुष्ठान आदिको प्रभावले
**आत्मनः** = आफ्नो
**मृगत्वकारणं** = मृगयोनिमा प्राप्त हुनाको कारणलाई
**अनुस्मृत्य** = सम्झेर
**भृशम्** = बारम्बार
**अनुतप्यमानः** = दुःखी र चिन्तित हुँदै
**आह** = भन्थे

**वाक्यार्थ–** त्यस जन्ममा समेत पूर्वजन्मको श्रीहरि भगवान्को आराधनाको प्रभावद्वारा आफूले मृगशरीर पाउनाको कारण जानेर अत्यन्त पश्चात्ताप गर्दै उनले भन्न लागे।

**टिप्पणी–** योग साधनाको उत्कर्षमा पुगेपछि कारणवश साधकले शरीरत्याग गरे पनि उसमा पूर्वजन्मको स्मृति रहिरहन्छ, नष्ट हुँदैन। यस कुराको सङ्केत श्रीमद्भगवद्गीता (६/४३)मा गरिएको छ। भरत योगसाधनाको त्यो तहमा पुगिसकेका हुनाले उनले अर्को जन्ममा मृगको शरीर हुँदा पनि उनमा पूर्वजन्मको स्मृति रहिरहेको हो।

**अहो कष्टं भ्रष्टोऽहमात्मवतामनुपथाद् यद् विमुक्तसमस्तसङ्गस्य**
**विविक्तपुण्यारण्यशरणस्यात्मवत आत्मनि सर्वेषामात्मनां भगवति**

**वासुदेवे तदनुश्रवणमननसङ्कीर्तनाराधनानुस्मरणाभियोगेनाशून्य-सकलयामेन कालेन समावेशितं समाहितं कात्स्न्र्येन मनस्तत् तु पुनर्ममाबुधस्यारान्मृगसुतमनु परिसुस्राव ॥ २९ ॥**

**पदार्थ–**
**अहो** = आश्चर्य छ
**कष्टं** = खेदको कुरा छ
**अहम्** = म भरत
**आत्मवताम्** = धीरहरूको
**अनुपथात्** = मार्गबाट
**भ्रष्टः** = खसेँ
**यत्** = जो
**विमुक्तसमस्तसङ्गस्य** = सम्पूर्ण आसक्तिबाट मुक्त भएको
**विविक्तपुण्यारण्यशरणस्य** = जनसम्पर्करहित वनमा बसेको
**आत्मवतः** = आत्ममुखी भएर पनि
**अबुधस्य** = विवेक हराएको
**मम** = मेरो
**मनः** = मन
**सर्वेषाम्** = सम्पूर्ण
**आत्मनां** = प्राणीका
**आत्मनि** = अन्तर्यामी स्वरूप
**भगवति** = भगवान्
**वासुदेवे** = वासुदेवमा
**तदनुश्रवणमननसङ्कीर्तनाराधना-नुस्मरणाभियोगेन** = भगवान्कै लीलाकथाको श्रवण, मनन, सङ्कीर्तन, ध्यान आदि साधनद्वारा
**अशून्यसकलयामेन** = सधैँ भगवान्सँग सम्बन्धित गराएर
**कालेन** = लामो समयको प्रयासले
**समावेशितं** = भगवान्मैँ प्रवेश गराएको र
**कात्स्न्र्येन** = पूर्णरूपमा
**समाहितं** = शान्त बनाइसकेको
**तत् तु** = त्यो मन त
**पुनः** = फेरि अनायासमैँ
**आरात्** = नजिकबाट
**मृगसुतम् अनु** = मृगको पाठोको पछिल्तिर
**परिसुस्राव** = च्युत भएछ

**वाक्यार्थ–** अहो ! आश्चर्य र दुःखको कुरा, म त संयमशील धीरहरूको मार्गबाट भ्रष्ट भएँ। सबै प्रकारको आसक्तिलाई छाडेर मैले एकान्त र पवित्र वनको आश्रय लिएको थिएँ। त्यहाँ रहँदा मैले सम्पूर्ण प्राणीका मालिक भगवान् वासुदेवमा आफ्नो चित्त लगाई उहाँकै गुणको श्रवण, मनन, कीर्तन, आराधना र स्मरण गरेर सावधानीपूर्वक पूर्णरूपले मन लगाइराखेको थिएँ। भगवान् श्रीहरिमा दृढ भक्तिका साथ लगाएकाले शान्त बनेको मेरो मन अज्ञानले अकस्मात् फर्केर तुच्छ मृगको पाठामा लाग्न गएकाले मेरो मन त आफ्नो लक्ष्यबाट च्युत भएछ।

**इत्येवं निगूढनिर्वेदो विसृज्य मृगीं मातरं पुनर्भगवत्क्षेत्र-मुपशमशीलमुनिगणदयितं शालग्रामं पुलस्त्यपुलहाश्रमं कालञ्जरात् प्रत्याजगाम ॥ ३० ॥**

**पदार्थ–**
**इति एवं** = यसरी
**निगूढनिर्वेदः** = हृदयमा परमवैराग्य लुकाएका मृगस्वरूप राजर्षि भरत
**मृगीं** = मृगको रूपमा रहेकी
**मातरं** = आमालाई
**विसृज्य** = त्यागेर
**कालञ्जरात्** = आफ्नो जन्मस्थल कालञ्जर पर्वतबाट
**पुनः** = फेरि
**उपशमशीलमुनिगणदयितं** =

शान्तस्वभावका मुनिहरूद्वारा सेवित
**पुलस्त्यपुलहाश्रमं** = पुलस्त्य र पुलह ऋषिको आश्रम भएको
**शालग्रामं** = शालग्राम नामक
**भगवत्क्षेत्रम्** = भगवान्को क्षेत्रमा
**प्रत्याजगाम** = आए

**वाक्यार्थ–** यसप्रकार मृगशरीर धारण गरेका राजर्षि भरतले आफ्नो हृदयमा जागेको वैराग्य भावनालाई लुकाएर आफ्नी आमा हरिणीलाई त्यागेपछि आफ्नो जन्मभूमि कालञ्जर पर्वतबाट फर्की शान्त मुनिहरू रहने शालग्रामतीर्थ हरिहरक्षेत्रमा आएर पुलह र पुलस्त्य ऋषिको आश्रममा आए।

**तस्मिन्नपि कालं प्रतीक्षमाणः सङ्गाच्च भृशमुद्विग्न आत्मसहचरः**
**शुष्कपर्णतृणवीरुधा वर्तमानो मृगत्वनिमित्तावसानमेव गणयन्**
**मृगशरीरं तीर्थोदकक्लिन्नमुत्ससर्ज॥ ३१ ॥**

**पदार्थ–**
**तस्मिन्** = त्यो पुलहाश्रममा
**अपि** = पनि
**कालं** = मृत्युलाई
**प्रतीक्षमाणः** = प्रतीक्षा गरेर
**सङ्गात् च** = अरूको सङ्गतबाट
**भृशम्** = ज्यादै
**उद्विग्नः** = डराएका
**आत्मसहचरः** = एक्लै रहने
**शुष्कपर्णतृणवीरुधा** = सुकेका पात, घाँस, लहरा आदिद्वारा
**वर्तमानः** = प्राणधारण गरेर रहेका
**मृगत्वनिमित्तावसानम्** = मृगयोनि प्राप्त गराउने आफ्नो प्रारब्धकर्मको अन्त्यावस्थालाई
**एव** = नै
**गणयन्** = गणना गर्दै
**तीर्थोदकक्लिन्नम्** = नदीमा डुबाउनाले आधा भिजेको
**मृगशरीरं** = त्यो मृगशरीरलाई
**उत्ससर्ज** = त्यागिदिए

**वाक्यार्थ–** त्यहाँ बसेर पनि उनी कालको प्रतीक्षा गर्न थाले। आसक्तिदेखि अत्यन्त डराएर, एक्लै रहेर, सुकेका पात, घाँस, लहरा खाएर जीवन निर्वाह गर्दै उनी मृगयोनिको प्राप्ति गराउने प्रारब्धको क्षय हुने समयको प्रतीक्षा गर्न थाले। अन्तमा शरीरको आधा भाग नदीको जलमा डुबाएर बस्दाबस्दै उनले आफ्नो मृगशरीरलाई त्यागिदिए।

**विवरण–** भगवान्का अनन्य भक्तहरू पनि विषयमा आसक्ति गर्नाले कुन परिणतिमा पुग्छन् भन्ने देखाउन यो अध्यायभरि नै भरतको मृगशावकप्रतिको मोह र त्यसको परिणामको वर्णन गरिएको छ। भरतले पानीमा बगिरिहेको मृगशावकको उपकार गर्ने इच्छाले उसलाई आफ्नो आश्रममा लिएर आउनु अनि उपकार भावनाबाट बिस्तारै मोहतिर ढल्किँदै जानु भरतका पतनका प्रारम्भिक चरण हुन्। कसैको उपकार गर्नु राम्रो हो तर त्यसैमा आसक्ति गर्नु अनि उसैको पालन, पोषण, चिन्तन आदिमैं सबै समय बिताउनु राम्रो होइन। भरतले आसक्तिवश मृगको पोषण मात्र होइन, लालन, पालन र चिन्तनसमेत गरे। मान्छे मोहकै वशमा परी आफूलाई आश्रयदाता हुँ भनी ठान्दछ र आफ्नो परिवारपोषणको कर्तव्य पूरा गर्ने निहुँले मोहभावलाई बढाउँछ। आफ्नो काँधमा संसारको भारी बोक्न चाहने मान्छे शास्त्रको उपदेशलाई पनि आफ्नो अनुकूल बनाउँछ र सधैं मोहमा फसिरहन्छ।

कुश, समिधा, फल, जल आदि लिन जाँदा मृगको बच्चोलाई साथमा नै लिएर जानु, आफ्नो काँधमा र काखमा खेलाउँदा अत्यन्त खुसी हुनु, भगवान्को सेवालाई छाडी बीचबीचमा उठेर मृगको बच्चालाई हेर्नु, त्यत्ति मात्र नभई सारा संसारको भरणपोषण गर्ने परमात्मासँग एउटा सानो मृगको बच्चोलाई रक्षा गर्न सधैँ प्रार्थना गरिरहनु आदि भरतमा एकपछि अर्को गरी झन्–झन् बढिरहेको मोहका प्रमाण हुन्। कहिलेकाँही मृगको बच्चो नदेख्दा भरतले गरेका विलापहरू झन् अनौठा छन्। मृगशावक पछाडिबाट आई कोमल सिँगद्वारा आफूलाई घच्घच्याइरहेको कल्पनामा मस्त हुँदै भरतले चन्द्रमामा मृगको चिह्न देखी त्यसैलाई आफ्नो मृग ठानेका छन्। आफ्ना पुत्रहरूको छोड्नै नसकिने स्नेहलाई जसले पहिल्यै छाडिसकेको थियो त्यस्ता भरत पशुजातिमा आसक्त भई यति धेरै मोहित हुनु पक्कै पनि प्रबल प्रारब्धको परिणाम हो। योगको उन्नतिमार्गबाट एकचोटि खस्नै पर्ने प्रारब्ध नै मृगको निहुँ गरी उनलाई प्राप्त भएको थियो। त्यसैले उनी योगबाट भ्रष्ट भए र अर्को जन्ममा मृगशरीर लिएर जन्मे। जे भए तापनि भगवान्को सेवा खेर जाँदैन। अर्को जन्ममा मृगरूप भरत आफ्नी आमालाई छोडी आफ्ना बथानबाट छुट्टिई कालञ्जर पर्वतबाट फेरि गण्डकीको किनारमा आउँछन् र आधा शरीर गण्डकीको जलमा डुबाई निराहार बसिरहेर देहत्याग गर्दछन्।

अभिमान रहित भई गरिएका सात्त्विक कर्महरू चित्तशुद्धिद्वारा मोक्षका कारण हुन्छन्, तर तिनै कर्म अभिमानपूर्वक गरिंदा बन्धनका कारण हुन्छन्। ज्ञानीले संसारको उपकार गर्दै हिँड्छ तर अज्ञानी अवस्थामा भरतले गरेको परोपकार उनलाई फसाउने सात्त्विक गुण भएको छ। ज्ञानद्वारा गुणातीत भइसकेपछि व्यक्तिले गर्ने परोपकार र अज्ञानीले परोपकारको निहुँमा गर्ने मोहमा धेरै भिन्नता छ भनेर देखाउनु भरतचरित्रको तात्पर्य हो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां पञ्चमस्कन्धे**

**भरतचरितेऽष्टमोऽध्यायः ॥ ८ ॥**

# अथ नवमोऽध्यायः

## भरतको ब्राह्मण कुलमा जन्म

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अथ कस्यचिद् द्विजवरस्याङ्गिरःप्रवरस्य शमदमतपःस्वाध्याया-ध्ययनत्यागसन्तोषतितिक्षाप्रश्रयविद्यानसूयात्मज्ञानानन्दयुक्तस्या-त्मसदृशश्रुतशीलाचाररूपौदार्यगुणा नव सोदर्याः अङ्गजा बभूवुर्मिथुनं च यवीयस्यां भार्यायाम् ॥ १ ॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**अङ्गिरःप्रवरस्य** = अङ्गिरस् गोत्रमा उत्पन्न भएका
**शमदमतपःस्वाध्यायाध्ययन-त्यागसन्तोषतितिक्षाप्रश्रयविद्या-नसूयात्मज्ञानानन्दयुक्तस्य** = शम, दप, तप, स्वाध्याय, त्याग, सन्तोष, सहनशीलता, विनय, विद्या, इर्ष्यारहितता, आनन्द र आत्मज्ञान आदि सम्पूर्ण गुणले युक्त
**कस्यचित्** = कुनै
**द्विजवरस्य** = ब्राह्मणकी (जेठी पत्नीमा)
**आत्मसदृशश्रुतशीलाचाररूपौ-दार्यगुणाः** = आफूजस्तै विद्या, शील, रूप, उदारता आदिले युक्त
**नव** = नौ ओटा
**सोदर्याः** = एकै गर्भबाट जन्मिएका
**अङ्गजाः** = छोराहरू
**बभूवुः** = उत्पन्न भए
**यवीयस्यां** = कान्छी
**भार्यायाम्** = श्रीमतीमा चाहिँ
**मिथुनं च** = जुम्ल्याहा छोराछोरी पनि (जन्मिए)

**वाक्यार्थ–** हे राजा ! अङ्गिरस् गोत्रमा जन्मिएका शम, दप, तप, स्वाध्याय, त्याग, सन्तोष, सहनशीलता, विनय, विद्या आदि सम्पूर्ण गुणले युक्त एक श्रेष्ठ ब्राह्मण थिए। ती ब्राह्मणकी जेठी पत्नीबाट आफूसमान विद्या, शील, आचार, रूप, उदारता आदि गुण भएका नौभाइ छोरा जन्मिए। कान्छी पत्नीबाट चाहिँ जुम्ल्याहा छोराछोरी जन्मिए।

**यस्तु तत्र पुमांस्तं परमभागवतं राजर्षिप्रवरं भरतमुत्सृष्टमृगशरीरं चरमशरीरेण विप्रत्वं गतमाहुः ॥ २ ॥**

**पदार्थ–**
**तत्र** = ती दुई छोराछोरीमा
**यः तु** = जो
**पुमान्** = पुरुषको रूपमा जन्मिए
**तं** = तिनीलाई नै
**परमभागवतं** = भगवान्का परमभक्त
**राजर्षिप्रवरं** = राजर्षिहरूमा श्रेष्ठ
**उत्सृष्टमृगशरीरं** = मृगको शरीर त्याग गरेका
**चरमशरीरेण** = अन्तिम स्वरूपमा
**विप्रत्वं गतम्** = ब्राह्मण शरीर प्राप्त गरेका
**भरतम्** = भरत हुन् भनेर
**आहुः** = (विद्वान्हरू) भन्दछन्

**वाक्यार्थ–** ती जुम्ल्याहामध्ये पुरुष चाहिँ मृगशरीर त्यागेर ब्राह्मणकुलमा जन्मिएका भगवान्का परमभक्त राजर्षि भरत थिए भनी विद्वान्हरू भन्दछन्।

**तत्रापि स्वजनसङ्गाच्च भृशमुद्विजमानो भगवतः कर्मबन्धविध्वंसनश्रवणस्मरणगुणविवरणचरणारविन्दयुगलं मनसा विदधदात्मनः प्रतिघातमाशङ्कमानो भगवदनुग्रहेणानुस्मृतस्वपूर्वजन्मावलिरात्मानमुन्मत्तजडान्धबधिरस्वरूपेण दर्शयामास लोकस्य ॥ ३ ॥**

**पदार्थ–**
**तत्र अपि** = त्यस जन्ममा पनि
**स्वजनसङ्गात् च** = आफन्तको संसर्गबाट पनि
**भृशम्** = ज्यादै
**उद्विजमानः** = डराउँदै
**मनसा** = मनै मनले
**भगवतः** = भगवान्को
**कर्मबन्धविध्वंसनश्रवणस्मरण-गुणविवरणचरणारविन्दयुगलं** = कर्मबन्धनलाई नाश पारिदिने खालको भगवत्कथाश्रवण, स्वरूपचिन्तन तथा चरणस्मरण
**विदधत्** = गर्दै
**आत्मनः** = आफ्नो
**प्रतिघातम्** = पहिलो जन्ममा झैँ फेरि जन्मनुपर्ने विघ्नलाई
**आशङ्कमानः** = विचार गर्दै
**भगवदनुग्रहेण** = भगवान्को अनुग्रहले
**अनुस्मृतस्वपूर्वजन्मावलिः** = आफ्नो पूर्वजन्मको सम्पूर्ण वृत्तान्त बुझेका भरतले
**लोकस्य** = सम्पूर्ण लोकका सामु
**आत्मानम्** = आफूलाई
**उन्मत्तजडान्धबधिरस्वरूपेण** = पागल, बौलाहा, अन्धो, बहिरो आदि विलक्षण रूप
**दर्शयामास** = देखाए

**वाक्यार्थ–** त्यस ब्राह्मण जन्ममा पनि भगवान्को कृपाले भरतले आफ्नो पूर्वजन्मको वृत्तान्त बिर्सिएका थिएनन्। त्यसैले भगवान्को आराधनामा विघ्न पर्ला कि भन्ने डरले आफन्तहरूसँगको सङ्गतदेखि पनि डराएर उनी अलगगै बस्दथे। जसको श्रवण, स्मरण र गुणकीर्तनले सबै प्रकारका कर्मबन्धनहरू छुट्दछन् त्यस्ता भगवान्का चरणकमललाई अति विरक्त भएर उनी सधैँ आफ्नो हृदयमा धारण गरिरहन्थे। त्यस समयमा उनले आफूलाई अरूका सामु पागल, मूर्ख, अन्धो र बहिरोको रूपमा प्रकट गरिरहेका थिए।

**तस्यापि ह वा आत्मजस्य विप्रः पुत्रस्नेहानुबद्धमना आसमावर्तनात् संस्कारान् यथोपदेशं विदधान उपनीतस्य च पुनः शौचाचमनादीन् कर्मनियमाननभिप्रेतानपि समशिक्षयदनुशिष्टेन हि भाव्यं पितुः पुत्रेणेति ॥ ४ ॥**

**पदार्थ–**
**तस्य** = त्यस्तो पागल जस्तो
**आत्मजस्य अपि** = छोराको पनि
**ह वा** = निश्चय नै
**पुत्रस्नेहानुबद्धमनाः** = पुत्रप्रति बराबर स्नेह भएका

**विप्रः** = ती ब्राह्मणले
**उपनीतस्य** = उपनयन संस्कार गरिसकेको त्यसलाई
**आसमावर्तनात्** = (विवाह बाहेकका) समावर्तनसम्मका
**संस्कारान्** = संस्कारहरू
**यथोपदेशं** = शास्त्रीय उपदेशबमोजिम
**विदधानः** = गर्दै
**पुनः च** = फेरि
**हि** = निश्चय नै
**पुत्रेण** = छोराले
**पितुः** = पिताबाट
**अनुशिष्टेन** = अनुशासित
**भाव्यं** = हुनै पर्दछ भन्ने
**इति** = यस्तो मर्यादा अनुरूप
**अनभिप्रेतान् अपि** = उसले जान्न नचाहे पनि
**शौचाचमनादीन्** = शौच, आचमन आदि
**कर्मनियमान्** = कर्मका नियमहरू
**समशिक्षयत्** = राम्रोसँग सिकाए

**वाक्यार्थ–** ती ब्राह्मणले पुत्रप्रेमका कारण त्यस पागल जस्तो छोराको पनि व्रतबन्ध आदि समावर्तनसम्मका सम्पूर्ण संस्कारहरू गरिदिए। छोरालाई कुनै कुरा जान्ने इच्छा नभए तापनि 'पिताबाट पुत्रले अनुशासन सिक्नै पर्दछ' भन्ने शास्त्रको आज्ञाअनुसार उनले ती जडभरतलाई शौच, आचमन आदि सबै आवश्यक कर्मनियमहरू सिकाए।

**स चापि तदु ह पितृसन्निधावेवासध्रीचीनमिव स्म करोति**
**छन्दांस्यध्यापयिष्यन् सह व्याहृतिभिः सप्रणवशिरस्त्रिपदीं सावित्रीं**
**ग्रैष्मवासन्तिकान् मासानधीयानमप्यसमवेतरूपं ग्राहयामास ॥ ५॥**

**पदार्थ–**
**सः च अपि** = ती आत्मनिष्ठ भरत पनि
**तदु ह** = निश्चय नै
**पितृसन्निधौ एव** = सिकाउने पिताजीकै समक्षमा नै
**असध्रीचीनम् इव** = विपरीत-खालको झैँ
**करोति स्म** = आचरण गर्दथे (पिताले पछि वर्षा ऋतु लागेपछि)
**छन्दांसि** = वेद
**अध्यापयिष्यन्** = पढाउने इच्छा गरेर
**व्याहृतिभिः** = व्याहृतिले
**सह** = सहित
**सप्रणवशिरस्त्रिपदीं** = ॐकार पादसहित तीन पाउ भएको
**सावित्रीं** = सावित्री (गायत्री) मन्त्र
**ग्रैष्मवासन्तिकान्** = वसन्त र ग्रीष्म ऋतुका
**मासान्** = चार महिनासम्म
**अधीयानम् अपि** = खुब पढाए पनि
**असमवेतरूपं** = नमिल्दो उच्चारण मात्रै
**ग्राहयामास** = सिकाउन सके (राम्ररी पढाउन सकेनन्)

**वाक्यार्थ–** बाबुले जति उपदेश गरे तापनि ती जडभरतले उनकै अगाडि उपदेशविरुद्धका व्यवहारहरू गर्न लागे। पछि वर्षाकालमा वेदाध्ययन गराउने विचारले वसन्त र ग्रीष्म ऋतुका चार महिनासम्म निरन्तर ॐकार र व्याहृतिसहित त्रिपदा गायत्रीको अध्ययन गराउँदा पनि उनको उच्चारण ठिक हुन सकेन। अर्थात् बाबुले उनलाई कति गर्दा पनि मन्त्रहरू राम्ररी सिकाउन सकेनन्।

**एवं स्वतनुज आत्मन्यनुरागावेशितचित्तः शौचाध्ययनव्रतनियम-**
**गुर्वनलशुश्रूषणाद्यौपकुर्वाणककर्माण्यनभियुक्तान्यपि समनुशिष्टेन**

**भाव्यमित्यसदाग्रहः पुत्रमनुशास्य स्वयं तावदनधिगतमनोरथः कालेनाप्रमत्तेन स्वयं गृह एव प्रमत्त उपसंहृतः ॥ ६ ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार जति प्रयास गरे पनि छोराले नजान्दा
**आत्मनि** = आत्मतुल्य
**स्वतनुजे** = आफ्नो पुत्रमा
**अनुरागावेशितचित्तः** = स्नेहको कारणले अनुरक्त भएका पिताले
**समनुशिष्टेन भाव्यम्** = पुत्रले पिताद्वारा अनुशासित हुनै पर्दछ भन्ने
**इति** = यस्तो
**असदाग्रहः** = दुराग्रहलाई स्विकार्दै
**अनभियुक्तानि अपि** = पुत्रले सिक्न मन नगर्दा पनि
**शौचाध्ययनव्रतनियमगुर्वनल-शुश्रूषणाद्यौपकुर्वाणककर्माणि** = शौच, वेदाध्ययन, व्रतपालन, नियम, गुरुसेवा, अग्निसेवा, आवधिक ब्रह्मचर्य पालन आदि कर्महरू
**पुत्रम्** = छोरालाई
**अनुशास्य** = सिकाएर
**स्वयं** = आफू
**प्रमत्तः** = स्वयं कर्तव्यबाट असावधान भएर
**तावत् अनधिगतमनोरथः** = छोरो पढे–लेखेर पण्डित बन्ला भन्ने मनोरथ पूरा नभईकन
**अप्रमत्तेन कालेन** = कहिल्यै टार्न नसकिने कालद्वारा (ती ब्राह्मण)
**गृहे एव** = घरमा नै
**उपसंहृतः** = मारिए

**वाक्यार्थ–** कुनै पनि कुरा सिकाउन नसक्दा–नसक्दै पनि अतिशय प्रेमले गर्दा ती ब्राह्मणले 'छोरालाई राम्रोसँग शिक्षा दिनु पिताको कर्तव्य हो' भन्ने सोचेर कर लगाई–लगाई केही पनि गर्न नचाहने छोरालाई शौच, वेदाध्ययन, व्रत, नियम, गुरु एवं अग्निको सेवा, आवधिक ब्रह्मचर्य पालन आदि आश्रमका आवश्यक नियमहरू सिकाउँथे तर छोरो सुशिक्षित भएको हेर्ने उनको धोको कसै गर्दा पनि पूरा भएन। अनावश्यक कर्ममा लागेकाले भगवान्को सेवा गर्ने उनको आफ्नो परम कर्तव्य पनि छुट्यो। यत्तिकैमा उनी टार्न नसकिने कालको पन्जामा परी मरे।

**अथ यवीयसी द्विजसती स्वगर्भजातं मिथुनं सपत्न्या उपन्यस्य स्वयमनुसंस्थया पतिलोकमगात् ॥ ७ ॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**यवीयसी** = कान्छी
**द्विजसती** = ब्राह्मणपत्नी
**स्वगर्भजातं** = आफ्नो गर्भबाट उत्पन्न भएका
**मिथुनं** = जोडी छोराछोरीलाई
**सपत्न्या** = सौताको हातमा
**उपन्यस्य** = राखेर (छोडेर)
**स्वयम्** = आफू
**अनुसंस्थया** = सती गएर
**पतिलोकम्** = पतिको लोकमा
**अगात्** = गइन्

**वाक्यार्थ–** उनकी कान्छी पत्नी पनि आफ्ना छोराछोरीलाई सौताको जिम्मामा सुम्पिएर पतिको साथमा सती गई पति गएकै लोकमा गइन्।

**पितर्युपरते भ्रातर एनमतत्प्रभावविदस्त्रय्यां विद्यायामेव पर्यवसितमतयो न परविद्यायां जडमतिरिति भ्रातुरनुशासन-निर्बन्धान्न्यवृत्सन्त ॥ ८ ॥**

**पदार्थ–**
**पितरि** = पिताजीको
**उपरते** = मृत्यु भइसकेपछि
**त्रय्यां** = ऋक्, यजु र साम तीन वेदमा (उल्लेख गरिएका कर्मसम्बन्धी)
**विद्यायाम्** = विद्यामा
**एव** = मात्रै
**पर्यवसितमतयः** = बुद्धि लागेका (कर्मलाई मात्र बुझेका, तर)
**न परविद्यायां** = पराविद्या वा ज्ञानमार्गलाई नबुझेका त्यसैले
**अतत्प्रभावविदः** = भरतको प्रभावलाई नबुझेका
**भ्रातरः** = अरू दाजुहरू
**एनम्** = यी भरतलाई
**जडमतिः इति** = जडबुद्धिवाला हो भन्ने सम्झेर
**भ्रातुः** = कान्छो भाइ भरतको
**अनुशासननिर्बन्धात्** = पिताजीले सिकाउने गरेको आचरण तथा अध्ययन आदिबाट
**न्यवृत्सन्त** = टाढै राख्न खोजे

**वाक्यार्थ–** बाबुको मृत्युपछि कर्मकाण्डलाई नै सर्वस्व सम्झी ब्रह्मज्ञानरूप पराविद्यामा अनभिज्ञ भएका कारण भरतको महत्त्व नबुझेका दाजुहरूले 'यो मूर्ख हो' भन्ने सम्झेर उनलाई कर्मानुशासन सिकाउने र पढाउने काम छोडिदिए।

**विवरण–** मुण्डकोपनिषद् (१/१/४)मा परा र अपरा गरी दुई विद्या बताइएको छ। अपरा विद्या भनेको चार वेद, चार उपवेद, छ वेदाङ्ग (शिक्षा, कल्प, व्याकरण, निरुक्त, छन्द र ज्योतिष) र चार उपाङ्ग (पुराण, न्याय, मीमांसा र धर्मशास्त्र) यी अष्टाङ्ग विद्याको ज्ञान हो। परा विद्या भनेको त्यो विद्या हो जसद्वारा अक्षर ब्रह्मको ज्ञान हुन्छ।

श्रीमद्भगवद्गीता (२/४५)मा वेद आदि समस्त शास्त्रहरू तीन गुणलाई बताउँछन् तर मुमुक्षुले तीन गुणभन्दा माथि पुग्नुपर्दछ भनी बताइएको छ। शास्त्रहरू यद्यपि ब्रह्मज्ञानकै उपदेश गर्छन् तर उपदेश गर्दा सत्त्वगुणसम्मलाई मात्र शब्दले भेट्न सक्छ, त्यसकारण ब्रह्मज्ञानलाई बताउने उपनिषद्वचनहरूको ज्ञान पनि अपरा विद्या मात्रै हो। म ब्रह्म हुँ भनी प्रत्यक्ष अनुभव गर्नु मात्र परा विद्या हो, जसले अज्ञानलाई समूल नष्ट गर्दछ। **अथ परा यया तदक्षरमधिगम्यते** (मुण्डकोपनिषद् १/१/५) अर्थात् जसले अक्षर तत्त्वको ज्ञान गराउँदछ त्यही परा विद्या हो। अपरा विद्या त अज्ञानकै कोटिको हो भन्ने शास्त्रको निष्कर्ष छ।

भरतले परा विद्या प्राप्त गरिसकेका थिए त्यसैले उनले आफ्ना पिता, र दाजुहरूले सिकाएको अपरा विद्यालाई वास्ता नगरेका हुन्।

**स च प्राकृतैर्द्विपदपशुभिरुन्मत्तजडबधिरमूकेत्यभिभाष्यमाणो यदा तदनुरूपाणि प्रभाषते कर्माणि च स कार्यमाणः परेच्छया करोति विष्टितो वेतनतो वा याच्ञया यदृच्छया वोपसादितमल्पं बहु मृष्टं कदन्नं वाभ्यवहरति परं नेन्द्रियप्रीतिनिमित्तम्। नित्यनिवृत्तनिमित्त-स्वसिद्धविशुद्धानुभवानन्दस्वात्मलाभाधिगमः सुखदुःखयोर्द्वन्द्व-निमित्तयोरसम्भावितदेहाभिमानः॥ ९॥**

**पदार्थ–**
**प्राकृतैः** = सामान्य
**द्विपदपशुभिः** = विवेकशून्य पशुतुल्य व्यक्तिहरूद्वारा
**यदा** = जुन बखतमा
**उन्मत्तजडबधिरमूकेति** = बौलाहा, बुद्धिहीन, बहिरो, लाटो इत्यादि संज्ञाहरूद्वारा
**अभिभाष्यमाणः** = बोलाइएका
**सः च** = ती भरत पनि
**तदनुरूपाणि** = त्यसै अनुसार
**प्रभाषते** = बोलचाल गर्दथे
**कर्माणि** = कामहरू
**कार्यमाणः च** = गराइँदा पनि
**परेच्छया** = अर्काकै इच्छाले
**करोति** = गर्दथे
**विष्टितः** = जबर्जस्ती वा
**वेतनतः** = केही दिउँला भनेर काम गराएर
**वा** = अथवा
**याच्ञया** = मागेर
**यदृच्छया वा** = नमागीकन पनि
**उपसादितम्** = मिलेको
**अल्पं** = थौरै
**बहु** = धेरै
**मृष्टं** = मिठो वा
**कदन्नं वा** = नराम्रो भावनाले दिएको वा खराब अन्न पनि
**अभ्यवहरति** = आनन्दपूर्वक खान्थे
**परं** = तर
**न इन्द्रियप्रीतिनिमित्तम्** = इन्द्रियलाई खुसी पार्नका लागि होइन
**इति** = यसप्रकार
**अनिवृत्तनिमित्तस्वसिद्धविशुद्धानुभवानन्दस्वात्मलाभाधिगमः** = नित्य स्वरूप स्वतःसिद्ध शुद्ध आफ्नै अनुभवरूप आत्माको आनन्द प्राप्त गरिसकेका
**द्वन्द्वनिमित्तयोः** = द्वन्द्वका कारण भएका
**सुखदुःखयोः** = सुख र दुःखको
**असम्भावितदेहाभिमानः** = आरोपित देहाभिमान नभएका
**आसीत्** = थिए

**वाक्यार्थ–** ती भरतलाई मान र अपमानको कुनै वास्ता थिएन। सामान्य बुद्धिहीन जनले आफूलाई बौलाहा, बुद्धिहीन, बहिरो, लाटो आदि भनेर बोलाउँदा उनी पनि त्यस्तै गरी कुराकानी र व्यवहार गरिदिन्थे। कसैले सित्तैंमा वा केही ज्याला दिएर कुनै काम गरायो भने पनि उसैको इच्छाअनुसार त्यो काम गरिदिन्थे। मागेर अथवा नमागीकन थोरै-धेरै, राम्रो-नराम्रो जस्तो अन्न भेटिन्थ्यो त्यही खाएर पेट भर्दथे, इन्द्रियलाई खुसी पार्नका लागि खाँदैनथे। अरू कुनै उपायले प्राप्त नहुने स्वतःसिद्ध विशुद्ध आत्मज्ञान उनलाई प्राप्त भइसकेको थियो। त्यसैले उनी सुखदुःख र देहको अभिमानलाई छाडी अद्वितीय आनन्दस्वरूपमा स्थित थिए।

**विवरण–** कुनै पनि पदार्थ शरीर, इन्द्रिय आदिलाई अनुकूल हुन्छ भने त्यसले सुख दिन्छ र प्रतिकूल हुँदा त्यसैले दुःख दिन्छ। शरीर, इन्द्रिय आदिमा प्राप्त हुने सुख र दुःखको साक्षीको रूपमा जसले आफूलाई बुझ्दछ त्यो मनुष्य ती सुख र दुःखबाट छोइँदैन। जडभरतलाई ज्ञानरूप आत्माको स्वतःस्फुरण भइरहन्थ्यो। त्यो अनन्त आनन्दमा डुब्दा देहमा म हुँ भन्ने अभिमान नष्ट भएकाले जडभरत सुख र दुःख दुबैबाट टाढा रहेका हुन्।

**शीतोष्णवातवर्षेषु वृष इवानावृताङ्गः पीनः संहननाङ्गः स्थण्डिलसंवेशनानुन्मर्दनामज्जनरजसा महामणिरिवानभिव्यक्त-ब्रह्मवर्चसः कुपटावृतकटिरुपवीतेनोरुमषिणा द्विजातिरिति ब्रह्मबन्धुरिति संज्ञयातज्ज्ञजनावमतो विचचार ॥ १० ॥**

**पदार्थ—**
**शीतोष्णवातवर्षेषु** = जाडो, गर्मी, हुरीबतास तथा वर्षामा पनि
**वृषः इव** = साँढेजस्तै
**अनावृताङ्गः** = शरीर नढाकेका
**पीनः** = मोटा
**संहननाङ्गः** = सुगठित अङ्ग भएका
**स्थण्डिलसंवेशनानुन्मर्दना-मज्जनरजसा** = भूमिमैं सुत्ने, शरीरमा तेल आदि नलगाउने, ननुहाउने आदि कारणले गर्दा शरीरभरि धूलैधूलो टाँसिनाले
**महामणिः इव** = (धूलैधूलोले ढाकेको) मूल्यवान् मणिजस्तो
**अनभिव्यक्तब्रह्मवर्चसः** = ब्रह्मतेज बाहिर नदेखिएका
**कुपटावृतकटिः** = कम्मरमा थोत्रो कपडा बेरेका
**उरुमषिणा** = अत्यन्त मैलो
**उपवीतेन** = यज्ञोपवीत (जनै)ले गर्दा
**द्विजातिः इति** = ब्राह्मण हो भनेर
**ब्रह्मबन्धुः इति** = मूर्ख ब्राह्मण भनेर
**संज्ञया** = यही नामले
**अतज्ज्ञजनावमतः** = उनको असली स्वरूप नबुझ्ने मानिसहरूद्वारा तिरस्कृत हुँदै
**विचचार** = घुम्थे

**वाक्यार्थ—** जाडो, गर्मी, हुरीबतास र वर्षाको समयमा समेत साँढे झैं नाङ्गै रहे पनि उनका सबै अङ्गहरू हृष्टपुष्ट नै थिए। जहाँ पायो त्यहीं भुइँमा लडिदिने हुनाले र कहिल्यै तेल लगाउने, नुहाउने आदि नगर्ने हुनाले उनको शरीरमा मयल जमेको थियो। त्यसले गर्दा धूलोले ढाकिएको मणि झैं उनको ब्रह्मतेज लुकिराखेको थियो। कम्मरमा मैलो थाङ्नो वा टालो र काँधमा मैलो जनै मात्र लगाएका उनलाई अज्ञानी मानिसहरू 'यो मूर्ख बाहुन हो' भनी हेलाँ गर्दथे, तर उनी त्यस्ता कुरालाई ध्यानै नदिई आफ्नो इच्छाअनुसार जता मन लाग्यो त्यतै भ्रमण गर्दथे।

**यदा तु परत आहारं कर्मवेतनत ईहमानः स्वभ्रातृभिरपि केदारकर्मणि निरूपितस्तदपि करोति किन्तु न समं विषमं न्यूनमधिकमिति वेद कणपिण्याकफलीकरणकुल्माषस्थाली-पुरीषादीन्यप्यमृतवदभ्यवहरति ॥ ११ ॥**

**पदार्थ—**
**यदा तु** = जब (जीविकाका लागि)
**परतः** = अरूबाट
**कर्मवेतनतः** = कर्म गरिदिए बापत पाउने
**आहारं** = भोजन
**ईहमानः** = चाहँदै गरेको (बुझेर)
**स्वभ्रातृभिः** = आफ्नै भाइहरूद्वारा
**अपि** = पनि
**केदारकर्मणि** = खेतको काममा
**निरूपितः** = अरूले झैं भोजनको भरमा नियुक्त गरिएका उनी
**तत् अपि** = त्यो काम पनि
**करोति** = गर्दथे
**किन्तु** = तर
**समं** = यो समथर
**विषमं** = यो भिरालो
**न्यूनम्** = यो थोरै
**अधिकम्** = यो धेरै
**इति** = यो कुरा
**न वेद** = थाहा पाउँदैनथे
**कणपिण्याकफलीकरणकुल्माष-स्थालीपुरीषादीनि अपि** = (राम्रो काम नगरेको भनेर) कनिका, पीना, भुस, किरा लागेको एवं डढेको (खानेकुरा दिए) पनि
**अमृतवत्** = अमृततुल्य मानेर
**अभ्यवहरति** = खान्थे

**वाक्यार्थ—** पेट पाल्नका लागि अरूकहाँ काम गर्ने गरेको देखेर उनका दाजुहरूले पनि उनलाई खेत खन्ने, सम्याउने आदि काममा लगाउँथे। उनले ती काम पनि गर्दथे, तर कहाँ ? कसरी ?

किन खन्ने ? भन्ने उनलाई कुनै ख्यालै थिएन। होचो-अग्लो, खन्नुपर्ने-नपर्ने आदि केही पनि ख्याल नभएका कारण खन्न लागे खनिरहने र सम्याउन लागे सम्याइरहने ती जडभरत अरूले हेलाँ गरेर कनिका, पीना, भूस, किरा लागेका, डढेको जस्तो अन्न दिए पनि त्यसैलाई अमृत सम्झेर खान्थे।

**अथ कदाचित् कश्चिद् वृषलपतिर्भद्रकाल्यै पुरुषपशुमालभतापत्यकामः ॥ १२ ॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**कदाचित्** = कुनै समयमा
**अपत्यकामः** = सन्तानको कामना गर्ने
**कश्चित्** = कुनै
**वृषलपतिः** = चोरको सरदारले
**भद्रकाल्यै** = देवी भद्रकालीलाई
**पुरुषपशुम्** = पुरुषको बलि दिने
**आलभत** = सङ्कल्प गऱ्यो

**वाक्यार्थ–** कुनै समयमा सन्तानको कामना गर्दै कुनै चोरको सरदारले देवी भद्रकालीलाई मानिसको बलि दिने सङ्कल्प गरेको थियो।

**तस्य ह दैवमुक्तस्य पशोः पदवीं तदनुचराः परिधावन्तो निशि निशीथसमये तमसावृतायामनधिगतपशव आकस्मिकेन विधिना केदारान् वीरासनेन मृगवराहादिभ्यः संरक्षमाणमङ्गिरःप्रवरसुतमपश्यन् ॥ १३ ॥**

**पदार्थ–**
**ह** = निश्चय नै
**तस्य** = त्यस चोरको सरदारको हातबाट
**दैवमुक्तस्य** = भाग्यले भाग्न सफल भएको
**पशोः**= पुरुषरूप पशुको
**पदवीं** = भागेको बाटोलाई
**परिधावन्तः** = खोज्दै पछ्याएका
**तदनुचराः** = उसका सेवकहरूले
**तमसा** = गाढा अन्धकारले
**आवृतायाम्** = ढाकिएको
**निशि** = रातमा
**निशीथसमये** = मध्यरातको समयमा
**अनधिगतपशवः** = त्यो भाग्ने पुरुषपशुलाई नभेट्टाएर हिँडेका
**आकस्मिकेन** = अपर्झटको
**विधिना** = दैवसंयोगले
**वीरासनेन** = वीरासनमा उभिएर
**मृगवराहादिभ्यः** = मृग, बँदेल आदिबाट
**केदारान्** = खेतको बाली
**संरक्षमाणम्** = कुरिरहेको
**अङ्गिरःप्रवरसुतम्** = अङ्गिरा गोत्रीय ब्राह्मणपुत्र भरतलाई
**अपश्यन्** = देखे

**वाक्यार्थ–** त्यस चोरको सरदारले बलि दिनका लागि ल्याएको पुरुषपशु भाग्यवश बन्धनबाट फुत्की भाग्न सफल भयो। अँधेरी रातको समय हुनाले चोरका सेवकहरूले चारैतिर खोज्दा पनि त्यसको कुनै पत्तो लगाउन सकेनन्। त्यसै समयमा दैवसंयोगले अकस्मात् ती सेवकहरूले मृग, बँदेल आदिबाट खेतको बालीको रक्षा गर्न वीरासनमा उभिइरहेका अङ्गिरा गोत्रीय ब्राह्मणकुमार जडभरतलाई देखे।

**अथ त एनमनवद्यलक्षणमवमृश्य भर्तृकर्मनिष्पत्तिं मन्यमाना बद्ध्वा रशनया चण्डिकागृहमुपनिन्युर्मुदा विकसितवदनाः ॥ १४ ॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**एनम्** = यी भरतलाई
**अनवद्यलक्षणम्** = राम्रो लक्षणले युक्त छ भन्ने
**अवमृश्य** = विचार गरेर
**भर्तृकर्मनिष्पत्तिं** = स्वामीको कर्म पूरा हुने भयो भन्ने कुरा
**मन्यमानाः** = ठान्दै
**मुदा** = हर्षले
**विकसितवदनाः** = उज्यालो मुख बनाउँदै
**ते** = ती चोरका सेवकहरूले
**रशनया** = डोरीले
**बद्ध्वा** = बाँधेर
**चण्डिकागृहम्** = चण्डीको मन्दिरमा
**उपनिन्युः** = लगे

**वाक्यार्थ–** त्यसपछि ती चोरका सेवकहरूले 'यो पुरुषपशु उत्तम लक्षणले युक्त छ, यसद्वारा हाम्रा मालिकको कार्य अवश्य सिद्ध हुन्छ' भन्ने सोची ती जडभरतलाई डोरीले बाँधेर खुसी हुँदै चण्डिका देवीको मन्दिरमा लगे।

**अथ पणयस्तं स्वविधिनाभिषिच्याहतेन वाससाच्छाद्य भूषणालेपस्रक्तिलकादिभिरुपस्कृतं भुक्तवन्तं धूपदीपमाल्यलाज-किसलयाङ्कुरफलोपहारोपेतया वैशससंस्थया महता गीतस्तुतिमृदङ्ग-पणवघोषेण च पुरुषपशुं भद्रकाल्याः पुरत उपवेशयामासुः ॥ १५ ॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**पणयः** = चोरका पुरोहितहरूले
**तं** = ती भरतलाई
**स्वविधिना** = आफ्नो नियमानुसार
**अभिषिच्य** = स्नान गराएर
**अहतेन** = टुक्रा नपारिएको (सिङ्गो)
**वाससा** = कपडाले
**आच्छाद्य** = ढाकेर
**भूषणालेपस्रक्तिलकादिभिः** = विभिन्न गहना, माला, तिलक आदिद्वारा
**उपस्कृतं** = सिँगारिएका
**भुक्तवन्तं** = खुब मिठा मिठा पदार्थ खुवाइएका
**धूपदीपमाल्यलाजकिसलयाङ्कुर-फलोपहारोपेतया** = धूप, दीप, माला, लाबा, पालुवा, फलफूल आदि उपहारसहितको
**महता** = ठुलो
**वैशससंस्थया** = बलिदानको विधिअनुसार
**गीतस्तुतिमृदङ्गपणवघोषेण** = विभिन्न स्तुति, गान, बाजागाजा सहित मङ्गलगानले
**च** = पनि (युक्त भएका)
**पुरुषपशुं** = पुरुषरूपी पशु (भरत)लाई
**भद्रकाल्याः** = देवी भद्रकालीको
**पुरतः** = अगाडि (काट्नका लागि)
**उपवेशयामासुः** = बसाए

**वाक्यार्थ–** त्यसपछि पुरोहितहरूले तिनलाई विधिपूर्वक स्नान गराई सिङ्गो कपडा बेरिदिएर विभिन्न प्रकारका गहना, चन्दन, माला र तिलक आदिले सिँगारेर राम्रोसँग भोजन पनि गराए। त्यसपछि धूप, दीप, माला, लाबा, फलफूल, नैवेद्य आदि सहित बलिदानको विधिले पूजा गरेर

स्तुतिगान गर्दै र मृदङ्ग, ढोलक आदि बजाउँदै ती पुरुषपशुरूप भरतलाई बलिदानका लागि भद्रकालीको अगाडि राखे।

**अथ वृषलराजपणिः पुरुषपशोरसृगासवेन देवीं भद्रकालीं यक्ष्यमाणस्तदभिमन्त्रितमसिमतिकरालनिशितमुपाददे ॥ १६ ॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**वृषलराजपणिः** = चोरका सरदारको पुरोहित त्यस पापीले
**पुरुषपशोः** = पुरुषरूपी पशुको
**असृगासवेन** = रगतरूप मदिराले
**भद्रकालीं** = भद्रकाली
**देवीं** = देवीलाई
**यक्ष्यमाणः** = खुसी पार्न चाहँदै
**तदभिमन्त्रितम्** = देवीका स्तोत्रहरूद्वारा मन्त्रणा गरिएको
**अतिकरालनिशितम्** = अति डरलाग्दो धारिलो
**असिम्** = तरबार
**उपाददे** = हातमा लियो

**वाक्यार्थ–** त्यसपछि चोरराजको त्यो पापी पुरोहितले त्यस पुरुषपशुको रगतरूप मदिरा चढाएर भद्रकाली देवीलाई खुसी पार्न देवीमन्त्रहरूले मन्त्रणा गरिएको अति डरलाग्दो धारिलो तरबार हातमा लियो।

**इति तेषां वृषलानां रजस्तमःप्रकृतीनां धनमदरजउत्सिक्तमनसां भगवत्कलावीरकुलं कदर्थीकृत्योत्पथेन स्वैरं विहरतां हिंसाविहाराणां कर्मातिदारुणं यद् ब्रह्मभूतस्य साक्षाद् ब्रह्मर्षिसुतस्य निर्वैरस्य सर्वभूतसुहृदः सूनायामप्यननुमतमालम्भनं तदुपलभ्य ब्रह्मतेजसा-तिदुर्विषहेण दन्दह्यमानेन वपुषा सहसोच्चचाट सैव देवी भद्रकाली ॥ १७ ॥**

**पदार्थ–**
**इति** = यसरी
**रजस्तमःप्रकृतीनां** = स्वाभाविक रूपले रजोगुणी र तमोगुणी
**धनमदरजउत्सिक्तमनसां** = ऐश्वर्य र अहङ्कार आदिको कारणले मर्यादालाई मनदेखि नै त्यागेका
**भगवत्कलावीरकुलं** = ब्राह्मणकुललाई पनि
**कदर्थीकृत्य** = तिरस्कार गर्दै
**उत्पथेन** = खराब बाटोबाट
**स्वैरं** = स्वच्छन्दरूपले
**विहरतां** = घुम्ने
**हिंसाविहाराणां** = हिंसामा नै मन रमाउने
**तेषां** = ती
**वृषलानां** = दुष्ट चोरहरूको
**यत्** = जो
**ब्रह्मभूतस्य** = ब्रह्मस्वरूपमा प्राप्त भइसकेका
**निर्वैरस्य** = वैरभावले रहित भएका
**सर्वभूतसुहृदः** = सम्पूर्ण प्राणीका मित्र भएका
**साक्षात्** = साक्षात्
**ब्रह्मर्षिसुतस्य** = ब्रह्मर्षिपुत्र भरतको
**सूनायाम् अपि** = आपत्कालमा हिंस्य भनेर तोक्दा पनि
**अननुमतम्** = ब्राह्मणहिंसाको निषेध गरिएकाले
**आलम्भनं** = ब्राह्मण हिंसा
**अतिदारुणं** = ज्यादै असहनीय
**तत् कर्म** = त्यस कामलाई
**उपलभ्य** = देखेर

**सा एव** = उनै
**भद्रकाली देवी** = भद्रकाली देवीले
**अतिदुर्विषहेण** = सहन गर्नै नसकिने
**ब्रह्मतेजसा** = ब्रह्मतेजद्वारा
**दन्दह्यमानेन** = दनदन बल्दै गरेको
**वपुषा** = शरीरले (त्यस मूर्तिबाट)
**सहसा** = तत्कालै
**उच्चचाट** = आफूलाई दृश्यरूपमा प्रकट गर्नुभयो

**वाक्यार्थ–** यसप्रकार स्वभावैले रजोगुण र तमोगुणले परिपूर्ण भएका चोरहरू धनको उन्मादले गर्दा झन् उन्मत्त भइरहेका थिए। हिंसामा रुचि भएका तिनीहरू भगवान्को अंशस्वरूप भएका ब्राह्मणहरूको तिरस्कार गरेर आफ्नै इच्छाअनुसार कुमार्गतिर बढिरहेका थिए। यसैको कारण आपत्तिकालमा समेत वध गर्न निषेध गरिएका, कसैसित शत्रुता नगर्ने तथा सम्पूर्ण प्राणीका शुभचिन्तक ब्राह्मणकुमारलाई पनि उनीहरूले बलि दिन खोजिरहेका थिए। यो भयङ्कर कुकर्म हुन लागेको देखी रिसाएकी देवी भद्रकाली आफ्नो ब्रह्मतेजले धपक्क बलेको शरीर लिएर मूर्तिबाट अचानक प्रत्यक्षरूपमा प्रकट हुनुभयो।

**भृशममर्षरोषावेशरभसविलसितभ्रुकुटिविटपकुटिलदंष्ट्रारुणेक्षणाटोपा-**
**तिभयानकवदना हन्तुकामेवेदं महाट्टहासमतिसंरम्भेण विमुञ्चन्ती**
**तत उत्पत्य पापीयसां दुष्टानां तेनैवासिना विवृक्णशीर्ष्णां गलात्**
**स्रवन्तमसृगासवमत्युष्णं सह गणेन निपीयातिपानमद-**
**विह्वलोच्चैस्तरां स्वपार्षदैः सह जगौ ननर्त च विजहार च**
**शिरःकन्दुकलीलया ॥ १८ ॥**

**पदार्थ–**
**भृशम्** = अत्यन्त
**अमर्षरोषावेशरभसविलसित-भ्रुकुटिविटपकुटिलदंष्ट्रारुणेक्षणा-टोपातिभयानकवदना** = क्रोधको वेगका कारणले डरलाग्दो आँखीभौँ तथा लामा-लामा दाह्रा र राता आँखाले गर्दा भयानक मुखमण्डल भएकी देवी भद्रकाली
**इदं** = यो संसारलाई नै
**हन्तुकामा इव** = संहार गर्न लागेकी हुन् कि जस्तो गरी
**अतिसंरम्भेण** = अति क्रोधावेशको कारण
**महाट्टहासं** = ठुलो अट्टहास
**विमुञ्चन्ती** = छाड्दै
**ततः** = त्यहाँबाट
**उत्पत्य** = उफ्रिएर
**तेन एव** = त्यही अभिमन्त्रित
**असिना** = तरबारले
**विवृक्णशीर्ष्णां** = टाउको छिनालिएका
**पापीयसां** = पापी
**दुष्टानां** = दुष्ट चोरहरूको
**गलात्** = घाँटीबाट
**स्रवन्तम्** = बगिरहेको
**अत्युष्णं** = ज्यादै तातो
**असृगासवम्** = रगतरूपी मदिरा
**गणेन** = आफ्ना गणहरूले
**सह** = सँगै
**निपीय** = पिएर
**अतिपानमदविह्वला** = ज्यादा मदिरा पान गर्नाले विह्वल हुँदै
**स्वपार्षदैः सह** = आफ्ना अनुचरहरूका साथमा
**उच्चैस्तरां** = चर्को गरी
**जगौ** = गाना गाउनुभयो र
**ननर्त च** = नाच्नुभयो (साथै)

| | | |
|---|---|---|
| **शिरः** = काटिएको टाउका लिएर | **कन्दुकलीलया** = भकुण्डो झैँ **विजहार च** = खेल्न पनि | थाल्नुभयो |

**वाक्यार्थ–** अति रिसका कारण डरलाग्दा आँखीभौँ तथा लामा-लामा दाह्रा र राता आँखाले गर्दा भयानक मुखमण्डलले युक्त भएको भद्रकालीको अनुहार ज्यादै डरलाग्दो थियो। उहाँको यो विकराल रूप देख्दा सम्पूर्ण संसारको संहार गर्न आँटे झैँ देखिन्थ्यो। त्यसपछि भद्रकालीले रिसले गर्जेर ठुलो-ठुलो स्वरमा अट्टहास गर्दै त्यही अभिमन्त्रित खड्गले उफ्री-उफ्रीकन ती सबै चोर दुष्टहरूको टाउको काटिदिनुभयो। काटिएका गिँडबाट निस्केको तातो-तातो रगतलाई आफ्ना गणहरूका साथमा पान गरी उन्मत्त बनेर अति ठुलो स्वरले गाउँदै र नाच्दै काटिएका टाउकोहरूको भकुण्डो खेल्न थाल्नुभयो।

**एवमेव खलु महदभिचारातिक्रमः कात्स्न्र्येनात्मने फलति ॥ १९ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **महदभिचारातिक्रमः** = | **कात्स्न्र्येन** = पूर्णरूपमा |
| **एवम् एव** = यसरी नै | महापुरुषप्रति गरिएको | **आत्मने** = आफ्नै लागि |
| **खलु** = निश्चय नै | अत्याचारको फल | **फलति** = प्राप्त हुन्छ |

**वाक्यार्थ–** यो कुरा साँचो हो, महापुरुषमाथि गरिएको अत्याचाररूप अपराधको प्रतिफल आफैँले भोग्नुपर्दछ।

**न वा एतद् विष्णुदत्त महदद्भुतं यदसम्भ्रमः स्वशिरश्छेदन आपतितेऽपि विमुक्तदेहाद्यात्मभावसुदृढहृदयग्रन्थीनां सर्वसत्त्व-सुहृदात्मनां निर्वैराणां साक्षाद्भगवतानिमिषारिवरायुधेनाप्रमत्तेन तैस्तैर्भावैः परिरक्ष्यमाणानां तत्पादमूलमकुतश्चिद्भयमुपसृतानां भागवतपरमहंसानाम् ॥ २० ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | उठिसकेका | **अकुतश्चिद्भयम्** = सबै प्रकारले |
| **विष्णुदत्त** = हे राजा परीक्षित् | **अनिमिषारिवरायुधेन** = कालचक्र | भयरहित |
| **विमुक्तदेहाद्यात्मभावसुदृढहृदय-** | नै हतियार भएका | **तत्पादमूलम्** = त्यो भगवान्को |
| **ग्रन्थीनां** = सुदृढ हृदयग्रन्थि तथा | **अप्रमत्तेन** = सावधान भएका | पाउमा |
| देहात्मभावबाट छुटिसकेका | **साक्षाद्भगवता** = साक्षात् | **उपसृतानां** = शरण परेका |
| **सर्वसत्त्वसुहृदाम्** = सम्पूर्ण | भगवान्द्वारा | **भागवतपरमहंसानाम्** = |
| प्राणीका साथ मित्रताको | **तैः तैः** = ती ती | भगवान्का परमभक्तहरूको |
| भावमा प्राप्त भइसकेका | **भावैः** = भद्रकाली आदि | **स्वशिरश्छेदने** = आफ्नो शिर |
| **आत्मनां** = आत्मस्वरूप | विभिन्न स्वरूपले | काटिने परिस्थिति |
| **निर्वैराणां** = वैरभावबाट | **परिरक्ष्यमाणानां** = रक्षा गरिएका | **आपतिते अपि** = आइपर्दा पनि |

| | | |
|---|---|---|
| **यत्** = जो<br>**असम्भ्रमः** = निर्भयता छ (व्याकुलता छैन) | **एतत्** = यो कुरा<br>**महत्** = ठुलो<br>**अद्भुतं** = आश्चर्यको विषय | **न वा** = होइन |

**वाक्यार्थ–** हे राजा परीक्षित् ! सुदृढ हृदयग्रन्थि तथा देहात्मभावबाट छुटिसकेका र सम्पूर्ण प्राणीका साथ मित्रताको भावमा प्राप्त भइसकेका व्यक्तिहरू सबैलाई आफूसमान देख्दछन्। उनीहरूको कोही पनि शत्रु हुँदैन। स्वयं भगवान् नै भद्रकाली आदि विभिन्न रूप धारण गरेर कालचक्ररूप आफ्नो श्रेष्ठ शस्त्रद्वारा सधैँ उनीहरूको रक्षा गरिरहनुहुन्छ। भगवान्को निर्भय चरणकमलको शरण पाएका यस्ता परमभक्तले आफ्नो टाउको काटिने अवस्था आइपर्दा समेत अलिकति पनि नआत्तिनु कुनै आश्चर्यको कुरा होइन।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां पञ्चमस्कन्धे**

**जडभरतचरिते नवमोऽध्यायः ॥ ९ ॥**

# अथ दशमोऽध्यायः

## जडभरत र राजा रहूगणको भेट

**श्रीशुक उवाच** (श्रीशुकजीले भन्नुभयो)

**अथ सिन्धुसौवीरपते रहूगणस्य व्रजत इक्षुमत्यास्तटे तत्कुलपतिना शिबिकावाहपुरुषान्वेषणसमये दैवेनोपसादितः स द्विजवर उपलब्ध एष पीवा युवा संहननाङ्गो गोखरवद् धुरं वोढुमलमिति पूर्वविष्टिगृहीतैः सह गृहीतः प्रसभमतदर्ह उवाह शिबिकां स महानुभावः ॥ १ ॥**

**पदार्थ–**
**अथ** = त्यसपछि (कुनै समयमा)
**सिन्धुसौवीरपतेः** = सिन्धुसौवीर-देशका राजा
**रहूगणस्य** = रहूगण
**व्रजतः** = जाँदै गर्दा
**इक्षुमत्याः** = इक्षुमती नदीको
**तटे** = तटमा
**तत्कुलपतिना** = पाल्की बोक्ने कामदारहरूको नाइकेद्वारा
**शिबिकावाहपुरुषान्वेषणसमये** = पाल्की बोक्ने मानिस खोजिरहेका बखतमा
**दैवेन** = दैवसंयोगले
**उपसादितः** = त्यस ठाउँमा आइपुगेका
**सः द्विजवरः** = ती ब्राह्मणश्रेष्ठ भरत
**उपलब्धः** = भेटिए (उसले सोच्यो)
**एषः** = यो
**पीवा** = मोटो छ
**युवा** = जवान छ र
**संहननाङ्गः** = सुदृढ शरीर भएको पनि छ त्यसैले
**गोखरवत्** = गोरु र गधाले झैँ
**धुरं** = भारी
**वोढुम्** = बोक्न
**अलम् इति** = सक्छ भन्ने सोचेर
**पूर्वविष्टिगृहीतैः सह** = पहिले बोक्दै आएका डोलेहरूसँगै
**प्रसभम्** = जबर्जस्ती
**गृहीतः** = लगाइयो
**अतदर्हः** = पाल्की बोक्न अयोग्य हुँदा-हुँदै पनि
**स महानुभावः** = ती ज्ञानी भरतले
**शिबिकां** = पाल्की
**उवाह** = बोके

**वाक्यार्थ–** हे राजा ! एक पटक सिन्धुसौवीर देशका राजा रहूगण पाल्कीमा चढेर गइरहेका थिए। इक्षुमती नदीको तीरमा पुगेपछि पाल्की बोक्नेहरूको नाइकेलाई एउटा मान्छेको आवश्यकता पर्‍यो। मान्छे खोज्ने क्रममा उसले अकस्मात् त्यहाँ आइपुगेका ब्राह्मण जडभरतलाई भेट्टायो। उनलाई हृष्टपुष्ट बलियो शरीर भएको जवान देखेर यस युवकले गोरु र गधाले झैँ धेरै भारी बोक्न सक्छ भन्ने सोचेर पाल्की बोक्नेहरूको त्यस सरदारले उनलाई पनि जबरजस्तीसँग पहिला बोकिरहेकाहरूसँगै पाल्की बोक्न लगायो। उक्त कार्यका लागि योग्य नहुँदा नहुँदै पनि ती ज्ञानी भरत पनि पाल्की बोक्न लागे।

**यदा हि द्विजवरस्येषुमात्रावलोकानुगतेर्न समाहिता पुरुषगतिस्तदा विषमगतां स्वशिबिकां रहूगण उपधार्य पुरुषानधिवहत आह हे वोढारः साध्वतिक्रमत किमिति विषममुह्यते यानमिति ॥ २ ॥**

**पदार्थ–**
**यदा हि** = जुन बखतमा
**इषुमात्रावलोकानुगतेः** = एक बाण जति टाढा राम्ररी हेरेर मात्रै पाइला अघि बढाउनेवाला
**द्विजवरस्य** = ब्राह्मण भरतको (गतिसँग)
**पुरुषगतिः** = अरू मानिसको गति
**न समाहिता** = राम्रोसँग मिलेन
**तदा** = त्यस वेला
**रहूगणः** = राजा रहूगणले
**स्वशिबिकां** = पाल्कीलाई
**विषमगतां** = ढलपल भएको
**उपधार्य** = बुझेर
**अधिवहतः** = पाल्की बोकिरहेका
**पुरुषान्** = मानिसहरूलाई
**आह** = भने
**हे वोढारः** = ए डोलेहरू हो
**साधु** = राम्रोसँग
**अतिक्रमत** = पाल्की बोक
**किम् इति** = किन हो
**यानम्** = पाल्कीलाई
**विषमम्** = ढलपल गरेर
**उह्यते इति** = बोकिरहेका छौ हँ

**वाक्यार्थ–** आफ्नो गोडाले कुल्चिएर कुनै जीव मर्लान् भन्ने डरले अगाडिको एक बाण बराबर (चार हात) परसम्म बाटो राम्ररी हेरेर मात्र हिँड्ने ती ब्राह्मणको र अरू पुरुषहरूको हिँडाइमा तालमेल मिलेन। हिँडाइको चाल नमिलेर पाल्की हल्लिएको देखी राजा रहूगणले ती पाल्की बोक्ने डोलेहरूलाई 'ए डोलेहरू हो ! राम्ररी हिँड, किन पाल्कीलाई तलमाथि हल्लाइरहेछौ हँ ?' भनेर हप्काए।

**अथ त ईश्वरवचः सोपालम्भमुपाकर्ण्योपायतुरीयाच्छङ्कितमनसस्तं विज्ञापयाम्बभूवुः ॥ ३ ॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**ते** = ती डोलेहरूले
**सोपालम्भम्** = रुर्किंदै भनेको
**ईश्वरवचः** = राजाको वाणी
**उपाकर्ण्य** = सुनेर
**उपायतुरीयात्** = चौथो उपाय (दण्डबाट)
**शङ्कितमनसः** = भित्रभित्रै डराएर
**तं** = ती राजालाई
**विज्ञापयाम्बभूवुः** = निवेदन गरे

**वाक्यार्थ–** राजाको यस्तो वचन सुनेर साम, दाम, भेद र दण्ड गरी चार प्रकारका उपायहरूमध्ये चौथो अर्थात् दण्ड दिने हुन् कि भन्ने डरले ती डोलेहरूले राजासँग बिन्ती गरे।

**न वयं नरदेव प्रमत्ता भवन्नियमानुपथाः साध्वेव वहामः। अयमधुनैव नियुक्तोऽपि न द्रुतं व्रजति नानेन सह वोढुमु ह वयं पारयाम इति ॥ ४ ॥**

**पदार्थ–**
**नरदेव** = हे राजा
**वयं** = हामीहरू

**न प्रमत्ताः** = असावधान भएका हौइनौँ
**भवन्नियमानुपथाः** = हजुरको नियम र अनुशासनमा बसेर
**साधु एव** = राम्रैसँग
**वहामः** = बोक्दैछौँ
**अयम्** = यो
**अधुना एव** = अहिले भर्खरै
**नियुक्तः** = नियुक्त भएको (नथाकेको)
**अपि** = भए पनि
**द्रुतं** = चाँडो
**न व्रजति** = हिँड्दै-हिँड्दैन
**अनेन सह** = यससँग
**वोढुम्** = पाल्की बोक्न
**उ ह** = निश्चय नै
**वयं** = हामीहरू
**न पारयामः इति** = सक्दैनौँ

**वाक्यार्थ–** हे राजा ! हामीले असावधान भएर पाल्की हल्लाएका होइनौँ। हामीले त हजुरको आज्ञानुसार आफ्नो अनुशासनमा बसेर पाल्की बोकिरहेका छौँ तर भर्खर नियुक्त गरिएको र नथाकेको भए पनि यो मान्छे छिटो हिँड्दै-हिँड्दैन, हामी यससँग पाल्की बोक्न सक्दैनौँ।

**सांसर्गिको दोष एव नूनमेकस्यापि सर्वेषां सांसर्गिकाणां भवितुमर्हतीति निश्चित्य निशम्य कृपणवचो राजा रहूगण उपासितवृद्धोऽपि निसर्गेण बलात्कृत ईषदुत्थितमन्युरविस्पष्ट-ब्रह्मतेजसं जातवेदसमिव रजसावृतमतिराह ॥ ५ ॥**

**पदार्थ–**
**उपासितवृद्धः अपि** = वृद्ध (ज्ञानी)हरूको सेवा गरेका भए पनि
**राजा रहूगणः** = राजा रहूगणले
**कृपणवचः** = डोलेहरूको निवेदन
**निशम्य** = सुनेर
**एकस्य** = कुनै एक व्यक्तिको
**सांसर्गिकः** = संसर्गबाट पैदा भएको
**दोषः एव** = दोष नै
**नूनम्** = पक्कै
**सर्वेषां** = अरू सबै
**सांसर्गिकाणां** = संसर्ग गर्ने व्यक्तिहरूको
**अपि** = पनि दोष
**भवितुम्** = हुन
**अर्हति** = सक्छ
**इति** = यस्तो
**निश्चित्य** = निश्चय गरेर
**निसर्गेण** = क्षत्रियको स्वभावले
**बलात्कृतम्** = पराधीन भएर
**रजसा** = रजोगुणले
**आवृतमतिः** = बुद्धि ढाकिएको हुँदै
**ईषत्** = केही
**उत्थितमन्युः** = रिसाएर
**अविस्पष्टब्रह्मतेजसं** = ब्रह्मतेज प्रस्ट नदेखिएका
**जातवेदसम् इव** = (खरानीले पुरिएका) अग्निजस्ता (भरतलाई)
**आह** = (व्यङ्ग्य गर्दै) भने

**वाक्यार्थ–** डोलेहरूको निवेदन सुनेर राजा रहूगणले 'कुनै व्यक्तिमा रहेको दोष त्यससँग सम्बन्ध राख्ने अरूलाई पनि सरे झैँ त्यो दोषलाई नहटाएको खण्डमा त्यसको सङ्गतले अरू सबै डोलेहरूले पनि आफ्नो चाल बिगार्नेछन्' भन्ने विचार गरे। क्षत्रिय भएकाले स्वभावैले रजोगुणी भएका कारण अत्यन्त रिसाएका ती राजा रहूगणले खरानीले छोपिएको आगो झैँ ब्रह्मतेज छिपाइराखेका भरतलाई यसरी व्यङ्ग्य गरेर भन्न लागे।

**अहो कष्टं भ्रातर्व्यक्तमुरुपरिश्रान्तो दीर्घमध्वानमेक एव ऊहिवान् सुचिरं नातिपीवा न संहननाङ्गो जरसा चोपद्रुतो भवान् सखे नो**

**एवापर एते सङ्घट्टिन इति बहुविप्रलब्धोऽप्यविद्यया रचितद्रव्यगुणकर्माशयस्वचरमकलेवरेऽवस्तुनि संस्थानविशेषेऽहं ममेत्यनध्यारोपितमिथ्याप्रत्ययो ब्रह्मभूतस्तूष्णीं शिबिकां पूर्ववदुवाह ॥ ६ ॥**

**पदार्थ–**
**अहो** = कठै बरा
**कष्टं** = ज्यादै दुःख लाग्यो
**भ्रातः** = ए भाइ
**उरुपरिश्रान्तः** = (तिमी) खुब थाकेका छौ
**सुचिरं** = धेरै समयसम्म
**एकः एव** = एक्लै
**व्यक्तम्** = पक्कै नै (यो पाल्की)
**दीर्घम्** = यति लामो
**अध्वानम्** = बाटोसम्म
**ऊहिवान्** = बोक्यौ
**सखे** = हे साथी
**अपरे एते** = अरू यी
**सङ्घट्टिनः** = साथीहरूले
**न एव** = पटक्कै बोकेका होइनन्
**भवान्** = तिमी
**न अतिपीवा** = ज्यादै मोटा छैनौ
**न संहननाङ्गः** = हृष्टपुष्ट पनि छैनौ
**जरसा** = (अनि) वृद्धावस्थाले
**च** = पनि
**उपद्रुतः** = सताइसकेको छ
**इति** = यसरी
**बहुविप्रलब्धः अपि** = अत्यन्तै उपहास गरिएका भए पनि
**अविद्यया** = अविद्याकै कारणले
**रचितद्रव्यगुणकर्माशयस्वचरम-कलेवरे** = बनेका पञ्चमहाभूत, सत्त्व आदि गुण, शुभ-अशुभ आदि कर्म, तथा अन्तःकरण आदिले बनेको आफ्नो यो अन्तिम शरीररूप
**अवस्तुनि** = अवास्तविक
**संस्थानविशेषे** = विभिन्न अङ्गको आकारमा परिणत भएको आकार विशेषमा
**अहं मम इति** = म र मेरो भन्ने
**अनध्यारोपितमिथ्याप्रत्ययः** = विपरीत ज्ञान नभएका
**ब्रह्मभूतः** = ब्रह्मस्वरूप भरतले
**तूष्णीं** = चुपचाप
**पूर्ववत्** = पहिले जसरी नै
**शिबिकां** = पाल्की
**उवाह** = बोके

**वाक्यार्थ–** 'अति दुःखको कुरा, ए भाइ ! तिमी ज्यादै थाक्यौ होला। धेरै टाढादेखि तिमीले एक्लै यो पाल्की बोकिरहेका छौ। तिम्रा साथीहरूले तिमीलाई सघाउँदै सघाएनन् जस्तो लाग्छ। तिमी हृष्टपुष्ट र बलियो शरीर भएका पनि छैनौ, तिमीलाई बुढेसकालले पनि सताइसकेको छ।' यसप्रकार राजाले व्यङ्ग्य गरे तापनि पञ्चमहाभूत, सत्त्व आदि गुण, शुभ-अशुभ आदि कर्म, तथा अन्तःकरण आदिले बनेको अविद्याको कार्य शरीर र शरीरसम्बन्धी पदार्थलाई अवास्तविक हुन् भनी बुझिसकेका भरतले चुप लागेर पहिले झैँ पाल्की बोकिरहे।

**अथ पुनः स्वशिबिकायां विषमगतायां प्रकुपित उवाच रहूगणः किमिदमरे त्वं जीवन्मृतो मां कदर्थीकृत्य भर्तृशासनमतिचरसि प्रमत्तस्य च ते करोमि चिकित्सां दण्डपाणिरिव जनताया यथा प्रकृतिं स्वां भजिष्यस इति ॥ ७ ॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**स्वशिबिकायां** = आफ्नो पाल्की
**पुनः** = फेरि
**विषमगतायां** = पहिले झैँ दायाँ बायाँ ढलपल भइरहेपछि
**प्रकुपितः** = अत्यन्त क्रुद्ध भएका
**रहूगणः** = रहूगणले
**उवाच** = भने
**अरे** = ए मूर्ख
**किम् इदम्** = के हो यो
**त्वं** = तँ त
**जीवन्मृतः**= जिउँदै मरिस् कि कसो
**मां** = मलाई
**कदर्थीकृत्य** = तिरस्कार गरेर
**भर्तृशासनम्** = आफ्नो मालिकको आज्ञाको
**अतिचरसि** = उल्लङ्घन गर्छस्
**प्रमत्तस्य च ते** = मातेको तेरो
**जनतायाः** = प्राणीहरूका लागि
**दण्डपाणिः इव** = दण्ड हातमा लिने यमराजले झैँ
**चिकित्सां** = (तँलाई म) औषधि
**करोमि** = गर्छु
**यथा** = जुन औषधि (दण्ड) दिएपछि
**स्वां** = आफ्नो
**प्रकृतिं** = असली स्वरूपलाई
**भजिष्यसे इति** = प्राप्त गर्नेछस्

**वाक्यार्थ–** त्यसपछि फेरि पाल्की पहिलेको झैँ ढलपल भइरहेपछि अत्यन्त रिसाएका राजा रहूगणले 'ए मूर्ख ! यो के चाला हो ? के तँ जिउँदै मरिस् ? तैँले किन आफ्ना मालिकले दिएको आज्ञा मान्दैनस् हँ ? म अहिले नै तँलाई यमराजले झैँ दण्ड दिएर तेरो औषधोपचार गर्छु अनि बल्ल तेरो होस आउला' भन्दै गाली गर्न थाले।

**एवं बह्वबद्धमपि भाषमाणं नरदेवाभिमानं रजसा तमसानुविद्धेन मदेन**
**तिरस्कृताशेषभगवत्प्रियनिकेतं पण्डितमानिनं स भगवान् ब्राह्मणो**
**ब्रह्मभूतसर्वभूतसुहृदात्मा योगेश्वरचर्यायां नातिव्युत्पन्नमतिं**
**स्मयमान इव विगतस्मय इदमाह ॥ ८ ॥**

**पदार्थ–**
**एवं** = यसरी
**बहु** = बारम्बार
**अबद्धम्** = अत्यन्तै नमिल्दो कुरा
**भाषमाणं** = बोल्दै गरेका
**रजसा तमसा अनुविद्धेन** = रजोगुण र तमोगुणले युक्त भएका
**मदेन** = घमण्डले गर्दा
**नरदेवाभिमानं** = म ठुलो राजा हुँ भन्ने अहङ्कार गरिरहेका
**तिरस्कृताशेषभगवत्प्रियनिकेतं** = भगवान्का भक्तलाई हेलाँ गर्ने
**पण्डितमानिनं अपि** = आफूलाई ठुलो विद्वान् सम्झने भए पनि
**योगेश्वरचर्यायां** = योगी र ज्ञानीहरूको अभिप्राय बुझ्न
**नातिव्युत्पन्नमतिं** = त्यति निपुण नभएका रहूगणलाई
**सः** = ती
**भगवान्** = ऐश्वर्यशाली
**ब्रह्मभूतः** = ब्रह्मस्वरूप
**सर्वभूतसुहृत्** = सम्पूर्ण प्राणीहरूका साथी र
**आत्मा** = आत्मस्वरूप
**विगतस्मयः** = अहङ्काररहित
**ब्राह्मणः** = ब्राह्मण भरतले
**स्मयमानः इव** = मुस्कुराए झैँ गरी
**इदम् आह** = यसो भने

**वाक्यार्थ–** रजोगुण र तमोगुणले ढाकेको कारण 'म ठुलो बुद्धिमान् राजा हुँ' भन्ने अभिमानले भरिएका राजा रहूगणले भगवान्को परमप्रिय भक्त भरतको तिरस्कार गरे। महापुरुषहरूको विचित्र आचरणलाई कत्ति पनि नबुझेका अज्ञानी रहूगणको तुच्छ व्यवहार देखेर पनि सम्पूर्ण प्राणीका मित्र

वा आत्मस्वरूप ती ब्राह्मण भरत अलिकति पनि रिसाएनन्, बरु मुसुमुसु हाँस्दै यसो भन्ने लागे।

**विवरण–** माथिका श्लोकहरूमा अभिमान र रिसको आवेगमा राजा रहूगणले जडभरतलाई व्यङ्ग्य प्रहार गरेको वर्णन छ। यद्यपि रहूगण गुरुजनहरूको सेवा र सम्मान गर्दथे अनि ब्रह्मज्ञानकै लागि प्रयत्नशील थिए तर अभिमानले बुद्धि बिग्रिएपछि मान्छे आफ्ना उत्तम उद्देश्यबाट पनि तल झर्दछ। जडभरतले भर्खर पाल्की बोकेका थिए अनि उनी मोटो-घाटो र तन्नेरी नै थिए तर रहूगणले 'तिमी दुब्लो र बूढो छौ अनि लामो समयसम्म एक्लै पाल्की बोकेको हुनाले लड्खडाएका होलाऊ' भनी व्यङ्ग्य गरे। अरू रहूगणले उनलाई जिउँदो मूर्दा समेत भन्न भ्याए। जडभरत शरीरमा आत्मबुद्धि गर्दैनथे। जुन शरीर अविद्याका कारण देखापरेको हो, त्यसलाई गरिएका गालीहरूले उनमा केही असर पारेनन्। त्यसैले ब्रह्मज्ञानीको अपमान गर्ने ती मूर्ख राजालाई उनको भयङ्कर अपराधबाट जोगाउन मात्र जडभरतले उपदेश गरे भनी शुकदेवजीले बताउनुभएको छ। ब्रह्मज्ञानीहरू आफ्नो ज्ञान प्रकट गर्न होइन बरु अज्ञानमा निदाएकाहरूलाई ब्युँझाउन मात्र उपदेश गर्छन् भन्नु यस श्लोकको आशय हो।

**ब्राह्मण उवाच** (जडभरतले भने)

**त्वयोदितं व्यक्तमविप्रलब्धं भर्तुः स मे स्याद् यदि वीर भारः।**
**गन्तुर्यदि स्यादधिगम्यमध्वा पीवेति राशौ न विदां प्रवादः॥ ९॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **भारः** = जुन भारी छ | भए (आत्मामा थकाइ हुन्थ्यो) |
| **वीर** = हे वीर राजा | **सः** = त्यो भारी | **पीवा इति** = मोटोघाटोको कुरा |
| **त्वया** = तपाईंले | **यदि** = यदि | **राशौ** = शरीरलाई लिएर |
| **उदितं** = जे भन्नुभयो | **मे** = मेरो (आत्माको) | भनिएको हो (यस्तो कुरा) |
| **तत्** = त्यो | **स्यात्** = भए (थकाइ लाग्दो हो) | **विदां** = बुद्धिमान् मानिसहरूको |
| **अविप्रलब्धं** = व्यङ्ग्य नभई | **गन्तुः** = जाने-आउने शरीरको | **प्रवादः न** = कुरा हुँदै होइन |
| ठिक कुरा | **अधिगम्यम्** = प्राप्य (पुगिने) | (अपितु मूर्खहरूको मात्र हो) |
| **व्यक्तम्** = भन्नुभयो (किनभने) | **यत् अध्वा** = जुन बाटो छ, त्यो | |
| **भर्तुः** = भारी बोक्ने शरीरको | **यदि स्यात्** = यदि आत्माको हुने | |

**वाक्यार्थ–** हे राजा ! तपाईंले भन्नुभएको कुरा ठिक हो, त्यो व्यङ्ग्य होइन। किनभने भारी बोक्ने र बाटोमा हिँड्ने शरीर नै म होइन। यदि शरीर नै म भएको भए अवश्य मलाई थकाइ लाग्ने थियो, तर शरीरसँग मेरो कुनै सम्बन्ध नरहेकाले म थाकेको छैन। अर्को कुरा तपाईंले 'तँ हृष्टपुष्ट छैनस्' भन्ने जुन कुरा गर्नुभयो, त्यो पनि ठिकै हो। किनभने मोटाउनु, दुब्लाउनु पञ्चभूतको थुप्रो यो स्थूल शरीरको धर्म हो, आत्माको होइन। त्यसैले आत्मस्वरूप म हृष्टपुष्ट छैन। शरीरलाई लिएर कुरा गर्ने काम मूर्खको हो, ज्ञानीको होइन।

**विवरण–** रहूगणले जडभरतलाई खिस्सी गर्दै व्यङ्ग्य प्रहार गरेका थिए। व्यङ्ग्यवचनको उत्तर दिँदै जडभरतले आफूसँग भारी बोक्ने र बाटो हिँड्नेको सम्बन्ध नरहेको बताएका छन्।

भरिया, बटुवा आदि वस्तुहरू सापेक्षतामा सिद्ध हुन्छन्, यिनीहरूलाई तोकेर भन्न सकिँदैन। एउटै मान्छे भारी बोक्दा भरिया बन्छ भने बाटो हिँड्दा बटुवा बन्छ। शरीरका विभिन्न परिवर्तनहरूलाई जान्ने चेतन आत्मा न दुब्लो हुन्छ न त मोटो नै। जसले आफूलाई कहिल्यै पनि शरीर भन्ठान्दैन त्यो आत्मज्ञानीलाई भरिया, बटुवा, दुब्लो, मोटो भनी व्यङ्ग्य प्रहार गर्नुको केही अर्थ छैन।

चोरका सरदारको पुरोहितले आफूलाई मार्न तयार हुँदा समेत केही वास्तै नगरी चुपचाप बस्ने जडभरत रहूगणले त्यति व्यङ्ग्य प्रहार गर्दा चाहिँ किन प्रत्युत्तर दिन थाले ? यो कुरा विचारणीय छ। वास्तवमा राजा रहूगणको व्यङ्ग्य प्रहारको प्रतिक्रियास्वरूप वा राजदण्ड पाइएला कि भन्ने डरले जडभरतले यी कुरा भनेका होइनन्। जडभरतले रहूगणप्रति यी कुराहरू भन्नु उनले रहूगणप्रति गरेको कृपा हो। राजा रहूगण तत्त्वजिज्ञासु थिए, त्यसैले ती तत्त्वजिज्ञासु राजाप्रतिको प्रेमभावले उनलाई तत्त्वज्ञान प्रदान गर्न जडभरतले यी कुरा सुरु गरेका हुन्।

**स्थौल्यं कार्श्यं व्याधय आधयश्च क्षुत्तृड्भयं कलिरिच्छा जरा च।**
**निद्रा रतिर्मन्युरहं मदः शुचो देहेन जातस्य हि मे न सन्ति ॥ १० ॥**

**पदार्थ–**
**स्थौल्यं** = मोटोपना
**कार्श्यं** = दुब्लोपना
**व्याधयः** = शारीरिक रोगहरू
**आधयः** = मानसिक पीडाहरू
**क्षुत्तृड्भयं** = भोक, प्यास तथा डर
**कलिः** = झगडा
**इच्छा** = इच्छा
**जरा** = वृद्धावस्था
**निद्रा** = निद्रा
**रतिः** = प्रेम र
**मन्युः** = रिस
**अहंमदः** = अहङ्कार तथा अभिमान
**शुचः** = विविध शोकहरू
**हि** = निश्चय नै
**देहेन जातस्य** = शरीरमा आत्मबुद्धि लिएका मानिसमा मात्रै
**सन्ति** = हुन्छन्
**मे न** = आत्मस्वरूप ममा केही पनि छैनन्

**वाक्यार्थ–** मोटोपना, दुब्लोपना, शारीरिक रोग, मानसिक पीडा, भोक, प्यास, डर, झगडा, इच्छा, बुढ्याइँ, निद्रा, प्रेम, क्रोध, अभिमान र शोक यी सबै धर्म शरीर र शरीरका अभिमानी जीवका हुन्। आत्मस्वरूप ममा त यी धर्महरूको लेश मात्र पनि छैन।

**जीवन्मृतत्वं नियमेन राजनाद्यन्तवद् यद् विकृतस्य दृष्टम्।**
**स्वस्वाम्यभावो ध्रुव ईड्य यत्र तर्ह्युच्यतेऽसौ विधिकृत्ययोगः ॥ ११ ॥**

**पदार्थ–**
**राजन्** = हे महाराज
**यत्** = जो
**जीवन्मृतत्वं** = जिउने मर्नेको कुरा (मेरो मात्रै होइन)
**आद्यन्तवत्** = जन्मने र मर्ने
**विकृतस्य** = सम्पूर्ण विकारी जगत्‌को
**नियमेन** = नियमित रूपले
**दृष्टम्** = सधैँ देखिन्छ
**ईड्य** = हे पूज्य राजा
**यदि** = यदि
**स्वस्वाम्यभावः** = स्वामी र सेवकभाव
**ध्रुवः** = निश्चित हुँदो हो

| | | |
|---|---|---|
| **तर्हि** = त्यसपछि मात्रै | **विधिकृत्ययोगः** = कोही | बोक्ने भन्ने कुरा |
| **असौ** = यो | पाल्कीमा चढ्ने र कोही पाल्की | **उच्यते** = भन्न मिल्थ्यो |

**वाक्यार्थ–** हे राजा ! मलाई 'जिउँदो मुर्दा' भन्दै जिउने र मर्ने जुन कुरा गर्नुभयो, त्यो ममा मात्र लागु हुने कुरो होइन। त्यो त जन्मने र मर्ने सम्पूर्ण विकारी पदार्थको स्वभाव हो। अर्को कुरा जहाँ स्वामी–सेवकभाव स्थिर हुन्छ त्यहीं नै आज्ञा दिने र सो आज्ञाको पालन गर्ने नियम लागु हुन्छ। तपाईंको र मेरो बीचमा त त्यो सम्बन्ध स्थिर छैन। अतः स्वामी–सेवकभाव पनि ठीक छैन।

**विशेषबुद्धेर्विवरं मनाक् च पश्याम यन्न व्यवहारतोऽन्यत्।**
**क ईश्वरस्तत्र किमीशितव्यं तथापि राजन् करवाम किं ते॥ १२॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **व्यवहारतः अन्यत्** = यो | **न पश्यामः** = देख्दिनँ भने | पनि |
| सामान्य व्यवहारलाई छाडेर | **तत्र** = त्यस अवस्थामा | **यत्** = तपाईंमा म राजा हुँ भन्ने |
| **विशेषबुद्धेः** = तपाईं राजा, म | **ईश्वरः** = मालिक | अहङ्कार छ भने भन्नुहोस् |
| सेवक भन्ने विशेषबुद्धिको | **कः** = को हुने | **ते** = तपाईंको |
| **यत्** = जो | **ईशितव्यं** = काम लगाइने नोकर | **किं** = के सेवा |
| **विवरं** = अवकाश वा कुनै तुक | **किम्** = के हुनु | **करवाम** = गरौँ |
| **मनाक् च** = केही पनि | **राजन्** = हे महाराज | |
| | **तथा अपि** = कुनै नियम नभए | |

**वाक्यार्थ–** राजा र सेवक भन्ने भेदबुद्धि त केवल शरीरलाई लिएर मात्र हुन्छ। वास्तविक रूपमा हेर्दा स्वामी–सेवकभाव सम्बन्ध सिद्ध हुनै सक्दैन। तथापि तपाईंलाई म राजा हुँ भन्ने अभिमान छ भने भन्नुहोस्, म तपाईंको के सेवा गरूँ ?

**उन्मत्तमत्तजडवत् स्वसंस्थां गतस्य मे वीर चिकित्सितेन।**
**अर्थः कियान् भवता शिक्षितेन स्तब्धप्रमत्तस्य च पिष्टपेषः॥ १३॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **वीर** = हे वीर राजा | **मे** = म भरतको | **स्तब्धप्रमत्तस्य च** = वास्तविक |
| **उन्मत्तमत्तजडवत्** = पागल, | **भवता** = तपाईंले | रूपमा म जड नै रहेछु भने पनि |
| बौलाहा वा लाटोजस्तो | **चिकित्सितेन** = दण्ड आदि | **पिष्टपेषः** = पिनेको पीठोलाई |
| **स्वसंस्थां** = आफ्नै स्वरूपमा | औषधि गरेर वा | फेरि पिने झैं व्यर्थ हुनेछ |
| **गतस्य** = प्राप्त भएको | **शिक्षितेन** = शिक्षा दिएर | |
| | **कियान् अर्थः** = के फाइदा | |

**वाक्यार्थ–** त्यस्तै पागल, बौलाहा र लाटो झैं बनेर आफ्नो स्वरूपमा रमाइरहेको मलाई दण्ड–सजाय दिएर पनि तपाईंलाई केही फाइदा छैन। म साँच्चै जड नै रहेछु भने पनि मलाई शिक्षा दिन तपाईंले गर्नुभएको प्रयास पिनेको पीठोलाई फेरि पिने झैं व्यर्थ हुनेछ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एतावदनुवादपरिभाषया प्रत्युदीर्य मुनिवर उपशमशील उपरतानात्म्यनिमित्त उपभोगेन कर्मारब्धं व्यपनयन् राजयानमपि तथोवाह ॥ १४ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **एतावत्** = यति | **व्यपनयन्** = कम गराउँदै |
| **उपशमशीलः** = शान्त चित्त भएका | **प्रत्युदीर्य** = भनेर | **राजयानम्** = राजाको पाल्कीलाई |
| **मुनिवरः** = श्रेष्ठ मुनि भरत | **उपरतानात्म्यनिमित्तः** = देहात्म-भाव निवृत्त भएको हुँदा | **अपि** = पनि |
| **अनुवादपरिभाषया** = राजाको भनाइको उत्तरको रूपमा | **उपभोगेन** = भोगले | **तथा** = पहिले झैं नै |
| | **कर्मारब्धं** = प्रारब्ध कर्मलाई | **उवाह** = बोके |

**वाक्यार्थ–** यसप्रकार शान्त चित्त भएका भरत रहूगणका व्यङ्ग्य कुराको उत्तर दिएर चुप लागे। त्यसपछि भोगेर मात्र सकिने प्रारब्धकर्मलाई सिध्याउनका लागि पहिले झैं फेरि पाल्की बोकेर हिँड्न लागे।

**स चापि पाण्डवेय सिन्धुसौवीरपतिस्तत्त्वजिज्ञासायां सम्यक्श्रद्धयाधिकृताधिकारस्तद्धृदयग्रन्थिमोचनं द्विजवच आश्रुत्य बहुयोगग्रन्थसम्मतं त्वरयावरुह्य शिरसा पादमूलमुपसृतः क्षमापयन् विगतनृपदेवस्मय उवाच ॥ १५ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **सिन्धुसौवीरपतिः** = सिन्धु-सौवीर देशका मालिक रहूगणले | **विगतनृपदेवस्मयः** = राजा र स्वामी हुँ भन्ने अहङ्कारलाई त्यागेका (रहूगणले) |
| **पाण्डवेय** = हे पाण्डुवंशीय परीक्षित् | **अपि** = पनि | **त्वरया** = तत्कालै |
| **सम्यक्श्रद्धया** = उत्तम श्रद्धाका कारण | **हृदयग्रन्थिमोचनं** = हृदयको ग्रन्थिलाई भेदन गर्ने | **अवरुह्य** = पाल्कीबाट ओर्लेर |
| **तत्त्वजिज्ञासायां** = तत्त्व-जिज्ञासामा | **बहुयोगग्रन्थसम्मतं** = अनेकौं योगसम्बन्धी ग्रन्थमा बताइएको | **शिरसा** = शिरले |
| **अधिकृताधिकारः** = अधिकारी बनेका | **तत्** = त्यो | **पादमूलमुपसृतः** = पाउमा परेर (दण्डवत् प्रणाम गर्दै) |
| **सः च** = ती | **द्विजवचः** = ब्राह्मणको वचन | **क्षमापयन्** = क्षमा माग्दै |
| | **आश्रुत्य** = सुनेर | **उवाच** = भन्न थाले |

**वाक्यार्थ–** हे परीक्षित् ! त्यसपछि तत्त्वजिज्ञासु भएका कारण योग्य गुरुको खोजीमा हिँडेका ती राजा रहूगण जडभरतको मुखबाट निक्लेका देहाभिमान हटाउने यथार्थ कुराले अत्यन्त प्रभावित भएर तत्कालै पाल्कीबाट ओर्ले। 'राजा हुँ' भन्ने अहङ्कार त्यागेर उनका पाउमा परेर क्षमा माग्दै यसप्रकार भन्न लागे।

**कस्त्वं निगूढश्चरसि द्विजानां बिभर्षि सूत्रं कतमोऽवधूतः ।**
**कस्यासि कुत्रत्य इहापि कस्मात् क्षेमाय नश्चेदसि नोत शुक्लः ॥ १६ ॥**

**पदार्थ–**
**त्वं कः** = हजुर को हुनुहुन्छ ?
**निगूढः** = गुप्त रूपमा
**चरसि** = हिँड्नुभएको छ
**सूत्रं** = धागो (जनै)
**बिभर्षि** = धारण गर्नुभएको छ
**द्विजानां** = (दत्तात्रेय आदि अवधूत) ब्राह्मणहरूमा
**कतमः** = कुन चाहिँ
**अवधूतः** = अवधूत हुनुहुन्छ
**कस्य** = कसको पुत्र
**असि** = हुनुहुन्छ
**कुत्रत्यः** = कहाँबाट
**इह अपि** = यहाँ
**कस्मात्** = के कामले आउनुभएको हो
**नः** = हामीहरूको
**क्षेमाय** = कल्याणका लागि
**असि चेत्** = आउनुभएको हो भने
**उत** = निश्चय नै
**शुक्लः न** = शुद्धसत्त्वमूर्ति भएका महर्षि कपिल त हुनुहुन्न ?

**वाक्यार्थ–** काँधमा ब्राह्मणहरूको चिह्न जनै लगाएर आफ्नो वास्तविक स्वरूपलाई लुकाउँदै हिँड्ने हजुर को हुनुहुन्छ ? हजुर दत्तात्रेय आदि गरिएका अवधूतहरूमध्ये कुनै हुनुहुन्छ कि ? हजुर कसको छोरा हुनुहुन्छ ? यहाँ कताबाट के कारणले आउनुभएको हो ? कतै हजुर साक्षात् सत्त्वमूर्ति महर्षि कपिल भगवान् त हुनुहुन्न ?

**नाहं विशङ्के सुरराजवज्रान्न त्र्यक्षशूलान्न यमस्य दण्डात् ।**
**नाग्न्यर्कसोमानिलवित्तपास्त्राच्छङ्के भृशं ब्रह्मकुलावमानात् ॥ १७ ॥**

**पदार्थ–**
**अहं** = म रहूगण
**सुरराजवज्रात्** = इन्द्रको वज्रबाट
**न विशङ्के** = डराउन्नँ
**त्र्यक्षशूलात्** = शङ्करजीको त्रिशूलबाट र
**यमस्य** = यमराजको
**दण्डात्** = दण्डबाट पनि
**न** = डराउन्नँ त्यस्तै
**अग्न्यर्कसोमानिलवित्तपास्त्रात्** = अग्नि, सूर्य, चन्द्रमा, वसु र कुवेरको अस्त्रबाट पनि
**न शङ्के** = म डराउन्नँ तर
**ब्रह्मकुलावमानात्** = ब्राह्मणकुलको अपमानबाट
**भृशं शङ्के** = अत्यन्त डराउँछु

**वाक्यार्थ–** मलाई इन्द्रको वज्र, महादेवको त्रिशूल, यमराजको दण्ड तथा अग्नि, सूर्य, चन्द्र, वायु, कुवेर यी कसैको शस्त्रको पनि डर छैन, तर ब्राह्मणकुलको अपमान होला भन्ने ठुलो डर छ।

**तद् ब्रूह्यसङ्गो जडवन्निगूढविज्ञानवीर्यो विचरस्यपारः ।**
**वचांसि योगग्रथितानि साधो न नः क्षमन्ते मनसापि भेत्तुम् ॥ १८ ॥**

**पदार्थ–**
**तत्** = त्यसकारणले
**असङ्गः** = सामान्य जनसङ्गतले रहित
**अपारः** = अचिन्त्य महिमायुक्त
**विज्ञानवीर्यः** = ज्ञानरूपी ऐश्वर्यले युक्त ब्राह्मण भएर पनि
**जडवत्** = लाटो जैँ
**निगूढः** = लुकिछिपी (किन)
**विचरसि** = घुम्नुहुन्छ (यो कुरा)
**ब्रूहि** = भन्नुहोस्
**हे साधो** = हे साधु
**योगग्रथितानि** = युक्ति र प्रमाणले युक्त भएका
**वचांसि** = हजुरका वाणीहरूलाई

| | |
|---|---|
| **नः** = हामीहरूको | **भेत्तुम्** = बुझ्न वा उत्तर दिन |
| **मनसा अपि** = मनले पनि | **न क्षमन्ते** = सक्दैनन् |

**वाक्यार्थ–** त्यसैले आफ्नो तेज र प्रभावलाई लुकाएर, विषयमा सर्वथा अनासक्त भई लाटो झैँ विचरण गर्ने हजुर को हुनुहुन्छ ? कृपया हामीलाई भन्नुहोस्। हजुरको महत्त्व र वाणीलाई बुझ्न हाम्रो मनले सक्दैन।

**अहं च योगेश्वरमात्मतत्त्वविदां मुनीनां परमं गुरुं वै।**

**प्रष्टुं प्रवृत्तः किमिहारणं तत् साक्षाद् हरिं ज्ञानकलावतीर्णम्॥ १९॥**

**पदार्थ–**
**अहं** = म रहूगण
**योगेश्वरम्** = ज्ञानी
**आत्मतत्त्वविदां** = आत्मतत्त्व जान्ने
**मुनीनां च** = मुनिहरूका
**परमं गुरुं** = परम गुरु भएका
**ज्ञानकलावतीर्णम्** = ज्ञानशक्तिका रूपमा अवतरित हुनुभएका
**साक्षात्** = प्रत्यक्ष
**हरिं** = श्रीहरि स्वरूप भगवान् कपिलदेवलाई
**वै** = निश्चय नै
**इह** = यहाँ
**अरणं** = जो शरण छ
**तत् किम्** = त्यो के हो अर्थात् हामीहरूको शरण के हो
**प्रष्टुं** = यही कुरा सोध्नको लागि
**प्रवृत्तः** = जान लागेको हुँ

**वाक्यार्थ–** म अहिले आत्मज्ञानी मुनिहरूका परम गुरु र साक्षात् श्रीहरिका अवतार योगेश्वर भगवान् कपिलसँग 'यो संसारमा एक मात्र शरणमा जान योग्य को छ ?' भन्ने कुरा सोध्न उहाँको आश्रममा जान लागेको हुँ।

**स वै भवाँल्लोकनिरीक्षणार्थमव्यक्तलिङ्गो विचरत्यपि स्वित्।**

**योगेश्वराणां गतिमन्धबुद्धिः कथं विचक्षीत गृहानुबन्धः॥ २०॥**

**पदार्थ–**
**अपिस्वित्** = पक्कै पनि
**सः** = उनै कपिल महर्षि
**अव्यक्तलिङ्गः सन्** = आफ्नो स्वरूपलाई लुकाएर
**वै** = निश्चय नै
**भवान्** = हजुरको रूपमा
**लोकनिरीक्षणार्थम्** = लोकको स्थिति हेर्न
**विचरति** = घुम्नुभएको त होइन ?
**गृहानुबन्धः** = घरसम्बन्धी व्यापार र व्यवहारमा लागेका
**अन्धबुद्धिः** = विवेकरहित मजस्ता व्यक्तिले
**योगेश्वराणां गतिम्** = हजुरजस्ता योगीहरूको प्रभावलाई
**कथं** = कसरी
**विचक्षीत** = जानोस्

**वाक्यार्थ–** पक्कै पनि संसारको दशा हेर्न यसरी आफ्नो रूप लुकाएर छद्म भेषमा घुमिरहने हजुर कपिल भगवान् हुनुहुन्छ होला ? घर–व्यवहारमा आसक्त मजस्ताले हजुरजस्ता योगीको प्रभावलाई कसरी जान्न सक्नु ?

**दृष्टः श्रमः कर्मत आत्मनो वै भर्तुर्गन्तुर्भवतश्चानुमन्ये।**

**यथासतोदानयनाद्यभावात् समूल इष्टो व्यवहारमार्गः॥ २१॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **गन्तुः** = भार बोकेर हिँड्ने | काम |
| **कर्मतः** = युद्ध आदि कर्मद्वारा | **भवतः च** = हजुरको पनि | **अभावात्** = नहुने भएकोले (तर |
| **भर्तुः** = पालन-पोषण गर्ने | **अनुमन्ये** = श्रम छ भनेर | व्यावहारिक घटबाट मिल्ने |
| **आत्मनः** = आफ्नो | अनुमान गर्दछु | हुनाले) |
| **श्रमः** = थकाइको | **यथा** = जसरी | **व्यवहारमार्गः** = व्यावहारिक |
| **दृष्टः** = अनुभव गरेँ | **असतः** = हुँदै नभएका घडाबाट | (प्रपञ्चको) बाटो |
| **वै** = त्यसैले निश्चय नै | **उदानयनादि** = पानी ल्याउने | **समूलः इष्टः** = सप्रमाण छ |

**वाक्यार्थ–** युद्ध आदि कर्म गर्दा मैले थकाइको अनुभव गरेको छु। भारी बोकेर हिँड्दा हजुरलाई पनि अवश्य थकाइ लागेको छ भन्ने मेरो अनुमान छ। यसैले 'म थाकेको छैन, व्यवहारमा बाहेक स्वामी-सेवकभाव सम्बन्ध सिद्ध हुँदैन' भन्ने हजुरको कथनलाई मैले बुझ्न सकेको छैन। किनभने 'काम गर्ने थाक्छ' यो व्यावहारिक सत्य हो। असत् घडाबाट पानी ल्याउन मिल्दैन तर व्यावहारिक घडाबाट मिल्छ त्यसैले व्यवहारमार्गलाई पनि सत्य नै मान्नुपर्ने हुन्छ, असत् मान्न मिल्दैन।

**स्थाल्यग्नितापात् पयसोऽभितापस्तत्तापतस्तण्डुलगर्भरन्धिः।**
**देहेन्द्रियास्वाशयसन्निकर्षात् तत्संसृतिः पुरुषस्यानुरोधात्॥ २२॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **तण्डुलगर्भरन्धिः** = चामलभित्रको | **अनुरोधात्** = उपाधिका |
| **स्थाल्यग्नितापात्** = आगामा | चुरो पनि पाक्छ (त्यस्तै) | धर्महरूको सञ्चार हुने भएकाले |
| बसालेको ताउली तात्दा | **देहेन्द्रियास्वाशयसन्निकर्षात्** = | **पुरुषस्य** = आत्माको (पनि) |
| **पयसः** = त्यस भित्रको पानी | देहको इन्द्रियका साथ, इन्द्रियको | **तत्संसृतिः** = त्यो परिश्रम आदि |
| **अभितापः** = तात्छ | प्राणका साथ, प्राणको मनका | दुःख वा संसृति हुनुपर्ने हुन्छ |
| **तत्तापतः** = फेरि त्यो पानीको | साथ र मनको आत्माका साथ | |
| तातोले | सम्बन्ध हुने भएकाले | |

**वाक्यार्थ–** 'मोटाउनु, दुब्लाउनु आदि शरीरका धर्मको प्रभाव आत्मामा कत्ति पनि पर्दैन' भन्ने हजुरको कुरामा पनि मलाई सन्देह नै छ। किनभने जसरी आगोमा बसालेको कसौँडी आगोले तात्दा त्यसभित्रको पानी पनि तात्छ, अनि मात्र त्यो तातो पानीले चामलको चुरो पाक्दछ यसै गरी शरीरको इन्द्रियका साथ, इन्द्रियको प्राणका साथ, प्राणको मनका साथ र मनको आत्माका साथ सम्बन्ध हुने भएकाले शरीरका धर्मको प्रभाव आत्मामा पर्दछ र थकाइ पनि लाग्दछ।

**विवरण–** माथिका दुई श्लोकमा आत्माको असङ्गता र संसारको मिथ्यात्वको विषयमा शङ्का प्रकट गरिएको छ। त्यसकारण मोटो-दुब्लो, भरिया-बटुवा आदि शरीरका धर्महरूले म आत्मालाई छुँदैनन् भनी जडभरतले उत्तर दिनुभएको थियो। यहाँ जडभरतले शरीरदेखि आफूलाई छुट्याएर उपदेश गर्नुभएको हो तर राजा रहूगणलाई आत्मा शरीरदेखि भिन्न हो भन्ने थाहा थिएन। त्यसैले उनी भन्दछन्– 'काम गरेपछि जो पनि थाक्दछ। जसरी युद्ध गर्दा त्यसको परिश्रमले म थाक्दछु, त्यसै गरी मेरो पाल्की बोक्दा हजुर पनि अवश्य थाकेको हुनुपर्दछ।' यस प्रकार राजाले आफ्नो

अनुभवद्वारा आत्मामा सुखदुःखको संसर्ग हुने अनुमान गरेका छन्। यो केवल व्यवहार भएको मात्र हो, वास्तविक भएको होइन भन्न पनि सुहाउँदैन। वस्तु प्रामाणिक नभई त्यसको व्यवहार हुँदैन। पानी ल्याउन सत्य घैँटोको आवश्यकता पर्दछ, सपनामा देखेको घैँटोमा विपनामा पानी ल्याउन मिल्दैन। खाने, पिउने, ल्याउने, लाने आदि सम्पूर्ण विश्वसनीय व्यवहारहरूको विषय भएको संसार कसरी मिथ्या एवम् काल्पनिक हुन सक्दछ ? अस्तित्वमा रहेको घैँटोबाट पानी ल्याउन-लान सकिन्छ तर नभएको घैँटोबाट पानी ल्याउन-लान सकिँदैन। यही नियमले संसारलाई प्रामाणिक एवम् सत्य सिद्ध गर्दछ। यदि परिश्रम-विश्राम, सुख-दुःख आदि व्यावहारिक धर्महरू शरीरका हुन् र आत्मालाई शरीरका धर्म सुख-दुःख आदिले छुँदैनन् भन्ने हो भने त्यो पनि ठीक छैन। बाहिरी उपाधिका धर्महरू भित्रसम्म सर्दै जाने लोकको अनुभव छ। जसरी भात पकाउन आगोमा कसौँडी बसाल्दा सबभन्दा पहिले कसौँडी तात्दछ अनि त्यसभित्र रहेको पानी तात्दछ र पानीमा राखिएको चामल तात्दछ, त्यसै गरी कुनै पनि काम गर्दा सबभन्दा पहिला शरीर थाक्दछ, शरीरको धर्म इन्द्रियमा इन्द्रियको धर्म प्राणमा र प्राणको धर्म मनमा पुगी त्यहाँभित्र बस्ने आत्मालाई त्यसले छुनुपर्दछ। उपाधिका धर्महरूको क्रमशः सञ्चार भएर आत्मा पनि मोटो-दुब्लो, रोगी-निरोगी आदि व्यवहारको विषय हुन्छ र यो व्यवहार काल्पनिक नभई सत्य नै हो भन्ने रहूगणको शङ्का हो। हुन त डोरीमा सर्पको व्यवहार गरियो भन्दैमा सर्प सत्य हुँदैन तर मानिसलाई आफ्नो व्यवहार र आफ्नो ज्ञानमा अनौठो विश्वास हुन्छ। भ्रमव्यवहारलाई पनि सत्य मान्ने त्यही शङ्का यहाँ रहूगणद्वारा व्यक्त गरिएको छ।

**शास्ताभिगोप्ता नृपतिः प्रजानां यः किङ्करो वै न पिनष्टि पिष्टम्।**
**स्वधर्ममाराधनमच्युतस्य यदीहमानो विजहात्यघौघम्॥ २३॥**

**पदार्थ—**
**नृपतिः** = राजा
**प्रजानां** = प्रजाहरूको
**अभिगोप्ता** = रक्षक हो
**शास्ता** = शासक पनि हो र
**यः** = जो असली राजा छ त्यो
**किङ्करः** = प्रजाहरूको सेवक हो
**स्वधर्मम्** = आफ्नो धर्मलाई
**अच्युतस्य** = भगवान्को
**आराधनम्** = सेवाको रूपमा
**ईहमानः** = विचार गर्ने राजाले
**वै** = निश्चय नै
**पिष्टम् न पिनष्टि** = पिठो पिन्दैन (प्रयोजनहीन कर्म गर्दैन)
**अघौघम्** = पापको समूहलाई
**विजहाति** = नष्ट गर्दछ

**वाक्यार्थ—** 'स्वभावैले जो जड छ उसलाई दण्ड दिनु पिठो पिने झैँ बेकार छ' भन्ने हजुरको भनाइ पनि सत्य छैन जस्तो लाग्छ किनभने राजा प्रजाको शासन र पालनका निम्ति नियुक्त गरिएको प्रजाहरूको सेवक हो। उसले उन्मत्तलाई दण्ड दिनु व्यर्थ हुन सक्दैन। सज्जनको रक्षा र दुष्टलाई दण्ड दिने आफ्नो धर्मलाई भगवान्को सेवा सम्झने राजाका सम्पूर्ण पापहरू नष्ट हुन्छन्।

**तन्मे भवान्नरदेवाभिमानमदेन तुच्छीकृतसत्तमस्य।**
**कृषीष्ट मैत्रीदृशमार्तबन्धो यथा तरे सदवध्यानमंहः॥ २४॥**

**पदार्थ—**
**हे आर्तबन्धो** = हे दुःखीका मित्र
**तत्** = त्यो (हजुरले भनेको कुरा

| | | |
|---|---|---|
| विपरीत बुझेको कारणले) | **मे** = म रहूगणका प्रति | **सदवध्यानम्** = महापुरुषको |
| **नरदेवाभिमानमदेन** = राजा हुँ | **भवान्** = हजुरले | तिरस्कारबाट हुने |
| भन्ने घमण्डले | **मैत्रीदृशम्** = प्रेमपूर्ण दृष्टि | **अंहः** = पापराशिबाट |
| **तुच्छीकृतसत्तमस्य** = महापुरुषको | **कृषीष्ट** = गराइदिनुहोस् | **तरे** = म पार तरूँ |
| तिरस्कार गर्ने | **यथा** = जसले गर्दा | |

**वाक्यार्थ–** हे दुःखीका मित्र ! राजा हुँ भन्ने घमण्डले उन्मत्त भएर मैले हजुरजस्ता महापुरुषको तिरस्कार गरेँ। अतः हजुरले दया गरेर ममाथि कृपादृष्टि दिनुहोस्, जसले महापुरुषको तिरस्काररूप यस महापापबाट मेरो उद्धार होस्।

**न विक्रिया विश्वसुहृत्सखस्य साम्येन वीताभिमतेस्तवापि।**
**महद्विमानात् स्वकृताद् हि मादृङ् नङ्क्ष्यत्यदूरादपि शूलपाणिः॥ २५॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **तव** = हजुरलाई मेरो | अपमानरूप अपराधले |
| **विश्वसुहृत्सखस्य** = | अपमानबाट | **मादृक्** = मजस्ता अपराधीहरू |
| विश्वबन्धुताको भावनाले युक्त | **विक्रिया न** = विकार छैन तैपनि | **शूलपाणिः अपि** = भगवान् शङ्कर |
| **साम्येन** = समदृष्टिको कारण | **हि** = निश्चय नै | जस्तै प्रभावशाली भए पनि |
| **वीताभिमतेः** = देह आदि | **स्वकृतात्** = आफूले गरेको | **अदूरात्** = चाँडै नै |
| अभिमान पनि हटिसकेको | **महद्विमानात्** = महापुरुषको | **नङ्क्ष्यति इति** = नाश हुन्छन् |

**वाक्यार्थ–** सबैमा समान दृष्टि राख्ने हुनाले शरीर आदिको अभिमान हटिसकेका भगवान्का परम भक्त हजुरको मनमा मैले गरेको तिरस्कारले कुनै विकार उत्पन्न हुँदैन। म जस्तो अपराधी भगवान् शङ्करजत्तिकै समर्थशाली भए तापनि आफ्नै अपराधका कारण छिट्टै नै नाश हुन्छ।

**विवरण–** यस अध्यायमा राजा रहूगणले परमज्ञानी जडभरतलाई अपमान गरेकोमा पश्चात्ताप गर्दै क्षमा मागेका छन्। राजाले अभिमानवश जडभरतको अपमान गरिहाले तर उनमा ज्ञानप्रति पूर्ण श्रद्धा थियो र उनी ज्ञानका अधिकारी पनि थिए। यसैले उनले झुकेर जडभरतलाई प्रणाम गरी आफ्नो धृष्टतामाथि क्षमा गर्न प्रार्थना गरे। उनले आफू इन्द्रको वज्र, भगवान् शङ्करको त्रिशूल र यमदण्डबाट पनि नडराउने तर ब्रह्मज्ञानीहरूको अपमानबाट ज्यादै डराउने बताएका छन्। आफू जोसँग ज्ञान सिक्ने उद्देश्यले हिँडेको हो, उनै भगवान् कपिल आफ्नो परीक्षा गरी ज्ञानको उपदेश गर्न यो स्वरूपमा आउनुभएको हो कि ! भन्ने राजाको विचार रहेको छ। उनले अन्तिममा प्रार्थना गरेका छन् कि, हे परमज्ञानी ! हजुर सबैका आत्मा हुनुभएकाले कसैप्रति पनि हजुरको दुर्भाव हुँदैन। मैले गरेको अपमानले पनि हजुरलाई क्रोधित बनाउन सक्दैन तर हजुर नरिसाए पनि महापुरुषको अपमान गरेका कारण मेरो नाश निश्चित छ। यदि हजुरले क्षमा दिनुभयो भने म यो भयङ्कर अपराधबाट बँच्न सक्दछु।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां पञ्चमस्कन्धे दशमोऽध्यायः॥ १०॥**

# अथ एकादशोऽध्यायः

## राजा रहूगणलाई जडभरतले दिएको उपदेश

**ब्राह्मण उवाच** (जडभरतले भने)

**अकोविदः कोविदवादवादान् वदस्यथो नातिविदां वरिष्ठः ।**
**न सूरयो हि व्यवहारमेनं तत्त्वावमर्शेन सहामनन्ति ॥ १ ॥**

**पदार्थ–**
**अकोविदः** = अविवेकी भएर पनि
**कोविदवादवादान्** = विवेकीले बोल्नेजस्ता (युक्तिपूर्ण लाग्ने तर बेकारका) कुरा
**वदसि** = बोल्दछौ
**अथो** = व्यवहारमा निपुण भए तापनि (तिमी)
**अतिविदां** = विवेकीहरूमा
**वरिष्ठः** = श्रेष्ठ
**न** = होइनौ
**हि** = किनभने
**सूरयः** = तत्त्वज्ञानीहरू
**एनं** = यो अहङ्कार र ममकारपूर्वकको
**व्यवहारम्** = व्यवहारलाई
**तत्त्वावमर्शेन सह** = पारमार्थिक तत्त्वविचारको रूपमा
**न आमनन्ति** = मान्दैनन्

**वाक्यार्थ–** हे राजा ! तिमी अविवेकी भएर पनि विवेकीका जस्ता तर बेकारका कुरा गरिरहेका छौ। वास्तवमा तिमी श्रेष्ठ पुरुष होइनौ किनभने तत्त्वज्ञानीहरू यस्तो अहङ्कार र ममकारपूर्वकको व्यवहारलाई वास्तविक मान्दैनन्।

**तथैव राजन्नुरुगार्हमेधवितानविद्योरुविजृम्भितेषु ।**
**न वेदवादेषु हि तत्त्ववादः प्रायेण शुद्धो नु चकास्ति साधुः ॥ २ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा रहूगण
**तथा एव** = त्यसै गरी
**उरुगार्हमेधवितानविद्योरु-विजृम्भितेषु** = घर-गृहस्थको व्यवहारसम्बन्धी अत्यन्त विस्तृत यज्ञहरूलाई बताउने
**वेदवादेषु** = अर्थवादरूप वेदवाक्यहरूमा समेत
**हि** = निश्चय नै
**प्रायेण** = धेरैजसो
**साधुः** = राग, द्वेष आदि दोषरहित र
**शुद्धः**= विशुद्ध (हिंसा आदि नहुने)
**तत्त्ववादः** = पारमार्थिक तत्त्वज्ञानको कुरा
**नु** = निश्चय नै
**न चकास्ति** = प्रकाशित हुँदैन

**वाक्यार्थ–** हे राजा रहूगण ! घरगृहस्थको व्यवहारसम्बन्धी अत्यन्त विस्तृत यज्ञहरूलाई बताउने वेदका अर्थवाद (प्रशंसापरक) वाक्यहरूले समेत राग आदि दोषरहित विशुद्ध पारमार्थिक तत्त्वज्ञानका कुरा गर्दैनन्।

**न तस्य तत्त्वग्रहणाय साक्षाद् वरीयसीरपि वाचः समासन् ।**
**स्वप्ने निरुक्त्या गृहमेधिसौख्यं न यस्य हेयानुमितं स्वयं स्यात् ॥ ३ ॥**

**पदार्थ–**
**यस्य** = जुन मानिसका लागि
**गृहमेधिसौख्यं** = गृहस्थाश्रममा गरिने यज्ञहरूद्वारा प्राप्त हुने स्वर्ग आदि सुख
**स्वयं** = आफैँ नै
**स्वप्ने** = स्वप्नरूप
**निरुक्त्या** = दृष्टान्तद्वारा
**हेयानुमितं** = त्याज्य र अनुमानद्वारा मात्र सिद्ध हुन्छन् भन्ने युक्ति
**न स्यात्** = उत्पन्न हुँदैन
**तस्य** = त्यस्ता मानिसका लागि
**वरीयसीः** = सर्वश्रेष्ठ प्रमाणरूप
**वाचः अपि** = तत्त्वप्रतिपादक उपनिषद्‌वाक्यहरू पनि
**साक्षात्** = यथार्थ
**तत्त्वग्रहणाय** = तत्त्व बुझाउनका लागि
**न समासन्** = समर्थ हुँदैनन्

**वाक्यार्थ–** जसका लागि गृहस्थाश्रममा गरिने यज्ञद्वारा प्राप्त हुने स्वर्ग आदि सुख स्वप्नसमान हेय एवं अनुमानद्वारा मात्र सिद्ध हुने किसिमका लाग्दैनन् उसलाई प्रत्यक्ष तत्त्वज्ञान गराउने उपनिषद्का वाक्यहरू पनि तत्त्वज्ञान गराउन समर्थ हुँदैनन्।

**विवरण–** ज्ञानका आदि स्रोत वेदहरू नै हुन् तर वेदहरूले पनि वैराग्य नभएको व्यक्तिलाई ज्ञान गराउन सक्दैनन्। यसर्थ ज्ञानका लागि वैराग्य हुनैपर्छ । संसारका पदार्थहरूको व्यवहार गरिन्छ भन्दैमा ती सत्य नै सिद्ध भइहाल्दैनन्। त्यही भएर विवेकीले **स्वप्ने निरुक्त्या** अर्थात् सपनाको दृष्टान्तद्वारा संसारलाई मिथ्या भनी बुझ्नुपर्दछ। सपनामा करोडौँ रुपियाँको आदानप्रदान भएको, भोजन गरेको, गाडीमा हिँडेको आदि जाग्रत्सँग दुरुस्तै मिल्ने व्यवहारहरू हुन्छन्। सपनाको करोडौँ रुपियाँद्वारा हामी जाग्रत् अवस्थामा एक पैसाको काम पनि लिन सक्दैनौँ तर पनि सपना देखुन्जेल त हामी त्यो पैसा आफूसँग भएकोमा खुसी हुन्छौँ। यी जाग्रत्का पदार्थहरू पनि कुनै दिन सपना झैँ नजानिँदो तवरले हराउनेछन् र हामी जिल्ल पर्नेछौँ। अनादि मायाबाट सुतेको जीव जुन दिन एक्कासी तत्त्वज्ञानमा ब्युझिन्छ त्यस वेलामा उसले स्वप्न र कल्पनाले रहित भएको आफ्नो वास्तविक रूपलाई जान्दछ। यसप्रकार सम्पूर्ण संसारलाई सपना झैँ मिथ्या ठानी वैराग्य उत्पन्न भएपछि मात्र हृदयमा ज्ञान उत्पन्न हुन्छ। संसारका आसक्तिलाई जस्ताको तस्तै राखी ज्ञानका कुरा मात्र गरेर आत्मज्ञान हुन सक्दैन भन्ने यो श्लोकको आशय हो।

**यावन्मनो रजसा पूरुषस्य सत्त्वेन वा तमसा वानुरुद्धम्।**
**चेतोभिराकूतिभिरातनोति निरङ्कुशं कुशलं चेतरं वा ॥ ४ ॥**

**पदार्थ–**
**यावत्** = जबसम्म
**पूरुषस्य** = मनुष्यको
**मनः** = मन
**सत्त्वेन** = सत्त्वगुणद्वारा
**रजसा** = रजोगुणद्वारा
**तमसा वा** = (अथवा) तमोगुणद्वारा पनि
**अनुरुद्धम्** = रोकिएको हुन्छ (तबसम्म)
**निरङ्कुशं** = स्वतन्त्र र मर्यादारहित भएका
**चेतोभिः** = ज्ञानेन्द्रिय र मनले
**आकूतिभिः** = कर्मेन्द्रियहरूद्वारा समेत
**कुशलं** = पुण्य
**इतरं** = भिन्न (पाप)
**वा** = अथवा
**च** = उभयमिश्र कर्मको
**आतनोति** = विस्तार गर्दछ

**वाक्यार्थ–** जबसम्म मानिसको मनमा सत्त्व, रज र तम गुण रहिरहन्छन् तबसम्म त्यस मनुष्यका

ज्ञानेन्द्रिय र कर्मेन्द्रियले विना रोकतोक पुण्य र पापका कर्महरू गरिरहन्छन्।

**स वासनात्मा विषयोपरक्तो गुणप्रवाहो विकृतः षोडशात्मा।**
**बिभ्रत्पृथङ्नामभि रूपभेदमन्तर्बहिष्ट्वं च पुरैस्तनोति॥ ५॥**

**पदार्थ—**
**वासनात्मा** = धर्माधर्मरूप वासनाले युक्त
**गुणप्रवाहः** = तीन गुणहरूद्वारा वशीभूत र
**विषयोपरक्तः** = विषयमा आसक्त
**विकृतः** = काम, क्रोध आदि दोषले विकृत भएको
**षोडशात्मा** = सोह्र कलाहरूमध्ये मुख्य
**सः** = त्यो मनले नै
**नामभिः** = देवता, मनुष्य, पशु-पक्षी आदि नामअनुरूप
**पृथक्** = छुट्टाछुट्टै
**रूपभेदम्** = रूपहरूलाई
**बिभ्रत्** = ग्रहण गर्दै
**पुरैः** = उपाधिका भेदले
**अन्तर्बहिष्ट्वं** = उत्तम एवं अधम भाव
**च** = पनि
**तनोति** = विस्तार गर्दछ

**वाक्यार्थ—** यो मन धर्म र अधर्मको कामनाले विषयमा अत्यन्त आसक्त छ। विषयासक्त हुनाले अत्यन्त चञ्चल र विकारयुक्त पनि छ। यही नै पञ्च प्राण, दश इन्द्रिय र मनरूप सोह्रै कलामध्ये मुख्य छ। यही मन नै भिन्न-भिन्न नामले देवता, मनुष्य आदि रूप धारण गरी उपाधिका भेदले जीवको उच्चता र नीचताको कारण बन्दछ।

**विवरण—** मनमा निरन्तर विषयका वासनाहरू रहिरहन्छन् त्यसैले त्यो विषयहरूले सधैँ युक्त हुन्छ। सम्पूर्ण जन्म-जन्मान्तरदेखिका वासनाहरू यहीँ बस्छन् र यो आत्माको उपाधि पनि हो। त्यसैले मनलाई **वासनात्मा** भनिएको हो। सत्त्व, रज आदि गुणका प्रवाहद्वारा आउने क्रोध, लोभ आदि विकारहरू पनि यसकै हुन्। जीवात्माका सोह्र कलाहरूमध्ये मुख्य मन नै हो। त्यसैले जीवात्मालाई षोडशात्मा पनि भनिन्छ। छान्दोग्योपनिषद् (६। ७। १)मा आत्मालाई षोडशकलाविशिष्ट बताइएको छ। पाँच ज्ञानेन्द्रियहरू, पाँच कर्मेन्द्रियहरू, पाँच प्राण र मन यी सोह्र कलाहरूमध्ये मन मुख्य हो र यसैले नै वासनासंस्कारअनुसार जीवलाई उचनीच योनिहरूमा लैजान्छ।

**दुःखं सुखं व्यतिरिक्तं च तीव्रं कालोपपन्नं फलमाव्यनक्ति।**
**आलिङ्ग्य मायारचितान्तरात्मा स्वदेहिनं संसृतिचक्रकूटः॥ ६॥**

**पदार्थ—**
**संसृतिचक्रकूटः** = संसारप्रवाहमा अल्मल्याउने
**मायारचितान्तरात्मा** = मायाका गुणको कारणले बनेको अन्तःकरणले
**स्वदेहिनं** = देहाभिमानी जीवलाई
**आलिङ्ग्य** = साथमा लिएर
**कालोपपन्नं** = समयको क्रमले प्राप्त हुने
**सुखं** = सुख
**दुःखं** = दुःख र
**व्यतिरिक्तं** = यिनदेखि भिन्न
**तीव्रं** = अनिवार्य भोग्नैपर्ने मोहरूप
**फलम् च** = कर्मफललाई पनि
**आव्यनक्ति** = पैदा गर्दछ

**वाक्यार्थ—** संसारचक्रमा घुमाइरहने यो कपटी मनले आफ्नो देहको अभिमान गर्ने जीवसित

मिलेर उसलाई समयानुसार प्राप्त भएको सुख-दुःखरूप कर्मफल र तीव्र मोहरूप अनिवार्य भोग्नैपर्ने फल प्रकट गरिरहन्छ।

**तावानयं व्यवहारः सदाविः क्षेत्रज्ञसाक्ष्यो भवति स्थूलसूक्ष्मः।**

**तस्मान्मनो लिङ्गमदो वदन्ति गुणागुणत्वस्य परावरस्य॥ ७॥**

**पदार्थ–**
**तावान्** = (जबसम्म मन रहन्छ) तबसम्म
**अयं** = यो
**स्थूलसूक्ष्मः** = जाग्रत् अवस्थाको स्थूल र स्वप्नावस्थाको सूक्ष्म
**क्षेत्रज्ञसाक्ष्यः** = जीवद्वारा प्रत्यक्ष रूपमा सम्पन्न गरिने
**व्यवहारः** = खानु, लाउनु आदि इन्द्रियको व्यवहार
**सदा** = निरन्तर
**आविः भवति** = प्रकाशित भइरहन्छ
**तस्मात्** = त्यसैले
**अदः मनः** = यस मनलाई
**गुणागुणत्वस्य** = त्रिगुणमय र गुणातीत
**परावरस्य** = अधम संसार र उत्कृष्ट मोक्षपदको
**लिङ्गम्** = कारण हो भनेर
**वदन्ति** = भन्दछन्

**वाक्यार्थ–** जबसम्म यो मन रहन्छ तबसम्म जीवको सामु जाग्रत् र स्वप्न अवस्थाका दृश्यहरू प्रकाशित भइरहन्छन् र जीवले तिनीहरूको प्रत्यक्ष रूपमा अनुभव गर्दछ। त्यसै कारण मनलाई त्रिगुणमय अधम संसार र गुणरहित उत्कृष्ट मोक्षपदको कारण मानिन्छ।

**गुणानुरक्तं व्यसनाय जन्तोः क्षेमाय नैर्गुण्यमथो मनः स्यात्।**

**यथा प्रदीपो घृतवर्तिमश्नन् शिखाः सधूमा भजति ह्यन्यदा स्वम्॥**

**पदं तथा गुणकर्मानुबद्धं वृत्तीर्मनः श्रयतेऽन्यत्र तत्त्वम्॥ ८॥**

**पदार्थ–**
**गुणानुरक्तं** = विषयमा आसक्त भएको
**मनः** = मन
**जन्तोः** = जीवका लागि
**व्यसनाय** = दुःखको कारण हुन्छ
**अथ** = अनि
**नैर्गुण्यम्** = गुणरहित मन चाहिँ
**क्षेमाय** = परम कल्याणको कारण
**स्यात्** = हुन्छ
**यथा** = जसरी
**प्रदीपः** = दियोले
**घृतवर्तिम्** = घिउमा भिजेको बत्तीलाई
**अश्नन्** = जलाउँदा
**सधूमाः** = धुँवा भएको
**शिखाः** = ज्वाला
**भजति** = पैदा गर्छ
**हि** = निश्चय नै
**अन्यदा** = अरू वेला
**स्वं पदं** = आफ्नो कारण अग्नितत्त्वमा लीन हुन्छ
**तथा** = त्यसै गरी
**गुणकर्मानुबद्धं** = त्रिगुणमय विषय र कर्ममा बाँधिएको
**मनः** = मनले
**वृत्तीः** = विभिन्न वृत्तिहरूलाई
**श्रयते** = ग्रहण गर्छ भने
**अन्यत्र** = विषय र कर्मबाट मुक्त हुँदा
**तत्त्वम्** = आफ्नो कारण आत्मतत्त्वमा लीन हुन्छ

**वाक्यार्थ–** विषयमा आसक्त भएको मन जीवका लागि दुःखको कारण बन्दछ भने यही मन विषयको प्रभावहीन भयो भने कल्याणको कारण बन्छ। जसरी जबसम्म दियोमा घिउ र बत्ती रहन्छ तबसम्म त्यसको ज्वालामा धुवाँको मुस्लो देखिन्छ, तर घिउ र बत्ती समाप्त हुनासाथ त्यो

ज्वाला आफ्नो कारण अग्नितत्त्वमा लीन हुन्छ, त्यसै गरी जबसम्म मन गुण र कर्ममा आसक्त भइरहन्छ तबसम्म त्यसले अनेक प्रकारका वृत्तिहरूलाई ग्रहण गरिरहन्छ तर कर्म र गुणलाई छोड्नासाथ आफ्नो कारण आत्मतत्त्वमा लीन हुन्छ।

**विवरण–** मन नै मुक्ति र संसार दुबैको कारण हो। जसरी ज्वालाले तेल, बत्ती आदि पाइरह्यो भने त्यो बलिरहन्छ र धुवाँ पनि निस्किरहन्छ। तर तेल र बत्ती नहुँदा ज्वाला ज्वालाको रूपमा नै रहँदैन। आफ्नो मूलकारण तेजतत्त्वमा लीन हुन्छ। त्यसै गरी मनले पनि जबसम्म सत्त्व, रज, तम गुणहरूलाई स्वीकार गरिरहन्छ, तबसम्म त्यसले सुख, दुःख आदि काला धुवाँहरूलाई निकालिरहन्छ। सुख र दुःख, शोक र मोह आदि व्यवहारहरू नै बन्धन हुन्। गुणरूपी भोजन पाएसम्म मनले यी काला धुवाँहरूजस्ता बन्धनहरू निकालिरहन्छ। जब गुणरूपी भोजन मनलाई प्राप्त हुँदैन, त्यसपछि मन मोक्षको कारण बन्छ। मन मोक्षको कारण हुनु भनेकै आफ्नो व्यष्टि अस्तित्वलाई छाडी सत्स्वरूप परमात्मासँग मिल्नु हो। जब मन सत्स्वरूप परमात्मासँग मिल्छ तब उसको छुट्टै अस्तित्व, अहङ्कार र सुखदुःख आदि बन्धनहरू तत्काल नै समाप्त हुन्छन्।

**एकादशासन् मनसो हि वृत्तय आकूतयः पञ्च धियोऽभिमानः।**
**मात्राणि कर्माणि पुरं च तासां वदन्ति हैकादश वीर भूमीः॥ ९॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **मनसः** = मनका | **कर्माणि** = विभिन्न कर्महरू र |
| **वीर** = हे वीर रहूगण | **वृत्तयः** = वृत्तिहरू | **पुरं च** = शरीर समेत गरेर |
| **हि** = निश्चय नै | **एकादश** = एघार ओटा | **ह** = निश्चय नै |
| **पञ्च** = पाँच | **आसन्** = रहेका छन् | **एकादश** = एघार ओटा छन् |
| **आकूतयः** = कर्मेन्द्रिय | **तासां** = ती वृत्तिहरूका | भनेर |
| **धियः** = पाँच ज्ञानेन्द्रिय र | **भूमीः** = विषयहरू पनि | **वदन्ति** = भन्दछन् |
| **अभिमानः** = अहङ्कार समेत | **मात्राणि** = पञ्च तन्मात्रा | |

**वाक्यार्थ–** हे वीर रहूगण ! पाँच कर्मेन्द्रिय, पाँच ज्ञानेन्द्रिय र अहङ्कार यी एघार मनका वृत्ति हुन्। पाँच प्रकारका कर्म, पाँच तन्मात्रा (विषय) र यो शरीर यी एघार ती वृत्तिका आधारभूत विषय हुन्।

**गन्धाकृतिस्पर्शरसश्रवांसि विसर्गरत्यर्त्यभिजल्पशिल्पाः।**
**एकादशं स्वीकरणं ममेति शय्यामहं द्वादशमेक आहुः॥ १०॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **विसर्गरत्यर्त्यभिजल्पशिल्पाः** = | स्वीकार गर्नु |
| **गन्धाकृतिस्पर्शरसश्रवांसि** = | मलत्याग, सम्भोग, गमन, | **एकादशं** = एघारौं अहङ्कारको |
| गन्ध, रूप, स्पर्श, रस र शब्द | भाषण र आदान–प्रदान यी | वृत्ति हो |
| यी पाँच ज्ञानेन्द्रियका विषयहरू | पाँच कर्मेन्द्रियका विषय हुन् र | **एके** = कसैले |
| हुन् | **मम इति स्वीकरणं** = मेरो भनी | **अहं** = अहङ्कारलाई र |

| | | |
|---|---|---|
| **शय्याम्** = त्यसको आश्रय | भएको शरीरलाई | **द्वादशम् आहुः** = बाह्रौँ भन्दछन् |

**वाक्यार्थ–** ज्ञानेन्द्रियका विषय गन्ध, रूप, स्पर्श, रस र शब्द हुन् भने मलत्याग, सम्भोग, गमन, भाषण र लिने-दिने आदि व्यवहार कर्मेन्द्रियका विषय हुन्। शरीरलाई यो मेरो हो भनेर स्विकार्नु अहङ्कारको विषय हो। कसै-कसैले अहङ्कारलाई मनको बाह्रौँ वृत्ति र त्यसको आश्रय शरीरलाई बाह्रौँ विषय मान्दछन्।

**द्रव्यस्वभावाशयकर्मकालैरेकादशामी मनसो विकाराः।**
**सहस्रशः शतशः कोटिशश्च क्षेत्रज्ञतो न मिथो न स्वतः स्युः॥ ११॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | विषय, स्वभाव, संस्कार, कर्म र | सत्ताद्वारा नै |
| **अमी** = यी | समयको प्रभावले | **स्युः** = प्रकाशित हुन्छन् |
| **एकादश** = एघार | **शतशः** = सयौँ | **न स्वतः** = आफ्नै सत्ताले वा |
| **मनसः** = मनका | **सहस्रशः** = हजारौँ र | **न मिथः** = परस्पर मिलेर समेत |
| **विकाराः** = वृत्तिहरू | **कोटिशः च** = करोडौँ बनी | प्रकाशित हुन सक्दैनन् |
| **द्रव्यस्वभावाशयकर्मकालैः** = | **क्षेत्रज्ञतः** = क्षेत्रज्ञ आत्माको | |

**वाक्यार्थ–** मनका यी एघार वृत्तिहरू विषय, स्वभाव, संस्कार, कर्म र समयको प्रभावले गर्दा सयौँ, हजारौँ र करोडौँ प्रकारका बन्दछन्। यी सबै वृत्तिहरू जीवात्माको सत्ताले नै ज्ञात हुने हुँदा क्षेत्रज्ञद्वारा नै प्रकाशित हुन्छन्। आत्माको सत्ताविना आफैँ वा परस्पर मिलेर पनि प्रकाशित हुन सक्दैनन्।

**क्षेत्रज्ञ एता मनसो विभूतीर्जीवस्य मायारचितस्य नित्याः।**
**आविर्हिताः क्वापि तिरोहिताश्च शुद्धो विचष्टे ह्यविशुद्धकर्तुः॥ १२॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **एताः विभूतीः** = यी वृत्तिहरू | अप्रकट रहन्छन्, (यी प्रवाहशील |
| **जीवस्य** = जीवको नै | **नित्याः** = प्रवाहरूपले नित्य भए | वृत्तिहरूलाई) |
| **मायारचितस्य** = मायाबाट | पनि | **शुद्धः क्षेत्रज्ञः** = शुद्ध क्षेत्रज्ञले |
| बनेको उपाधिभूत | **क्व अपि** = कहीँ (जाग्रत् र | (साक्षी रूपले) |
| **अविशुद्धकर्तुः** = बन्धनका | स्वप्नमा) | **अपि** = पनि |
| कारण भएका अशुद्ध कर्म गर्ने | **आविर्हिताः** = प्रकट हुन्छन् र | **हि** = निश्चय नै |
| **मनसः** = मनका | **तिरोहिताः च** = कतै सुषुप्तिमा | **विचष्टे** = प्रकाशित गरिरहन्छ |

**वाक्यार्थ–** मन मायाले बनाएको उपाधि हो। मायाबाट भएको हुनाले यो प्रायः संसारको बन्धनमा पर्ने गर्दछ र अशुद्ध कर्ममा प्रवृत्त भइरहन्छ। माथि भनिएका यसका वृत्तिहरूको धाराप्रवाह सधैँ बगिरहन्छन्। जाग्रत् र स्वप्न अवस्थामा ती प्रकट हुन्छन् भने सुषुप्ति अवस्थामा ती लुक्दछन्। विशुद्ध चित्स्वरूप क्षेत्रज्ञ आत्मा चाहिँ साक्षी बनेर सदा हेरिरहन्छ।

**क्षेत्रज्ञ आत्मा पुरुषः पुराणः साक्षात् स्वयंज्योतिरजः परेशः।**
**नारायणो भगवान् वासुदेवः स्वमाययात्मन्यवधीयमानः॥ १३॥**

**पदार्थ—**
**क्षेत्रज्ञः** = (यो) क्षेत्रज्ञ
**आत्मा** = व्यापक आत्मा नै
**पुरुषः** = जगत्को आदिकारण
**पुराणः** = सनातन
**साक्षात्** = अपरोक्ष
**स्वयंज्योतिः** = स्वयंप्रकाश
**अजः** = अजन्मा
**परेशः** = सर्वनियन्ता र
**स्वमायया** = आफ्नो मायाशक्तिद्वारा
**आत्मनि** = सबैको अन्तःकरणभित्र
**अवधीयमानः** = प्रेरक रूपले रहनुभएका
**नारायणः** = सम्पूर्ण प्राणीहरूका आश्रय हुनुभएका
**वासुदेवः भगवान्** = (शुद्ध अन्तःकरणद्वारा देखिने) भगवान् वासुदेव हुनुहुन्छ

**वाक्यार्थ—** यो क्षेत्रज्ञ आत्मा नै सर्वव्यापक, जगत्को आदिकारण, परिपूर्ण, अपरोक्ष, स्वयं प्रकाशमान, अजन्मा, ब्रह्मा आदिलाई समेत नियन्त्रण गर्ने र आफ्नो मायाशक्तिद्वारा सबैको अन्तःकरणभित्र बसेर सबैलाई प्रेरित गर्ने सम्पूर्ण प्राणीहरूको आश्रयभूत भगवान् वासुदेव हुनुहुन्छ।

**विवरण—** शरीर, इन्द्रिय, मन, बुद्धि आदि विकारी पदार्थहरूलाई क्षेत्र भनिन्छ भने यी सबै जड पदार्थलाई प्रकाशित गर्ने र चलाउने अन्तर्यामी तत्त्वलाई क्षेत्रज्ञ भनिन्छ। यस उपदेश प्रसङ्गमा पुराणपुरुष साक्षात् भगवान् वासुदेवलाई नै क्षेत्रज्ञ भनी बताइएको छ। निर्गुण ब्रह्मतत्त्व नै सर्वव्यापक र समष्टि उपाधि मायालाई लिँदा सर्वव्यापक ईश्वर वासुदेवस्वरूप बन्दछ भने सानो उपाधि अन्तःकरणलाई लिँदा अन्तःकरणैपिच्छे छुट्टाछुट्टै अन्तर्यामी बन्दछ। व्यक्ति-व्यक्ति पिच्छेका छुट्टाछुट्टै मन र त्यसका वासनासंस्कारलाई त्यही उपाधिको क्षेत्रज्ञले छुट्टाछुट्टै प्रकाशित गर्दछ तर पनि यो स्वरूपतः स्वयंप्रकाश परमात्मा नै हो। यो साक्षी क्षेत्रज्ञ कुनै पनि अन्तःकरणका दोषहरूले रहित शुद्ध छ र यसले संसारलाई केवल प्रकाशित गरिरहन्छ।

जीवद्वारा जानिएका र नजानिएका हरेक पदार्थहरूलाई अन्तर्यामी साक्षीले प्रकाशित गर्दछ। आँखा, कान आदि इन्द्रियहरूको प्रयोग गरेर कसैले घैंटो, कपडा आदि पदार्थलाई जान्यो भने इन्द्रियवृत्तिको माध्यमले साक्षीले नै त्यो कुरा जानेको हो। यो घैंटो हो भन्ने जानिरहँदा आफूलाई घैंटोको ज्ञान भएको कुरा स्वतः थाहा छ, साक्षीले ज्ञानलाई प्रकाशित गर्छ भनेको यही हो। मलाई गणित आउँदैन भन्दा आफूले गणित नजानेको कुरा साक्षीले जानिरहेको छ, साक्षीले अज्ञानलाई प्रकाशित गर्छ भनेको यही हो। जान्नु र नजान्नु मनका वृत्तिहरू हुन्, तर क्षेत्रज्ञ साक्षीले दुबैलाई प्रकाशित गर्दछ। मनको वृत्ति रहने जाग्रत् र स्वप्नमा मनकै वृत्तिद्वारा अनि मन नरहने सुषुप्ति, मूर्च्छा आदि अवस्थामा आफैंले नै ज्ञान र अज्ञानलाई प्रकाशित गर्ने क्षेत्रज्ञ स्वरूपतः परमात्मा नै हो।

**यथानिलः स्थावरजङ्गमानामात्मस्वरूपेण निविष्ट ईशेत्।**
**एवं परो भगवान् वासुदेवः क्षेत्रज्ञ आत्मेदमनुप्रविष्टः॥ १४॥**

**पदार्थ–**
**यथा** = जसरी
**स्थावरजङ्गमानाम्** = सम्पूर्ण चराचरप्राणीहरू भित्र
**आत्मस्वरूपेण** = प्राणस्वरूपले
**निविष्टः** = पसेको
**अनिलः** = वायुले (तिनीहरूलाई)
**ईशेत्** = प्रेरित गर्दछ
**एवं** = त्यसै गरी
**परः** = परम पुरुष
**भगवान्** = ऐश्वर्यसम्पन्न
**वासुदेवः** = वासुदेव नै
**क्षेत्रज्ञः** = सबैको साक्षी भएर
**आत्मा** = आत्मस्वरूपले
**इदं** = यो सम्पूर्ण प्रपञ्चमा
**अनुप्रविष्टः** = व्याप्त हुनुभएको छ

**वाक्यार्थ–** जसरी वायुले सम्पूर्ण चराचर प्राणीहरूभित्र प्राणस्वरूपले पसेर तिनलाई प्रेरित गर्दछ त्यसै गरी परमपुरुष भगवान् वासुदेवले नै सबैको साक्षी भएर आत्मस्वरूपले सम्पूर्ण प्रपञ्चमा व्याप्त बनेर यसलाई सञ्चालन गर्नुभएको छ।

**न यावदेतां तनुभृन्नरेन्द्र विधूय मायां वयुनोदयेन।**
**विमुक्तसङ्गो जितषट्सपत्नो वेदात्मतत्त्वं भ्रमतीह तावत्॥ १५॥**

**पदार्थ–**
**नरेन्द्र** = हे रहूगण
**यावत्** = जबसम्म
**विमुक्तसङ्गः** = सम्पूर्ण आसक्तिबाट मुक्त भएर
**जितषट्सपत्नः** = काम, क्रोध आदि छ शत्रुहरूलाई जिती
**तनुभृत्** = प्राणीले
**वयुनोदयेन** = ज्ञानको उदयद्वारा
**एतां** = यो
**मायां** = मायालाई
**विधूय** = तिरस्कार गरी
**आत्मतत्त्वं** = आफ्नो यथार्थ स्वरूपलाई
**न वेद** = जान्दैन
**तावत्** = तबसम्म
**इह** = यही संसारमा नै
**भ्रमति** = घुमिरहन्छ

**वाक्यार्थ–** हे राजा ! जबसम्म मानिसले ज्ञानको उदयद्वारा यो संसारको कारण भएको मायाको विस्तारलाई तिरस्कार गरी आसक्तिबाट रहित भई काम, क्रोध आदि छ शत्रुलाई जितेर आफ्नो यथार्थस्वरूप आत्मतत्त्वलाई जान्दैन तबसम्म संसारचक्रमा घुमिरहन्छ।

**न यावदेतन्मन आत्मलिङ्गं संसारतापावपनं जनस्य।**
**यच्छोकमोहामयरागलोभवैरानुबन्धं ममतां विधत्ते॥ १६॥**

**पदार्थ–**
**आत्मलिङ्गं** = आत्माको उपाधि भएको
**एतत्** = यो
**मनः** = मन नै
**जनस्य** = प्राणीको लागि
**संसारतापावपनं** = दुःखमय संसारको कारण हो भन्ने कुरा
**यावत्** = जबसम्म
**न** = भासित हुँदैन (तबसम्म प्राणी संसारचक्रमा घुमिरहन्छ)
**यत्** = किनभने (त्यो मनले)
**शोकमोहामयरागलोभ-वैरानुबन्धं** = शोक, मोह, रोग, राग, लोभ र शत्रुता आदिको संस्कारलाई र
**ममतां** = ममतालाई समेत
**विधत्ते** = बढाइरहन्छ

**वाक्यार्थ–** जबसम्म जीवलाई यो मन आत्माको उपाधि र संसारदुःखको कारण हो भन्ने कुरा निश्चय हुँदैन तबसम्म त्यसले संसारबाट मुक्ति पाउँदैन किनभने उसको चित्तले शोक, मोह, रोग, राग, लोभ, वैरभाव आदिको संस्कार र मेरो–मेरो भन्ने अहङ्कारलाई बढाइरहन्छ।

**भ्रातृव्यमेनं तददभ्रवीर्यमुपेक्षयाध्येधितमप्रमत्तः।**
**गुरोर्हरेश्चरणोपासनास्त्रो जहि व्यलीकं स्वयमात्ममोषम्॥ १७॥**

**पदार्थ—**
**तत्** = (हे राजा) त्यसैले
**अप्रमत्तः** = सावधान भएर
**गुरोः** = गुरुको र
**हरेः** = भगवान् श्रीहरिको
**चरणोपासनास्त्रः** = चरणको उपासनारूपी हतियारद्धारा
**अदभ्रवीर्यम्** = अत्यन्त बलियो
**उपेक्षया** = आफूले वास्ता नगरेर
**अध्येधितम्** = रुन् शक्तिशाली बनेको (अनि)
**स्वयं** = स्वरूपतः
**व्यलीकं** = असत्य हुँदाहुँदै पनि
**आत्ममोषम्** = आत्मालाई संसार चक्करमा छक्याइरहने
**एनं** = यो
**भ्रातृव्यम्** = शत्रुसमान मनलाई
**जहि** = (मार) जितिहाल

**वाक्यार्थ—** तिमीले वास्ता नगरेर रुन्-रुन् शक्तिशाली बन्दै गएको यो मन नै तिम्रो बलियो शत्रु हो। यथार्थमा असत्य भएर पनि यसले तिमीलाई छक्याइरहेको छ र यस संसारचक्रमा घुमाइरहेको छ। तसर्थ सावधानीपूर्वक सद्गुरु र भगवान् श्रीहरिका चरणको उपासनारूप हतियारको सहारा लिएर यो शत्रुरूप मनलाई तत्काल जितिहाल।

**विवरण—** मन ज्यादै प्रबल छ। मनको शक्ति मनुष्यले उपेक्षा गर्नाले नै बढेको हो। मनुष्यले ध्यान, जप, चिन्तन आदि अध्यात्मसाधना गर्न लाग्दा मनले काम, लोभ आदि दुर्वृत्तिहरूलाई ल्याई जीवात्मालाई पछारिदिन्छ, तर मनलाई प्राप्त भएको शक्ति आत्माकै चेतनसत्ताद्वारा प्राप्त भएको हो। मन आत्माभन्दा बेग्लै कुनै शक्ति होइन। आफूले गरेका विभिन्न कर्महरूको वासनाका समूहको नाम नै मन हो। यदि दृढ इच्छाशक्तिका साथ गरेका शुभकर्महरूद्वारा शुभ वासना बढाउँदै जाने हो र मनका स्वतन्त्र व्यवहारमा उपेक्षादृष्टि नराखी अलि नियन्त्रणकारी कडा दृष्टि लगाउने हो भने प्रबल शक्तिशाली मन पनि अत्यन्त दुर्बल बन्दछ। मनको स्वच्छन्द प्रवृत्तिका कारणले नै आफू बारम्बार जन्मन, बुढो हुन र मर्न परेको हो भनी यसका प्रवृत्तिहरूमा पूरा विश्वास नगरी शङ्काकै दृष्टिले यसलाई शत्रुको रूपमा हेर्ने हो भने आत्माकै पूरा विश्वास पाएर प्रचण्ड शक्तिशाली बनेको मन एक दिन नष्ट हुन्छ। यहाँ मनलाई नष्ट गर्नु भनेर मनको अशुद्धि र चञ्चलतालाई नष्ट गर्नु भनिएको हो। यसको लागि गुरु र भगवान्का चरणको उपासना गर्नुपर्छ। उपासनाद्वारा मन स्थिर र शुद्ध भएपछि आत्मज्ञानमा मन बाधक बन्दैन भन्ने उपदेश यहाँ दिइएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां पञ्चमस्कन्धे**
**ब्राह्मणरहूगणसंवादे एकादशोऽध्यायः॥ ११॥**

# अथ द्वादशोऽध्यायः

## राजा रहूगणको प्रश्न र जडभरतको उत्तर

**रहूगण उवाच** (राजा रहूगणले भने)

**नमो नमः कारणविग्रहाय स्वरूपतुच्छीकृतविग्रहाय।**

**नमोऽवधूत द्विजबन्धुलिङ्गनिगूढनित्यानुभवाय तुभ्यम्॥ १॥**

**पदार्थ–**
**कारणविग्रहाय** = जगत्को उद्धारका लागि देह धारण गर्नुहुने (तर) **स्वरूपतुच्छीकृतविग्रहाय** = आत्मानन्दको अनुभवद्वारा द्वैतभावलाई तिरस्कार गर्नुभएका हजुरलाई **नमः नमः** = बारम्बार प्रणाम छ **अवधूत** = हे अवधूत भगवान् **द्विजबन्धुलिङ्गनिगूढनित्यानुभवाय** = जड ब्राह्मणको वेषद्वारा आफ्नो नित्यविज्ञानमय स्वरूपलाई गुप्त राख्नुहुने **तुभ्यम्** = हजुरलाई **नमः** = प्रणाम गर्दछु

**वाक्यार्थ–** हे भगवान्! म हजुरलाई नमस्कार गर्दछु। हजुरले जगत्को उद्धार गर्नकै निम्ति यो शरीर धारण गर्नुभएको हो। परमानन्दलाई प्राप्त गरी स्थूल शरीरप्रतिको आसक्तिलाई छाडेर जड ब्राह्मणको वेशमा आफ्नो नित्यज्ञानमय स्वरूपलाई लुकाइरहनुभएका हजुरलाई म बारम्बार प्रणाम गर्दछु।

**विवरण–** सांसारिक प्राणीहरू आ-आफ्ना वासनाहरूलाई पूरा गर्न मात्र जन्म लिन्छन्, तर महापुरुषहरूको जन्म संसारलाई कल्याणको बाटो देखाउने उद्देश्यले हुन्छ। ईश्वरले नै आफूले रचेका प्राणीहरूलाई शुभ कर्म र मुक्तिको बाटो देखाई तिनीहरूको रक्षा गर्न सन्तहरूको रूप धारण गर्नुहुन्छ। महापुरुषहरू आफ्नो परमानन्दस्वरूपको अनुभवमा सधैँ चुर्लुम्म डुबेर शरीरको ख्याल नै राख्दैनन्। **तुच्छीकृत** अर्थात् शरीरलाई अत्यन्त झूठो सम्झने महापुरुषहरू सपनाबाट बिउँझिएको मानिसले सपनाका पदार्थमा आसक्ति नगरे झैँ शरीरमा पटक्कै आसक्ति गर्दैनन्।

**ज्वरामयार्तस्य यथागदं सन् निदाघदग्धस्य यथा हिमाम्भः।**

**कुदेहमानाहिविदष्टदृष्टेर्ब्रह्मन् वचस्तेऽमृतमौषधं मे॥ २॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे ब्राह्मण **यथा** = जसरी **ज्वरामयार्तस्य** = ज्वरोले ग्रस्त रोगीका लागि **अगदं** = औषधी र **यथा** = जसरी **निदाघदग्धस्य** = घामको रापले पोलेका व्यक्तिका लागि **हिमाम्भः** = शीतल जल **सत्** = आनन्ददायक हुन्छ (त्यसै गरी) **कुदेहमानाहिविदष्टदृष्टेः** = देहाभिमानरूपी सर्पद्वारा विवेकदृष्टि डसिएको **मे** = मेरो लागि **ते** = हजुरको **अमृतम्** = अमृतमय **वचः** = वचन **औषधम्** = औषधी बराबर छ

**वाक्यार्थ–** हे ब्राह्मण ! जसरी ज्वरोले सताइएको रोगीलाई मिठो औषधी तथा गर्मीले आत्तिएको व्यक्तिलाई चिसो जल अमृतसमान हुन्छ त्यसै गरी देहाभिमानरूप विषालु सर्पले डसेर ज्ञानदृष्टि नष्ट भएको मलाई हजुरका यी अमृतमय वचन औषधीसमान छन्।

**तस्माद् भवन्तं मम संशयार्थं प्रक्ष्यामि पश्चादधुना सुबोधम्।**
**अध्यात्मयोगग्रथितं तवोक्तमाख्याहि कौतूहलचेतसो मे ॥ ३ ॥**

| | | |
|---|---|---|
| पदार्थ– | **पश्चात्** = पछि | **अध्यात्मयोगग्रथितं** = आत्मा र परमात्माको एकतासम्बन्धी |
| **तस्मात्** = त्यसकारण | **प्रक्ष्यामि** = प्रश्न गर्नेछु | **तवोक्तम्** = हजुरले बताउनुभएको उपदेशलाई |
| **मम** = मेरो | **अधुना** = अहिले | **सुबोधम्** = सजिलै बुझिने गरी |
| **संशयार्थं** = शङ्का निवारण गर्नका लागि | **कौतूहलचेतसः** = उत्सुक चित्त भएको | **आख्याहि** = (फेरि) बताउनुहोस् |
| **भवन्तं** = हजुरलाई | **मे** = मलाई | |

**वाक्यार्थ–** हे देव ! मेरा संशयको निवृत्ति गर्न हजुरसँग अरू प्रश्न पछि गरौँला। त्यसभन्दा पहिले अहिले हजुरले अध्यात्मयोगले पूर्ण भएको जुन उपदेश मलाई दिनुभयो त्यसलाई सजिलो गरी बुझाइदिनुहोस्।

**यदाह योगेश्वर दृश्यमानं क्रियाफलं सद्व्यवहारमूलम्।**
**न ह्यञ्जसा तत्त्वविमर्शनाय भवानमुष्मिन् भ्रमते मनो मे ॥ ४ ॥**

| | | |
|---|---|---|
| पदार्थ– | **सद्व्यवहारमूलम्** = केवल व्यवहारका आधारमा टिकेका | **न** = रहँदैनन् भनेर |
| **योगेश्वर** = हे योगेश्वर | **क्रियाफलं** = भारी बोक्नु आदि क्रियाका सुखदुःख आदि फल | **यत्** = जे |
| **भवान्** = हजुरले | **तत्त्वविमर्शनाय** = तत्त्वविचारको लागि | **आह** = बताउनुभयो |
| **हि** = निश्चय नै | **सत्** = सत्य रूपले | **अमुष्मिन्** = यो कुरामा |
| **अञ्जसा** = सजिलै | | **मे मनः** = मेरो मन |
| **दृश्यमानं** = प्रत्यक्ष आदि प्रमाणद्वारा सिद्ध भए पनि | | **भ्रमते** = भौँतारिइरहेको छ |

**वाक्यार्थ–** भारी बोक्ने आदि कर्म र तिनबाट हुने थकाइ इत्यादि फल यी सबै प्रत्यक्ष भए तापनि ती केवल कामचलाउ मात्र हुन्, वास्तवमा सत्य होइनन्, किनभने तत्त्वविचार गर्दा यी केही पनि रहँदैनन् भन्ने विषयमा मेरो बुद्धि भौँतारिइरहेको छ। (हजुरको त्यस कुरालाई मैले बुझ्न सकेको छैन।)

**ब्राह्मण उवाच** (जडभरतले भने)

**अयं जनो नाम चलन् पृथिव्यां यः पार्थिवः पार्थिव कस्य हेतोः।**
**तस्यापि चाङ्घ्र्योरधि गुल्फजङ्घाजानूरुमध्योरशिरोधरांसाः ॥ ५ ॥**

| | | |
|---|---|---|
| पदार्थ– | **पार्थिव** = हे राजा | **अयं** = यो शरीर |

**पार्थिवः** = पृथिवीको विकार हो
**कस्य हेतोः** = कुनै कारणले
**पृथिव्यां** = पृथिवीमा
**चलन्** = हिँड्दा (त्यसको)
**जनः नाम** = बटुवा आदि नाम बन्दछ
**यः** = जुन
**तस्य अपि च** = त्यो पृथिवीको डल्लोको पनि
**अङ्घ्र्योः अधि** = दुई गोडाभन्दा माथि
**गुल्फजङ्घाजानूरुमध्योर-**
**शिरोधरांसाः** = गोलीगाँठा, पिँडौला, घुँडा, तिघ्रा, कम्मर, छाती, गर्दन, काँध आदि अङ्गहरू छन्

**वाक्यार्थ–** हे राजा ! यो शरीर पृथिवीकै विकार हो। जब यसले पृथिवीमा हिँडडुल गर्न थाल्छ त्यस वेला यसलाई बटुवा आदि नामले पुकारिन्छ। यसका दुई ओटा खुट्टा, तिनमाथि क्रमैसँग गोलीगाँठा, पिँडौला, घुँडा, तिघ्रा, कम्मर, छाती, घाँटी, काँध आदि अङ्गहरू छन्।

**अंसेऽधि दार्वी शिबिका च यस्यां सौवीरराजेत्यपदेश आस्ते।**
**यस्मिन् भवान् रूढनिजाभिमानो राजास्मि सिन्धुष्विति दुर्मदान्धः॥ ६॥**

**पदार्थ–**
**अंसे अधि** = काँधमाथि
**दार्वी** = काठको
**शिबिका** = पाल्की छ
**यस्यां च** = जुन पाल्कीमा
**सौवीरराजा इति** = सौवीर देशको राजा भनिने
**अपदेशः** = नाम मात्रको वस्तु
**आस्ते** = रहेको छ
**यस्मिन्**= जुन वस्तुमा
**रूढनिजाभिमानः** = मै हुँ भन्ने अभिमान गरेका
**भवान्** = तपाईं
**सिन्धुषु** = सिन्धुदेशको
**राजा** = राजा
**अस्मि इति** = हुँ भनी
**दुर्मदान्धः** = खराब अहङ्कारले अन्धो बनेका हुनुहुन्छ

**वाक्यार्थ–** काँधमाथि काठको पाल्की राखिएको छ। त्यसमा सौवीरदेशका राजा भनिने पृथिवीको विकार एउटा नाम मात्रको वस्तु बसेको छ। त्यस देह भनिने पृथिवीको विकारमा अभिमान गरेर म सिन्धुदेशको राजा हुँ भन्ने खराब अहङ्कारले तपाईं अन्धो भइरहनुभएको छ।

**शोच्यानिमांस्त्वमधिकष्टदीनान् विष्ट्या निगृह्णन्निरनुग्रहोऽसि।**
**जनस्य गोप्तास्मि विकत्थमानो न शोभसे वृद्धसभासु धृष्टः॥ ७॥**

**पदार्थ–**
**अधिकष्टदीनान्** = पाल्की बोक्नुपर्दा अति दुःख पाइरहेका
**इमान्** = यी
**शोच्यान्** = दयनीय डोलेहरूलाई
**विष्ट्या** = बलजफती
**निगृह्णन्** = नियन्त्रणमा लिने
**त्वम्** = तपाईं
**निरनुग्रहः** = दयाहीन
**असि** = बनिरहनुभएको छ
**जनस्य** = जनताको
**गोप्ता** = रक्षक
**अस्मि** = हुँ भनी
**विकत्थमानः** = ठुला-ठुला कुरा गर्ने तर
**धृष्टः** = भित्र-भित्र अत्यन्त अहङ्कारी (तपाईं)
**वृद्धसभासु**= ज्ञानीहरूको सभामा
**न शोभसे**= सुहाउनुहुन्न

**वाक्यार्थ–** यस प्रकार पाल्की बोक्नुपर्दा अति दुःख पाइरहेका विचरा यी डोलेहरूलाई बलजफती पाल्की बोकाएर हिँड्नुमा तपाईंको कुनै श्रेष्ठता सिद्ध हुँदैन। वास्तवमा तपाईं अत्यन्त अहङ्कारी र निर्दयी हुनुहुन्छ। किनभने तपाईंले यिनीहरूलाई आफ्नो काममा लगाउँदै म लोकको

रक्षा गर्नेवाला हुँ भनी ठुला-ठुला कुरा गरिरहनुभएको छ। यस्तो कुरा गर्ने व्यक्ति ज्ञानीहरूको सभामा कत्ति पनि सुहाउँदैन।

**यदा क्षितावेव चराचरस्य विदाम निष्ठां प्रभवं च नित्यम्।**
**तन्नामतोऽन्यद् व्यवहारमूलं निरूप्यतां सत् क्रिययानुमेयम्॥ ८॥**

**पदार्थ–**
**यदा** = जब
**चराचरस्य** = चर-अचर सम्पूर्ण प्राणीहरूको
**नित्यम्** = सधैँ
**निष्ठां** = स्थिति र
**प्रभवं च** = उत्पत्ति समेत
**क्षितौ एव** = पृथिवीमा नै
**विदाम** = देख्दछौँ भने
**तत्** = त्यस समयमा
**क्रियया** = क्रियावाला भएकाले
**सत्** = सत्य हो भनी
**अनुमेयम्** = अनुमान गरिनुपर्ने
**व्यवहारमूलं** = व्यवहारको कारण
**नामतः** = घैँटो, शरीर आदि नामभन्दा
**अन्यत्** = अरू के हुन सक्छ र ?
**निरूप्यतां** = विचार गरेर भन्नुस्

**वाक्यार्थ–** यो सम्पूर्ण चराचर जगत् सधैँ पृथ्वीबाट उत्पन्न भएर पृथ्वीमैँ लीन भएको हामीले देखेकै छौँ। अतः पृथिवी नै सबैको मूल कारण हो। क्रियाभेदले गर्दा बेग्लाबेग्लै नाम भएका मात्र हुन्। त्यसमा व्यवहारको कारण घैँटो, शरीर आदि नामबाहेक अरू कुनै वस्तु छैन। यदि अरू कुनै कारण छ भने विचार गरेर भन्नुस् त।

**एवं निरुक्तं क्षितिशब्दवृत्तमसन्निधानात् परमाणवो ये।**
**अविद्यया मनसा कल्पितास्ते येषां समूहेन कृतो विशेषः॥ ९॥**

**पदार्थ–**
**असन्निधानात्** = सूक्ष्म परमाणुरूप कारणमा पुग्दा अदृश्य र असत् बन्ने हुनाले
**क्षितिशब्दवृत्तम्** = पृथिवी भनिने वस्तु पनि
**एवं** = यस्तै (असत् नै हो भन्ने)
**निरुक्तं** = प्रमाणित हुन्छ
**येषां** = जुन परमाणुहरूको
**समूहेन** = समूहद्वारा
**विशेषः** = पृथिवी भनिने विशेष वस्तु
**कृतः** = बनाइयो
**ये परमाणवः** = जसलाई परमाणु भनिन्छ
**ते** = तिनीहरू पनि
**अविद्यया** = अविद्याद्वारा
**मनसा** = मनले नै
**कल्पिताः** = कल्पना गरिएका हुन्

**वाक्यार्थ–** यसै प्रकार पृथिवी भनिने वस्तु पनि मिथ्या नै हो किनभने यो पनि आफ्ना कारणरूप सूक्ष्म परमाणुहरूमा लीन हुन्छ। जुन परमाणुको समूह यो पृथिवी हो ती परमाणु पनि नित्य होइनन्, केवल अविद्याका कारण मनैले कल्पना गरिएका हुन्। वास्तवमा यिनको कुनै पनि सत्ता छैन।

**एवं कृशं स्थूलमणुर्बृहद् यदसच्च सज्जीवमजीवमन्यत्।**
**द्रव्यस्वभावाशयकालकर्मनाम्नाजयावेहि कृतं द्वितीयम्॥ १०॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**कृशं** = दुब्लो

| | | |
|---|---|---|
| **स्थूलम्** = मोटो | **अजीवम् च** = जड समेत | आदि नाम भएको |
| **अणु** = सानो | **यत् अन्यत्** = अरू जति पनि | **अजया** = मायाद्वारा नै |
| **बृहत्** = ठुलो | वस्तुहरू छन् ती सबै | **द्वितीयम्** = भिन्न-भिन्न |
| **असत्** = (असत्य) कार्य | **द्रव्यस्वभावाशयकालकर्मनाम्ना** = | **कृतं** = बनाइएको हो भन्ने |
| **सत्** = (सत्य) कारण | पृथिवी आदि वस्तु, तिनका | **अवेहि** = जान्नुहोस् |
| **जीवम्** = चेतन र | स्वभाव, संस्कार, काल र कर्म | |

**वाक्यार्थ–** यसै गरी दुब्लो-मोटो, सानो-ठुलो, कार्य-कारण, चेतन-अचेतन आदि जुन भेदभाव देखिन्छ, त्यो पनि मिथ्या नै हो किनभने यो भेदभाव पनि द्रव्य, स्वभाव, संस्कार, काल, कर्म आदि नाम भएको भगवान्‌को मायाद्वारा नै हुने हो।

**विवरण–** यस प्रसङ्गमा कार्यरूप पार्थिव पदार्थ र त्यसका कारण परमाणुहरूलाई मिथ्या सिद्ध गरिएको छ। माटो घैँटोको उपादान कारण हो। वास्तवमा माटो नै विशेष आकारप्रकारले मिलेर बस्दा घैँटो, गमला आदि नाम धारण गर्दछ, त्यहाँ माटोबाहेक केही छैन। यसप्रकार संसारका सम्पूर्ण स्थूल पदार्थहरू पार्थिव हुन्, पृथ्वीका कार्य हुन्। छान्दोग्योपनिषद् (६/१/४)मा बताइएको छ– **वाचारम्भणं विकारो नामधेयं मृत्तिकेत्येव सत्यम्** अर्थात् जसरी घैँटो, गमला आदि केवल नाम मात्रका हुन्, त्यहाँ रहेको माटो नै सत्य हो। यसै प्रकार माटो पनि आफ्नो कारण परमाणुमा कल्पित हो। स-साना परमाणुपुञ्जबाहेक माटो भन्ने कुनै ठोस द्रव्य छैन। परमाणु पनि अविद्याद्वारा परमात्मामा कल्पित मात्र हो। यसप्रकार सारा संसार परमात्मामा कल्पित भएकाले यो मिथ्या हो।

दर्शनशास्त्रमा जगत्‌को उत्पत्तिसम्बन्धी चार धारणाहरू प्रसिद्ध छन्। न्यायवैशेषिकको आरम्भवाद, साङ्ख्यको परिणामवाद, बौद्धको संघातवाद र वेदान्तको विवर्तवाद। परमाणुहरूको परस्परसम्बन्ध भई द्व्यणुक र त्रसरेणु क्रमले जगत्‌को उत्पत्ति हुन्छ भन्ने आरम्भवादीहरूको मत हो भने दुध दहीको रूपमा परिणत भएझैँ प्रकृति जगत्‌को रूपमा परिणत हुन्छ भन्ने मत परिणामवाद हो। त्यसै गरी संसार भनेको स-साना परमाणुहरूको समूहमात्र हो, यहाँ पहाड, समुद्र आदि केही पदार्थहरू छैनन् केवल परमाणुहरूको समूहमात्र छ भन्ने सिद्धान्त संघातवाद हो भने ब्रह्म नै मायाद्वारा जगत्‌को रूपमा देखिएको हो भन्ने मत विवर्तवाद हो। यहाँ जगत्‌को कारणको रूपमा अरू दार्शनिकहरूले मानेका परमाणु आदिको निषेध गरी उपनिषद्‌मा स्वीकार गरिएको ब्रह्मविवर्त सिद्धान्तलाई स्थापित गरिएको छ। जसरी पानी आफ्नो स्वरूपलाई नछोडी तरङ्ग, छाल, फोका आदि अनेकरूप धारण गर्दछ, त्यसै गरी ब्रह्म आफ्नो स्वरूप नछाडी अनेक रूपमा देखिएको हो भन्ने वेदान्तसिद्धान्त हो। अरू सबै वस्तुहरू त अनेक मानिसहरूले आफ्नो अज्ञानका कारण कल्पना गरेका हुन्। संसारमा ठूलो-सानो, मोटो-दुब्लो, जड-चेतन भनिने जति पदार्थहरू छन्, ती सबै मायाकल्पित हुन्। अतः सम्पूर्ण प्राणीहरू पृथिवीका विकार भएकाले पृथिवीदेखि अभिन्न हुन्, पृथिवी परमाणुमा कल्पित हो अनि परमाणु अज्ञानको कारणले आत्मामा कल्पित भएको हो। यस प्रकार सम्पूर्ण जगत्‌को रूपमा केवल ब्रह्म नै देखिएको हो। ब्रह्मभन्दा भिन्नरूपमा प्रतीत हुने सबै पदार्थहरू मिथ्या, अवास्तविक र केवल कल्पित मात्र हुन् भन्नु यस प्रसङ्गको आशय हो।

**ज्ञानं विशुद्धं परमार्थमेकमनन्तरं त्वबहिर्ब्रह्म सत्यम्।**
**प्रत्यक् प्रशान्तं भगवच्छब्दसंज्ञं यद् वासुदेवं कवयो वदन्ति ॥ ११ ॥**

**पदार्थ—**
**ज्ञानं तु** = स्वरूपभूत ज्ञान नै
**विशुद्धं** = शुद्ध
**परमार्थम्** = परमार्थरूप
**एकं** = अद्वितीय
**अनन्तरं अबहिः** = भित्र र बाहिरको भेदले रहित
**ब्रह्म** = सर्वव्यापक
**प्रत्यक्** = सर्वान्तर्यामी
**प्रशान्तं** = निर्विकार
**भगवच्छब्दसंज्ञं** = भगवान् भनिने
**सत्यम्** = सत्य वस्तु हो
**यत्** = जुन स्वरूपज्ञानलाई
**कवयः** = विद्वान्हरू
**वासुदेवं** = शुद्ध अन्तःकरणमा देखिने हुनाले वासुदेव भनी
**वदन्ति** = भन्दछन्

**वाक्यार्थ—** यथार्थमा विशुद्ध तीनै कालमा बाधित नहुने परमार्थरूप, अद्वितीय, भित्री बाहिरी भन्ने कुनै भेद नभएको परिपूर्ण ज्ञान मात्र सत्य वस्तु हो, जो सर्वव्यापक र सबै प्रकारले निर्विकार छ। यसैको नाम भगवान् हो। पण्डितहरू यसैलाई वासुदेव भन्दछन्।

**विवरण—** सामान्यतया कुनै पनि विषयको ज्ञान हुनका लागि इन्द्रिय र विषयको सम्बन्ध हुन आवश्यक हुन्छ। वेदान्तशास्त्रले ज्ञानका तीन ओटा भेदहरूको विश्लेषण गरेको छ। कुनै पनि पदार्थको ज्ञान हुनु भनेको आत्माले त्यो विषयलाई जान्नु हो। यसका लागि मन र इन्द्रियको आवश्यकता पर्दछ तर आफैंलाई जान्दा चाहिँ कुनै पनि इन्द्रिय वा मनको आवश्यकता पर्दैन। अरू कुनै साधनको अपेक्षा विना पनि प्राणीहरू 'म छु' भन्ने अनुभव गरिरहन्छन्। यसैले आत्मालाई ज्ञानस्वरूप स्वयंप्रकाश भनिएको छ। बाहिरी घटपटादि पदार्थहरू चाहिँ परप्रकाश्य हुन् किनकि यिनीहरूलाई जान्न इन्द्रिय, मन र बाहिरी प्रकाश आदिको आवश्यकता पर्दछ। यस प्रकार ब्रह्मरूप ज्ञान, ब्रह्मको ज्ञान र विषयको ज्ञान गरी ज्ञानका तीन भेदहरू बताइएका छन्।

संसारका सबै प्राणीहरूले इन्द्रियहरूको उपयोगद्वारा बाहिरी विषयलाई जान्नु नै विषयको ज्ञान हो। सच्चिदानन्दरूप ब्रह्मलाई 'म नै हुँ' भनी जान्नु ब्रह्मज्ञान गर्नु हो। यहाँ के कुरा बुझ्न आवश्यक छ भने वास्तवमा ज्ञान भनेको ब्रह्म नै हो, अरु त त्यसैका आभास मात्र हुन्। आफ्नो अगाडि जुन वस्तु आउछ, त्यसैको आकारमा आकारित हुनु अन्तःकरणको स्वभाव हो। अन्तःकरणको वृत्ति जब घटपटादि विषयहरूको आकारमा परिणत हुन्छ, तब त्यहाँ ज्ञानस्वरूप आत्माको प्रतिबिम्ब पर्दछ र यसैलाई विषयको ज्ञान भनिन्छ। त्यसै गरी गुरु र शास्त्रको उपदेशबाट ब्रह्माकार बनेको अन्तःकरणवृत्तिमा परेको आत्माको प्रतिबिम्बलाई ब्रह्मको ज्ञान भनिन्छ। ज्ञानको साधन भएकाले अन्तःकरणको वृत्तिलाई ज्ञान भनिएको मात्र हो, वास्तविक ज्ञान त अद्वितीय ब्रह्मतत्त्व नै हो। जसरी वर्षाकालमा सूर्यलाई ढाक्ने बादल त्यही सूर्यको प्रकाशले प्रकाशित हुन्छ, त्यसै गरी ब्रह्ममा कल्पित यो जगत् ब्रह्मकै प्रकाशले प्रकाशित हुन्छ। **सत्यं ज्ञानमनन्तं ब्रह्म** (तैत्तिरीयोपनिषद्, २/१/१), **विज्ञानमानन्दं ब्रह्म** (बृहदारण्यकोपनिषद्, ३/९/२८) आदि वेदवचनहरूले ब्रह्मलाई नै ज्ञानस्वरूप भनी बताएका छन्। सम्पूर्ण वस्तु, जाति र क्रियाहरू अद्वय ज्ञानमा नै कल्पित छन् भनी गौडपादाचार्यले बताउनु भएको छ (माण्डूक्यकारिका, ४/४५)। प्रस्तुत श्लोकमा पनि विषयको ज्ञानबाट ब्रह्मरूप ज्ञानलाई छुट्याउन छ ओटा विशेषणहरूको

प्रयोग गरिएको छ। ब्रह्मरूप ज्ञान विशुद्ध छ, एकरूप छ, बाहिरी भित्री भेदले शून्य छ, परिपूर्ण, प्रत्यक्-स्वरूप एवं निर्विकार छ भने, विषयको ज्ञान चाहिँ अविद्यादोषले युक्त छ। पदार्थभेद अनुसार घटज्ञान, पटज्ञान आदि अनेक रूपमा देखिन्छ। भित्री बाहिरी पदार्थअनुसार यसको ज्ञानमा पनि भेद देखिन्छ। विषयहरू परिच्छिन्न र नाशवान् भएकाले यो पनि परिच्छिन्न र नाशवान् छ। यसप्रकार मिथ्या संसार एवं यसको ज्ञानलाई व्यवहारोपयोगी बनाई सिद्ध गर्ने अन्तर्यामी वासुदेव तत्त्व नै वास्तविक ज्ञान हो भन्नु यस प्रसङ्गको आशय हो।

**रहूगणैतत् तपसा न याति न चेज्यया निर्वपणाद् गृहाद् वा।**
**न च्छन्दसा नैव जलाग्निसूर्यैर्विना महत्पादरजोऽभिषेकम्॥ १२॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **तपसा** = तपस्याले | **न** = पाइँदैन |
| **रहूगण** = हे राजा | **न याति** = प्राप्त हुँदैन | **छन्दसा च** = वेद पढेर पनि |
| **एतत्** = यो स्वरूपभूत ज्ञानतत्त्व | **इज्यया** = यज्ञ गरेर | **न** = प्राप्त हुँदैन र |
| **महत्पादरजः** = महापुरुषको चरणकमलको धुलोलाई | **निर्वपणात्** = अन्न आदिको दानबाट र | **जलाग्निसूर्यैः** = जल, अग्नि र सूर्य आदिको उपासनाले |
| **अभिषेकम् विना** = शिरमा धारण नगरेसम्म | **गृहात् वा** = गृहस्थका धर्मबाट पनि | **एव** = नै पनि |
| | | **न** = पाउन सकिँदैन |

**वाक्यार्थ–** तर हे रहूगण! महापुरुषको चरणकमलको सेवाविना केवल जप, तप, यज्ञ, दान, वेदाध्ययन, व्रत, उपासना आदि गरेर मात्र त्यो ज्ञानरूप परमात्माको प्राप्ति हुन सक्दैन।

**विवरण–** आत्मज्ञानी महापुरुषहरूको संसर्गले संसारी मानिसहरू पनि बिस्तारै परिवर्तित हुँदै जान्छन्। मुक्त हुन खोज्ने मनुष्यले सङ्गलाई सम्पूर्णरूपले त्याग्नुपर्दछ। तर कसैसँग पनि सम्बन्ध नराखी सामान्य मान्छे बाँच्न सक्दैन। अतः उनीहरूले असङ्ग रहेका महापुरुषहरूको सङ्गत गर्नुपर्दछ। परमात्मा जसको हृदयमा प्रकट भइसक्नुभएको छ, उनीहरूको हरेक वचन र व्यवहारमा अपूर्व दृढता र आधिकारिकता देख्न पाइन्छ। जसलाई थाहा छ कि मैले संसारका एक मात्र कारण परमात्मालाई जानेको छु, ऊ आफ्नो ज्ञानको दृढतामा पूरा विश्वस्त हुन्छ। संसारमा चारतिर तानिएर संशयग्रस्त मन लिई बाँच्ने मान्छेहरू महापुरुषहरूको नजिक पुग्दा मुक्तिको आनन्ददायी चेतना अनुभव गर्न सक्छन्। महापुरुषहरूको साक्षात् सङ्ग गर्नुको सबैभन्दा ठुलो फाइदा भनेको अभिमान नाश गर्नु हो। संसारमा आफू मात्र सर्वश्रेष्ठ रहेको अभिमान जब महापुरुषहरूको दिव्य सत्सङ्गद्वारा नष्ट हुन्छ तब मात्र मनुष्य ज्ञानको अधिकारी बन्दछ। महापुरुषको अघि नझुकीकन प्राप्त गरेको शास्त्रीय ज्ञानले त झन् अभिमान बढाउने काम गर्दछ र त्यो अभिमान त संसारको नै कारण बन्छ।

**यत्रोत्तमश्लोकगुणानुवादः प्रस्तूयते ग्राम्यकथाविघातः।**
**निषेव्यमाणोऽनुदिनं मुमुक्षोर्मतिं सतीं यच्छति वासुदेवे॥ १३॥**

**पदार्थ–**
**यत्र** = जुन महापुरुषहरूकहाँ
**ग्राम्यकथाविघातः** = लौकिक विषयलाई महत्त्व नदिने (अज्ञानलाई नष्ट गर्ने)
**उत्तमश्लोकगुणानुवादः** = पवित्र कीर्ति भएका भगवान्को कथा
**अनुदिनं** = दिन-दिनै
**प्रस्तूयते** = प्रस्तुत गरिन्छ (त्यस्तो)
**निषेव्यमाणः** = नित्य सेवन गरिएको उक्त कथाले
**मुमुक्षोः** = मुमुक्षुको
**सतीं** = शुद्ध
**मतिं** = बुद्धिलाई
**वासुदेवे** = भगवान् वासुदेवमा
**यच्छति** = लगाइदिन्छ

**वाक्यार्थ–** महापुरुषहरूको समाजमा पवित्रकीर्ति भएका श्रीहरिको गुणको चर्चा सधैँ भइरहने भएकाले त्यहाँ लौकिक विषयको कुरा हुनै पाउँदैन। यसरी प्रतिदिन श्रवण गरिएको भगवत् कथाले मोक्षको इच्छा भएका व्यक्तिको शुद्ध बुद्धिलाई भगवान् वासुदेवमा लगाइदिन्छ।

**अहं पुरा भरतो नाम राजा विमुक्तदृष्टश्रुतसङ्गबन्धः।**
**आराधनं भगवत ईहमानो मृगोऽभवं मृगसङ्गाद्धतार्थः॥ १४॥**

**पदार्थ–**
**अहं** = म
**पुरा** = पूर्व जन्ममा
**विमुक्तदृष्टश्रुतसङ्गबन्धः** = यो लोक र श्रुतिप्रतिपादित परलोकको आसक्तिरूपी बन्धनबाट छुटिसकेको
**भरतः** = भरत
**नाम** = नाम गरेको
**राजा** = राजा थिएँ (तर)
**भगवतः** = भगवान्को
**आराधनं** = सेवा गर्न
**ईहमानः** = खोज्दा-खोज्दै पनि
**मृगसङ्गात्** = मृगमा आसक्त भएकाले (अर्को जन्ममा)
**हतार्थः** = भगवत्प्राप्तिरूप परमपुरुषार्थबाट भ्रष्ट भएकोले
**मृगः** = मृग
**अभवम्** = भएँ

**वाक्यार्थ–** पूर्वजन्ममा म भरत नाम गरेको राजा थिएँ। लौकिक र पारलौकिक विषयदेखि विरक्त भएर म सधैँ भगवान्को आराधनामा लागिरहन्थेँ। तर पनि एउटा मृगमा आसक्त भएकाले परमार्थबाट भ्रष्ट भएर मैले अघिल्लो जन्ममा मृग भएर जन्मनु पऱ्यो।

**सा मां स्मृतिर्मृगदेहेऽपि वीर कृष्णार्चनप्रभवा नो जहाति।**
**अथो अहं जनसङ्गादसङ्गो विशङ्कमानोऽविवृतश्चरामि॥ १५॥**

**पदार्थ–**
**वीर** = हे वीर
**कृष्णार्चनप्रभवा** = भगवान् कृष्णको सेवाको प्रभावबाट पैदा भएको
**सा** = त्यो आसक्तिको कारणले मृग हुनुपरेको
**स्मृतिः** = सम्झनाले
**मां** = मलाई
**मृगदेहे अपि** = मृगको जन्ममा समेत
**नः जहाति** = छोडेन
**अथो** = त्यस कारणले
**अहं** = म
**जनसङ्गात्** = मनुष्यहरूको आसक्तिबाट
**विशङ्कमानः** = पतनको शङ्काले डराएर
**असङ्गः** = अनासक्त र
**अविवृतः** = प्रकट नभईकन
**चरामि** = घुमिरहन्छु

**वाक्यार्थ–** हे वीर राजा! भगवान्को आराधनाको प्रभावले त्यस मृगयोनिमा पनि मलाई

पूर्वजन्मको सम्झना भइरह्यो। त्यसैले अहिले मनुष्यजन्ममा पनि म मानिसको सङ्गतलाई आफ्नो उद्देश्यमा विघ्न पार्ने सम्झेर त्यस आसक्तिदेखि डराई सधैँ गुप्तरूपले सबैदेखि अलग रहेर भ्रमण गरिरहन्छु।

**तस्मान् नरोऽसङ्गसुसङ्गजातज्ञानासिनेहैव विवृक्णमोहः।**
**हरिं तदीहाकथनश्रुताभ्यां लब्धस्मृतिर्यात्यतिपारमध्वनः॥ १६॥**

| | | |
|---|---|---|
| **पदार्थ—** | **विवृक्णमोहः** = मोहरूपी | **नरः** = मनुष्य |
| **तस्मात्** = त्यसैले | बन्धनलाई काटेपछि | **अध्वनः** = कहिल्यै नटुङ्गिने |
| **असङ्गसुसङ्गजातज्ञानासिना** = | **तदीहाकथनश्रुताभ्यां** = | संसार मार्गको |
| ज्ञानद्वारा असङ्ग बनेका | भगवान्को लीलाकथाको श्रवण | **अतिपारम्** = पारि पुगेर |
| महापुरुषहरूको सङ्गतद्वारा प्राप्त | कीर्तनद्वारा | **हरिं** = श्रीहरि भगवान्लाई |
| हुने ज्ञानरूपी तरबारबाट | **लब्धस्मृतिः** = आफ्नो यथार्थ | **याति** = प्राप्त गर्न सक्दछ |
| **इह एव** = यही मनुष्य जन्ममा नै | भगवत् स्वरूपलाई सम्झिने | |

**वाक्यार्थ—** तसर्थ विरक्त महापुरुषको सत्सङ्गले प्राप्त भएको ज्ञानरूप खड्गद्वारा मुमुक्षुले यही लोकमा नै आफ्नो मोहबन्धनलाई चुँडाल्नुपर्दछ। त्यसपछि मात्र भगवान् श्रीहरिका लीला-कथाहरूको कथन र श्रवणले भगवान्को नित्य स्मरण भइरहने हुनाले त्यसले सजिलैसँग संसारमार्गलाई पार गरी भगवान्लाई प्राप्त गर्न सक्दछ।

**विवरण—** अनात्मा शरीरलाई आत्मा सम्झने र दुःखमय संसारलाई सुखदायी सम्झने उल्टो बुद्धि नै मोह हो। आफ्नो स्वरूपको विषयमा अलिकति मात्र पनि विचार गर्ने हो भने शरीर, इन्द्रिय आदि आफू नभएको स्पष्ट थाहा हुन्छ। शरीर बालक, युवा र बुढो हुन्छ, आँखा नदेख्ने र कान नसुन्ने हुन्छ तर शरीरका यी अनेकौँ परिवर्तनमा पनि भित्र रहने तत्त्वले आफूलाई अपरिवर्तनीय तत्त्वका रूपमा अनुभव गरिरहेकै हुन्छ, त्यसमा केही फरक परेको हुँदैन। त्यसैले शरीर, इन्द्रिय आदि आत्मा होइनन्, चेतन परमात्मतत्त्व नै म हुँ भन्ने जानेपछि त्यसले मोहलाई समूल नष्ट गरिदिन्छ। मोह नष्ट भएपछि मनुष्यले आफ्नो सनातन स्वरूपलाई सम्झन्छ। सम्झनु भनेको नयाँ कुराको आविष्कार होइन, अपि तु पहिल्यैदेखि रहेको कुरालाई याद गर्नु हो। आत्मा सधैँ चेतन परमात्मस्वरूप नै थियो, तर आफ्नो स्वरूपलाई बिर्सेको कारणले शरीरलाई आत्मा भनिन्थ्यो। अब अज्ञान नष्ट भएपछि त्यही पुरानै स्वरूपको स्मरण हुन्छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां पञ्चमस्कन्धे**
**ब्राह्मणरहूगणसंवादे द्वादशोऽध्यायः॥ १२॥**

# अथ चतुर्विंशोऽध्यायः

## राहु आदिको स्थिति र अतल आदि तलका लोकहरूको वर्णन

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अधस्तात् सवितुर्योजनायुते स्वर्भानुर्नक्षत्रवच्चरतीत्येके योऽसा-वमरत्वं ग्रहत्वं चालभत भगवदनुकम्पया स्वयमसुरापसदः सैंहिकेयो ह्यतदर्हस्तस्य तात जन्म कर्माणि चोपरिष्टाद् वक्ष्यामः ॥ १ ॥**

**पदार्थ–**
**एके** = केही विद्वान्‌हरू
**सवितुः** = सूर्यदेखि
**योजनायुते** = दश हजार योजन
**अधस्तात्** = तल
**स्वर्भानुः** = राहु
**नक्षत्रवत्** = नक्षत्रहरू झैँ
**चरति इति** = घुम्दछ, भन्दछन्
**स्वयम्** = आफैँमा
**असुरापसदः** = असुराधम
**यः** = जुन
**सैंहिकेयः** = सिंहिकाको छोरो हो
**असौ** = त्यो राहुले
**हि** = निश्चय नै
**अतदर्हः** = ग्रहत्व र अमरत्व पाउन अयोग्य भएर पनि
**भगवदनुकम्पया** = भगवान् नारायणको कृपाले
**अमरत्वं** = अमरत्व र
**ग्रहत्वं च** = ग्रहत्व पनि
**अलभत** = प्राप्त गऱ्यो
**तात** = हे महाराज परीक्षित्
**तस्य** = त्यो राहुको
**जन्मकर्माणि** = जन्म र कर्महरू
**च** = पनि
**उपरिष्टात्** = माथि (षष्ठ स्कन्ध र अष्टम स्कन्धमा)
**वक्ष्यामः** = बताउनेछौँ

**वाक्यार्थ–** हे परीक्षित् ! केही विद्वान्‌हरू सूर्यभन्दा दश हजार योजन तल राहु नक्षत्र झैँ घुमिरहन्छ भन्छन्। सिंहिकाको छोरो त्यो राहु स्वयं असुराधम भएको हुनाले देवत्व र अमरत्वका लागि योग्य नभएर पनि भगवान् नारायणको कृपाले त्यसले देवत्व र ग्रहत्व प्राप्त गरेको छ। यसको जन्म र कर्मका सम्बन्धमा षष्ठ स्कन्ध र अष्टम स्कन्धमा वर्णन गरिनेछ।

**यददस्तरणेर्मण्डलं प्रतपतस्तद्विस्तरतो योजनायुतमाचक्षते द्वादशसहस्रं सोमस्य त्रयोदशसहस्रं राहोर्यः पर्वणि तद्व्यवधानकृद् वैरानुबन्धः सूर्याचन्द्रमसावभिधावति ॥ २ ॥**

**पदार्थ–**
**प्रतपतः** = ज्यादै तातो भएका
**अदः तरणेः** = ती सूर्यको
**यत्** = जुन
**मण्डलं** = मण्डल छ
**तत्** = त्यो मण्डल
**विस्तरतः** = फैलिएको आधारमा
**योजनायुतम्** = दश हजार योजनको छ भनेर

**आचक्षते** = भन्दछन्, (त्यसै गरी)
**सोमस्य** = चन्द्रमाको विस्तार
**द्वादशसहस्रं** = बाह्र हजार योजन
**राहोः** = राहुको विस्तार
**त्रयोदशसहस्रं** = तेह्र हजार योजन छ
**यः** = जुन राहुले
**पर्वणि** = औँसी र पूर्णिमामा
**तद्व्यवधानकृत्** = सूर्य र चन्द्रमालाई अमृत पिउन नदिएर
**वैरानुबन्धः** = शत्रुता सिद्ध गर्न
**सूर्याचन्द्रमसौ** = सूर्य र चन्द्रलाई
**अभिधावति** = आक्रमण गर्दछ

**वाक्यार्थ–** अत्यन्त तातो सूर्यको मण्डल दश हजार योजन दायाँ-बायाँ फैलिएको छ। त्यस्तै चन्द्रमण्डल बाह्र हजार योजन फैलिएको छ भने राहुको विस्तार तेह्र हजार योजन छ। अमृतपानको समयमा देवताहरूको बीचमा पस्दा सूर्य र चन्द्रले आफ्नो भेद खोलिदिएका कारण रिसाएको हुनाले यस राहुले औँसी र पूर्णिमामा क्रमशः सूर्य र चन्द्रमालाई आक्रमण गर्दछ।

**टिप्पणी–** देवता र दानव मिलेर समुद्र मन्थन गर्दा अमृत प्राप्त भयो । त्यो अमृत कसले लिने भन्ने बारेमा देवता र दानवबीच झगडा भयो। यसै क्रममा भगवान् विष्णुले मोहिनी रूप धारण गरेर देवता र दानवका अगाडि उपस्थित भई उक्त अमृत बराबर भाग लगाइदिने आश्वासन दिनुभयो। मोहिनीरूप धारण गरेका भगवान् विष्णुको उक्त प्रस्तावमा देवता र दानव दुबैथरीले सहमति जनाए। यसपछि मोहिनीरूप भगवान् विष्णुले अमृत बाँड्दा राहु देवताको बीचमा घुसेको थियो। यो रहस्य सूर्य र चन्द्रले भगवान् विष्णुलाई बताएको हुनाले विष्णुले चक्रले शिर काटी शरीरदेखि छुट्याइदिनुभएको हुनाले राहु सूर्य र चन्द्रमाप्रति क्रुद्ध भएको हो।

**तन्निशम्योभयत्रापि भगवता रक्षणाय प्रयुक्तं सुदर्शनं नाम भागवतं दयितमस्त्रं तत्तेजसा दुर्विषहं मुहुः परिवर्तमानमभ्यवस्थितो मुहूर्तमुद्विजमानश्चकितहृदय आरादेव निवर्तते तदुपरागमिति वदन्ति लोकाः॥ ३॥**

**पदार्थ–**
**तत्** = त्यो सूर्य र चन्द्रलाई राहुले आक्रमण गर्छ भन्ने
**निशम्य** = सुनेर (थाहा पाएर)
**उभयत्र** = सूर्य र चन्द्र दुबैको
**अपि** = पनि
**रक्षणाय** = रक्षाका लागि
**भागवतं** = भगवान्को
**सुदर्शनं नाम** = सुदर्शन नाम गरेको
**दयितम्** = प्रिय
**अस्त्रं** = अस्त्रलाई
**भगवता** = भगवान्ले
**प्रयुक्तं** = प्रयोग गर्नुभएको
**मुहुः** = सधैँ
**परिवर्तमानम्** = घुमिरहेको
**तेजसा** = तेजले
**दुर्विषहं** = सहनै नसकिने
**तत्** = त्यो सुदर्शन चक्र देखेर
**अभ्यवस्थितः** = सामने भएकोले
**मुहूर्तम्** = एकछिन
**उद्विजमानः** = तर्सिएको र
**चकितहृदयः** = हृदय काँपेर चकित भएको राहु
**आरात् एव** = नजिकैबाट
**निवर्तते** = फर्कन्छ
**लोकाः** = मनुष्यहरू
**तत्** = त्यो (अमृत पिउन नदिन माझमा बसेर सूर्य र चन्द्रलाई आक्रमण गर्ने राहुको) कर्मलाई
**उपरागम् इति** = ग्रहण भनेर
**वदन्ति** = भन्दछन्

**वाक्यार्थ–** राहुको आक्रमणबाट सूर्य र चन्द्रलाई बचाउन भगवान्‌ले आफ्नो प्रिय सुदर्शन चक्रलाई नियुक्त गरिदिनुभएको छ। निरन्तर घुमिरहने सुदर्शन चक्रको असह्य तेजदेखि डराएर त्यो राहु एकै छिनपछि सूर्य र चन्द्रमाको नजिकबाट हट्दछ। यही सूर्य र चन्द्रको अगाडि राहु रहँदाको समयलाई मानिसहरू ग्रहण भन्दछन्।

**ततोऽधस्तात् सिद्धचारणविद्याधराणां सदनानि तावन्मात्र एव ॥ ४ ॥**

**पदार्थ–**
**ततः** = त्यस राहुदेखि
**अधस्तात्** = तल
**सिद्धचारणविद्याधराणां** = सिद्ध, चारण र विद्याधरका
**सदनानि** = निवासस्थानहरू
**तावन्मात्रे** = त्यतिकै परिमाणमा
**एव** = नै छन्

**वाक्यार्थ–** राहुदेखि दश हजार योजन तल सिद्ध, चारण र विद्याधरहरूको निवासस्थान त्यतिकै परिमाणका रहेका छन्।

**ततोऽधस्ताद् यक्षरक्षःपिशाचप्रेतभूतगणानां विहाराजिरमन्तरिक्षं यावद् वायुः प्रवाति यावन्मेघा उपलभ्यन्ते ॥ ५ ॥**

**पदार्थ–**
**ततः** = सिद्ध आदि बस्ने त्यस स्थानदेखि
**अधस्तात्** = तल
**यावत्** = जहाँसम्म
**वायुः** = वायु
**प्रवाति** = वेगले बहन्छ
**यावत्** = जहाँसम्म
**मेघाः** = बादलहरू
**उपलभ्यन्ते** = पाइन्छन् त्यहाँसम्म
**यक्षरक्षःपिशाचप्रेतभूतगणानां** = यक्ष, राक्षस, पिशाच, प्रेत र भूतका गणहरूको
**विहाराजिरम्** = विहारस्थान
**अन्तरिक्षं** = अन्तरिक्ष लोक छ

**वाक्यार्थ–** सिद्धहरूको लोकदेखि तल जहाँसम्म वायु बहन्छ र बादल देखिन्छ त्यस ठाउँलाई अन्तरिक्ष लोक भनिन्छ। यस लोकमा यक्ष, राक्षस, पिशाच, प्रेत र भूतहरू विहार गर्दछन्।

**ततोऽधस्ताच्छतयोजनान्तर इयं पृथिवी यावद्धंसभासश्येन-सुपर्णादयः पतत्त्रिप्रवरा उत्पतन्तीति ॥ ६ ॥**

**पदार्थ–**
**ततः** = त्यो अन्तरिक्ष लोकदेखि
**शतयोजनान्तरे** = सय योजन
**अधस्तात्** = तल
**इयं पृथिवी** = यो पृथिवीलोक छ
**यावत्** = जहाँसम्म
**हंसभासश्येनसुपर्णादयः** = हाँस, गिद्ध, बाज, गरुड आदि
**पतत्त्रिप्रवराः** = श्रेष्ठ पक्षीहरू
**उत्पतन्तीति** = उड्दछन् त्यहाँसम्म (पृथिवी फैलिएको छ)

**वाक्यार्थ–** अन्तरिक्षलोकदेखि सय योजन तल यो पृथिवी लोक रहेको छ। जहाँसम्म हाँस, गिद्ध, बाज, गरुड आदि पक्षीहरू उड्न सक्छन् त्यहाँसम्म पृथिवीलोकको सीमा मानिन्छ।

**उपवर्णितं भूमेर्यथासन्निवेशावस्थानमवनेरप्यधस्तात् सप्त भूविवरा एकैकशो योजनायुतान्तरेणायामविस्तारेणोपक्लृप्ता अतलं वितलं सुतलं तलातलं महातलं रसातलं पातालमिति ॥ ७ ॥**

**पदार्थ–**
**भूमेः** = पृथिवीको
**सन्निवेशावस्थानम्** = स्थिति र विस्तार
**यथा** = जस्तो छ (त्यस्तै)
**उपवर्णितं** = व्याख्या गरियो
**अवनेः अपि** = पृथिवीदेखि पनि
**अधस्तात्** = तल
**अतलं वितलं सुतलं तलातलं महातलं रसातलं पातालम् इति** = अतल, वितल, सुतल, तलातल, महातल, रसातल र पाताल नाम भएका
**सप्त भूविवराः** = सात ओटा लोक छन् (ती लोकहरू)
**एकैकशः** = एक-एक गरी
**योजनायुतान्तरेण** = दश-दश हजार योजन तल (अर्थात् भूलोकदेखि दश हजार योजन तल अतल, अतलदेखि दश हजार योजन तल वितल आदि क्रमले स्थित छन्। )
**आयामविस्तारेण** = ती प्रत्येक लोकहरू दशहजार योजन विस्तृत सीमामा
**उपक्लृप्ताः** = लम्बाइ र चौडाइमा फैलिएका छन्

**वाक्यार्थ–** पृथिवीदेखि तल अतल, वितल, सुतल, तलातल, महातल, रसातल र पाताल नामका सात ओटा लोकहरू रहेका छन्। एउटादेखि अर्को लोक दशहजार योजन दूरीमा रहेका यी प्रत्येक लोकको लम्बाइ र चौडाइ पनि दश हजार योजन रहेको छ।

**एतेषु हि बिलस्वर्गेषु स्वर्गादप्यधिककामभोगैश्वर्यानन्दभूति-विभूतिभिः सुसमृद्धभवनोद्यानाक्रीडविहारेषु दैत्यदानवकाद्रवेया नित्यप्रमुदितानुरक्तकलत्रापत्यबन्धुसुहृदनुचरा गृहपतय ईश्वराद-प्यप्रतिहतकामा मायाविनोदा निवसन्ति ॥ ८ ॥**

**पदार्थ–**
**स्वर्गात् अपि** = स्वर्गभन्दा पनि
**अधिककामभोगैश्वर्यानन्दभूति-विभूतिभिः** = धेरै विषयभोग, ऐश्वर्य, आनन्द, प्रभाव र सम्पत्तिहरूद्वारा
**सुसमृद्धभवनोद्यानाक्रीडविहारेषु** = समृद्धिपूर्ण महल, महलका वरिपरि बगैँचा क्रीडास्थल र विहारभूमिहरू भएको
**एतेषु हि** = यिनै
**बिलस्वर्गेषु** = पृथिवीभन्दा तल रहेका स्वर्गभन्दा पनि सुन्दर अतल आदि लोकहरूमा
**नित्यप्रमुदितानुरक्तकलत्रापत्य-बन्धुसुहृदनुचराः** = परस्पर अनुरक्त भएका सधैँ प्रसन्न पत्नी, पुत्र, बन्धु, मित्र र नोकरहरूले युक्त
**गृहपतयः** = सद्गृहस्थहरू तथा
**दैत्यदानवकाद्रवेयाः** = दैत्य, दानव र नागहरू
**ईश्वरात् अपि** = शक्तिसम्पन्न इन्द्र आदि देवताहरूबाट पनि
**अप्रतिहतकामाः** = कहिल्यै पनि मनोरथ विफल हुन नसक्ने
**मायाविनोदाः** = पारस्परिक प्रेममा प्रसन्न भएका (दैत्य दानव र गृहस्थहरू)
**निवसन्ति** = सुखपूर्वक बस्दछन्

**वाक्यार्थ–** स्वर्गभन्दा पनि उत्तम यी पाताल आदि पृथिवीभन्दा तलका लोकहरू विषयभोग, ऐश्वर्य, आनन्द, प्रभाव र धनसम्पत्तिले परिपूर्ण छन्। यहाँको वैभवपूर्ण भवन, उद्यान र क्रीडास्थलहरूमा इन्द्र आदि देवताहरूले पनि बाधा पुऱ्याउन नसक्ने, दैत्य, दानव, नाग र सद्गृहस्थहरू बन्धु बान्धवसहित अत्यन्त प्रसन्न भएर विहार गर्दछन्।

**येषु महाराज मयेन मायाविना विनिर्मिताः पुरो नानामणिप्रवर-प्रवेकविरचितविचित्रभवनप्राकारगोपुरसभाचैत्यचत्वरायतनादिभिर्नागा-सुरमिथुनपारावतशुकसारिकाकीर्णकृत्रिमभूमिभिर्विवरेश्वरगृहोत्तमैः समलङ्कृताश्चकासति ॥ ९॥**

**पदार्थ–**
**महाराज** = हे राजा परीक्षित्
**येषु** = जुन अतल आदि लोकमा
**मायाविना** = मायावी
**मयेन** = मयनामक दानवद्वारा
**विनिर्मिताः** = बनाइएको
**नानामणिप्रवरप्रवेकविरचित-विचित्रभवनप्राकारगोपुरसभा-चैत्यचत्वरायतनादिभिः** = अनेक प्रकारका श्रेष्ठ मणिहरूद्वारा निर्मित विचित्र भवन, पर्खाल, पुरद्वार, सभागृह, चैत्य, आँगन र यज्ञशालाहरूद्वारा तथा
**नागासुरमिथुनपारावतशुक-सारिकाकीर्णकृत्रिमभूमिभिः** = नाग र असुर एवं परेवा, सुगा र मैनाको जोडीले व्याप्त कृत्रिम भूमिहरूद्वारा तथा
**विवरेश्वरगृहोत्तमैः** = पातालका अधिपतिहरूको सुन्दर र श्रेष्ठ भवनहरूद्वारा
**समलङ्कृताः** = सजिएका
**पुरः** = सहरहरू
**चकासति** = शोभायमान छन्

**वाक्यार्थ–** हे राजा परीक्षित्! यी अतल, वितल आदि लोकहरूमा महामायावी मय दानवले बनाएका अत्यन्त सुन्दर अनेक नगरहरू झलमलाइरहेका छन्। यहाँका भवन, पर्खाल, सहरका द्वार, सभाभवन, मन्दिर, आँगन र यज्ञशालाहरू अमूल्य मणिले बनेका छन्। यी लोकका अधिपतिहरूका भव्य भवन र बगैँचाहरू विभिन्न प्रकारका नाग, असुर, परेवा, सुगा, मैना आदिका दम्पति र तिनका सुमधुर बोलीले मनमोहक बनेका छन्। सुन र मणिले बनेका हुँदा यहाँको भूमि नै प्रकाशमय बनेको छ।

**उद्यानानि चातितरां मनइन्द्रियानन्दिभिः कुसुमफलस्तबकसुभग-किसलयावनतरुचिरविटपविटपिनां लताङ्गालिङ्गितानां श्रीभिः समिथुनविविधविहङ्गमजलाशयानाममलजलपूर्णानां झषकुलो-ल्लङ्घनक्षुभितनीरनीरजकुमुदकुवलयकह्लारनीलोत्पललोहितशत-पत्रादिवनेषु कृतनिकेतनानामेकविहाराकुलमधुरविविधस्वनादिभि-रिन्द्रियोत्सवैरमरलोकश्रियमतिशयितानि ॥ १० ॥**

**पदार्थ—**

**अतितरां** = (जुन अतल आदि लोकमा) अत्यन्त
**मनइन्द्रियानन्दिभिः** = मन र इन्द्रियहरूलाई आनन्दित बनाउने
**लताङ्गालिङ्गितानां** = विभिन्न लहराहरूद्वारा बेरिएको
**कुसुमफलस्तबकसुभगकिसलयावनतरुचिरविटपविटपिनां** = फूल र फलका गुच्छा र कोमल पालुवाले झुकेका सुन्दर हाँगा भएका वृक्षहरूको तथा
**अमलजलपूर्णानां** = निर्मल जलले भरिएका
**समिथुनविविधविहङ्गमजलाशयानाम्** = विभिन्न जोडी चराहरूले सुशोभित जलाशयहरूको
**श्रीभिः** = शोभाद्वारा तथा
**झषकुलोल्लङ्घनक्षुभितनीरनीरजकुमुदकुवलयकह्लारनीलोत्पललोहितशतपत्रादिवनेषु** = ती जलाशयमा बस्ने माछाका समूहको उफ्रिने, खेल्ने आदि क्रीडाले हल्लिएको पानीमा भएका कमल, कुमुद, कुवलय, कह्लार, नीलकमल, रक्तकमल, सयपत्रीकमल आदि विभिन्न कमलका फूलहरूको वनमा
**कृतनिकेतनानाम्** = घर बनाएका चराहरूका
**एकविहाराकुलमधुरविविधस्वनादिभिः** = अखण्ड विहारका लागि व्याकुल पक्षीहरूका विभिन्न प्रकारका मधुर आवाजहरूद्वारा
**इन्द्रियोत्सवैः** = इन्द्रियलाई दिने आनन्दले
**अमरलोकश्रियम् च** = देवताका लोक (स्वर्ग)को शोभालाई समेत
**अतिशयितानि** = जित्ने
**उद्यानानि** = बगैँचाहरू छन्

**वाक्यार्थ—** यहाँका सुन्दर बगैँचाहरूले देवलोकका बगैँचालाई पनि माथ गर्दछन् किनभने यी बगैँचामा लहराहरूले सुशोभित अत्यन्त सुन्दर विभिन्न वृक्षहरू छन्, ती वृक्षका हाँगाहरू राम्रा राम्रा फलफूलका झुप्पाले र कोमल कोपिलाहरूको भारले झुकेका छन्। डिलमा बसेका विभिन्न प्रकारका चराचुरुङ्गीका जोडी र रङ्गीचङ्गी माछाले युक्त भएका तथा निर्मल पानीले भरिपूर्ण भएका त्यहाँका अनेक पोखरीको शोभा पनि अपूर्व छ। ती पोखरीहरूमा कमल, कुमुद (सेतो चन्द्रकमल), कुवलय (चन्द्रकमल), कह्लार (साँझमा फुल्ने सेतो कमल), नीलकमल, रक्तकमल, सयपत्रीकमल आदि विभिन्न जातका कमलहरू सधैँ फुलिरहेका हुन्छन्। ती सुन्दर कमलको वनमा बसेर कराइरहने चराहरूको मनै हर्ने मधुर ध्वनिले स्वर्गीय आनन्दलाई पनि खल्लो पार्दछन्।

### यत्र ह वाव न भयमहोरात्रादिभिः कालविभागैरुपलक्ष्यते ॥ ११ ॥

**पदार्थ—**

**यत्र** = जुन अतल आदि लोकमा
**ह वाव** = निश्चय नै
**अहोरात्रादिभिः** = अहोरात्र आदि
**कालविभागैः** = समयको विभाजनका कारणले
**भयम्** = डर
**न उपलक्ष्यते** = हुँदैन

**वाक्यार्थ—** ती अतल आदि लोकमा दिन, रात आदि काल विभाजन हुँदैन, अतः कालबाट हुने कुनै पनि भय यहाँ हुँदैन।

### यत्र हि महाहिप्रवरशिरोमणयः सर्वं तमः प्रबाधन्ते ॥ १२ ॥

**पदार्थ—**

**यत्र** = जुन अतल आदि लोकमा
**हि** = निश्चय नै
**महाहिप्रवरशिरोमणयः** = ठुला-ठुला नागका शिरमा हुने श्रेष्ठ मणिहरूले
**सर्वं** = सम्पूर्ण
**तमः** = अन्धकारलाई
**प्रबाधन्ते** = हटाइदिन्छन्

**वाक्यार्थ–** ती अतल आदि लोकको अन्धकारलाई यहाँ बस्ने ठुला-ठुला नागहरूको शिरमा रहेका मणिको प्रकाशले नष्ट गर्दछ।

**न वा एतेषु वसतां दिव्यौषधिरसरसायनान्नपानस्नानादिभिराधयो व्याधयो वलीपलितजरादयश्च देहवैवर्ण्यदौर्गन्ध्यस्वेद-क्लमग्लानिरिति वयोऽवस्थाश्च भवन्ति ॥ १३ ॥**

**पदार्थ–**
**वा** = अथवा
**एतेषु** = यी लोकहरूमा
**वसतां** = बस्ने (प्राणीहरू)को
**दिव्यौषधिरसरसायनान्नपान-स्नानादिभिः** = दिव्य औषधि, रस, रसायन, अन्न, पान र स्नान आदिको कारणले
**आधयः व्याधयः च** = मानसिक र शारीरिक रोगहरू
**वलीपलितजरादयः** = छाला चाउरिने, केश फुल्ने बुढ्याइँ र
**देहवैवर्ण्यदौर्गन्ध्यस्वेदक्लम-ग्लानिः इति** = शरीरको कान्ति घट्ने, शरीर गनाउने, पसिना आउने, थाक्ने, उत्साह क्षीण हुने जस्ता
**वयः अवस्थाः च** = शरीरमा उमेर अवस्थाअनुसार आउने समस्याहरू पनि
**न भवन्ति** = हुँदैनन्

**वाक्यार्थ–** यी अतल आदि लोकका निवासीहरूले दिव्य औषधि, रस, रसायन, अन्न, पान र स्नान आदिको सेवन गर्ने हुनाले उनीहरूलाई मानसिक तथा शारीरिक कुनै पनि रोग लाग्दैन। उनीहरूको शरीरमा छाला चाउरी पर्ने, कपाल फुल्ने, झर्ने, बुढो हुने, शरीरको तेज हराउने, शरीर गनाउने, पसिना आउने, थकाइ लाग्ने, अल्छी लाग्ने, आयु तथा शरीरको अवस्था फेरिने आदि जस्ता कुनै पनि समस्या आउँदैनन्।

**न हि तेषां कल्याणानां प्रभवति कुतश्चन मृत्युर्विना भगवत्तेजसश्चक्रापदेशात् ॥ १४ ॥**

**पदार्थ–**
**कल्याणानां** = परम भाग्यशाली
**तेषां** = ती अतल आदि लोकवासी प्राणीहरूको
**मृत्युः** = मृत्यु
**हि** = निश्चय नै
**भगवत्तेजसः** = भगवान्‌को तेजस्वी
**चक्रापदेशात्** = सुदर्शन चक्र
**विना** = विना
**कुतश्चन** = कतैबाट पनि
**न प्रभवति** = हुन सक्दैन

**वाक्यार्थ–** अति भाग्यमानी यी अतल आदि लोकमा बस्ने प्राणीहरूको मृत्यु भगवान्‌को तेजस्वी सुदर्शन चक्रदेखि बाहेक अरू कुनै साधनबाट हुन सक्दैन।

**यस्मिन् प्रविष्टेऽसुरवधूनां प्रायः पुंसवनानि भयादेव स्रवन्ति पतन्ति च ॥ १५ ॥**

**पदार्थ–**
**प्रायः** = धेरैजसो
**यस्मिन्** = जुन सुदर्शन
**प्रविष्टे** = आउँदा
**असुरवधूनां** = दैत्यपत्नीहरूको
**पुंसवनानि** = गर्भहरू

**भयात् एव** = डरका कारण नै **स्रवन्ति** = तुहिने र **पतन्ति च** = पतन हुने पनि गर्छ

**वाक्यार्थ–** सुदर्शनचक्रको प्रवेश हुने बित्तिकै त्यसको डरले प्रायः त्यहाँका दैत्यपत्नीहरूको गर्भ तुहिने गर्छ।

**अथातले मयपुत्रोऽसुरो बलो निवसति येन ह वा इह सृष्टाः षण्णवतिर्मायाः काश्चनाद्यापि मायाविनो धारयन्ति यस्य च जृम्भमाणस्य मुखतस्त्रयः स्त्रीगणा उदपद्यन्त स्वैरिण्यः कामिन्यः पुंश्चल्य इति या वै बिलायनं प्रविष्टं पुरुषं रसेन हाटकाख्येन साधयित्वा स्वविलासावलोकनानुरागस्मितसंलापोपगूहनादिभिः स्वैरं किल रमयन्ति यस्मिन्नुपयुक्ते पुरुष ईश्वरोऽहं सिद्धोऽहमित्ययुतमहागजबलमात्मानमभिमन्यमानः कत्थते मदान्ध इव ॥ १६ ॥**

**पदार्थ–**
**अथ** = यसरी
**अतले** = अतल लोकमा
**मयपुत्रः** = मयको पुत्र
**बलः** = बल नामक
**असुरः** = दैत्य
**निवसति** = बस्दछ
**येन** = जुन बल असुरले
**ह वा** = निश्चय नै
**इह** = यस अतल लोकमा
**षण्णवतिः** = छयानब्बे प्रकारको
**मायाः** = माया
**सृष्टाः** = रच्यो
**अद्य अपि** = अहिले पनि
**मायाविनः** = कोही-कोही मायावी पुरुषहरू
**काश्चनः** = ती छयानब्बे मायामध्ये केही मायालाई
**धारयन्ति** = लिन्छन् (जान्दछन्)
**जृम्भमाणस्य** = हाइ गर्न लागेको
**यस्य च** = जुन बलासुरको
**मुखतः** = मुखबाट
**स्वैरिण्यः** = स्वैरिणी (आफ्नो जस्तै वर्ण भएको पुरुषसँग स्वतन्त्रतापूर्वक रमण गर्ने स्त्री)
**कामिन्यः** = कामिनी (जोसँग पनि रमण गर्ने स्त्री)
**पुंश्चल्यः इति** = पुंश्चली (पोइल जाने स्त्री) गरी
**त्रयः** = तीन प्रकारका
**स्त्रीगणाः** = स्त्रीहरू
**उदपद्यन्त** = उत्पन्न भए
**याः वै** = जुन ती स्त्रीहरू
**बिलायनं** = अतल लोकमा
**प्रविष्टं पुरुषं** = बस्ने पुरुषलाई
**हाटकाख्येन** = हाटक नाम गरेको
**रसेन** = रसद्वारा
**साधयित्वा** = सम्भोगका लागि सामर्थ्यवान् बनाएर
**स्वविलासावलोकनानुरागस्मित-संलापोपगूहनादिभिः** = आफ्नो असाधारण हाउभाउ आदि विलासले, कटाक्ष, अनुराग, मुस्कान, प्रणयालाप, आलिङ्गन आदिद्वारा
**स्वैरं किल** = यथेष्ट
**रमयन्ति** = रमण गराउँछन्
**यस्मिन्** = जुन हाटकरस
**उपयुक्ते** = पिएपछि
**मदान्धः इव** = मदले अन्ध पुरुष झैं
**आत्मानम्** = आफूलाई

**अयुतमहागजबलम्** = दश हजार ठुला हात्ती झैँ बलियो भएको
**अभिमन्यमानः** = सोच्ने
**पुरुषः** = पुरुष
**अहं** = म
**ईश्वरः** = ईश्वर हुँ
**अहम्** = म
**सिद्धः इति** = सिद्ध हुँ भनी
**कत्थते** = भन्दछ

**वाक्यार्थ–** अतल लोकमा बल नाम गरेको मय दानवको छोरो बस्दछ। यस मय दानवले छयानब्बे प्रकारका मायाको सृष्टि गरेको छ। अहिले पनि कोही-कोही मायावी पुरुषले छयानब्बे प्रकारका मायामध्ये कुनै-कुनै माया जान्दछन्। एक पटक हाइ गर्न लाग्दा त्यस मय दानवका मुखबाट स्वैरिणी (आफूसमानको वर्ण हुने पुरुषसँग रमण गर्ने स्त्री), कामिनी (जोसँग पनि रमण गर्ने स्त्री) र पुंश्चली (अत्यन्त चञ्चल स्वभाव भएकी स्त्री) गरी तीन प्रकारका स्त्रीहरू प्रकट भए। यिनीहरूले यस लोकमा रहने पुरुषहरूलाई हाटक नाम गरेको रस पिलाएर सम्भोगका लागि समर्थ बनाई आफ्नो प्रेमपूर्ण हाउभाउ, मुस्कान, आलिङ्गन आदिद्वारा मुग्ध पार्दै आफ्नो इच्छा अनुसार क्रीडा गर्दछन्। त्यो हाटक रस पिई मदान्ध बनेका एवं दश हजार हात्तीको समान बल भएका ती पुरुषहरू 'म ईश्वर हुँ' 'म सिद्ध हुँ' भन्दै हिँड्दछन्।

**ततोऽधस्ताद् वितले हरो भगवान् हाटकेश्वरः स्वपार्षदभूतगणावृतः प्रजापतिसर्गोपबृंहणाय भवो भवान्या सह मिथुनीभूत आस्ते यतः प्रवृत्ता सरित्प्रवरा हाटकी नाम भवयोर्वीर्येण यत्र चित्रभानुर्मातरिश्वना समिध्यमान ओजसा पिबति तन्निष्ठ्यूतं हाटकाख्यं सुवर्णं भूषणेनासुरेन्द्रावरोधेषु पुरुषाः सह पुरुषीभिर्धारयन्ति ॥ १७ ॥**

**पदार्थ–**
**ततः** = त्यो अतल लोकभन्दा
**अधस्तात्** = दश हजार योजन तल रहेको
**वितले** = वितल लोकमा
**प्रजापतिसर्गोपबृंहणाय** = ब्रह्माले गर्ने सृष्टिको वृद्धिका लागि
**भवान्या सह** = पार्वतीले सहित
**मिथुनीभूतः** = जोडी भएर
**हाटकेश्वरः** = हाटकेश्वर नामक
**हरः** = भक्तहरूका पाप नाश गर्ने
**भगवान् भवः** = भगवान् शङ्कर
**स्वपार्षदभूतगणावृतः** = आफ्ना पार्षद भूतगणहरूले सहित भएर
**आस्ते** = बस्नुहुन्छ
**यतः** = जुन वितलबाट
**भवयोः** = शिव र पार्वतीको
**वीर्येण** = शक्तिले
**हाटकी नाम** = हाटकी नाम भएकी
**सरित्प्रवरा** = श्रेष्ठ नदी
**प्रवृत्ता** = बगेकी छन्
**यत्र** = जुन यो वितलमा
**मातरिश्वना** = वायुद्वारा
**समिध्यमानः** = धपक्क बलेका
**चित्रभानुः** = अग्निले
**ओजसा** = बलपूर्वक
**पिबति** = जल पिउँछन्
**तन्निष्ठ्यूतं** = ती चित्रभानुले थुकेर बनेको
**हाटकाख्यं** = हाटक नाम गरेको
**सुवर्णं** = सुनलाई
**पुरुषाः** = पुरुषहरूले
**असुरेन्द्रावरोधेषु** = दानवराजको अन्तःपुरमा
**पुरुषीभिः सह** = स्त्रीहरूले सहित

भएर
**भूषणेन** = गहनाको रूपमा
**धारयन्ति** = धारण गर्दछन्

**वाक्यार्थ–** अतल लोकभन्दा तल रहेको वितल लोकमा हाटकेश्वर भगवान् शङ्कर ब्रह्माको सृष्टिको निरन्तरताको लागि भवानी र आफ्ना पार्षदहरू सहित विहार गर्दै बस्नुहुन्छ। त्यहाँ भवानीशङ्करको शक्तिद्वारा हाटकी नाम गरेकी पवित्र नदी बग्दछिन्। वायुले प्रेरित भएका अग्निले यस नदीको जल उत्साहपूर्वक पिउँदछन्। ती चित्रभानुले थुकेर बनेको हाटक नामक सुनलाई दैत्यराजका दरबारका स्त्री र पुरुषहरूले गहनाको रूपमा धारण गर्दछन्।

**ततोऽधस्तात् सुतले उदारश्रवाः पुण्यश्लोको विरोचनात्मजो बलिर्भगवता महेन्द्रस्य प्रियं चिकीर्षमाणेनादितेर्लब्धकायो भूत्वा वटुवामनरूपेण पराक्षिप्तलोकत्रयो भगवदनुकम्पयैव पुनः प्रवेशित इन्द्रादिष्वविद्यमानया सुसमृद्धया श्रियाभिजुष्टः स्वधर्मेणाराधयं-स्तमेव भगवन्तमाराधनीयमपगतसाध्वस आस्तेऽधुनापि ॥ १८ ॥**

**पदार्थ–**
**ततः** = त्यो वितलभन्दा दश हजार योजन
**अधस्तात्** = तल रहेको
**सुतले** = सुतल लोकमा
**उदारश्रवाः** = परम यशस्वी
**पुण्यश्लोकः** = पवित्र चरित्रवाला
**विरोचनात्मजः** = विरोचनका पुत्र
**बलिः** = बलि महाराजले
**महेन्द्रस्य** = इन्द्रको
**प्रियं** = कल्याण
**चिकीर्षमाणेन** = गर्न चाहने
**अदितेः** = अदितिबाट
**लब्धकायः भूत्वा** = जन्म (शरीर) ग्रहण गरेर
**वटुवामनरूपेण** = वामनरूप वटुक (ब्रह्मचारी)को भेष लिएका
**भगवता** = भगवान् नारायणद्वारा
**पराक्षिप्तलोकत्रयः** = तीन पाउको निहुँले तीनै लोक लिइएका
**पुनः** = फेरि
**भगवदनुकम्पया एव** = भगवान्को दयाले नै
**प्रवेशितः** = सुतलमा पठाइएका र
**इन्द्रादिषु** = इन्द्र आदि देवतामा पनि
**अविद्यमानया** = नभएको
**सुसमृद्धया** = अत्यधिक समृद्धिपूर्ण
**श्रिया** = सम्पत्तिद्वारा
**अभिजुष्टः** = भोग गरिरहेका
**अपगतसाध्वसः** = इन्द्र आदि देवताबाट प्राप्त हुने भयदेखि निश्चिन्त भएका बलि
**स्वधर्मेण** = भगवान्‌द्वारा उपदिष्ट आफ्नो धर्मको आचरण गर्दै
**आराधनीयम्** = परम पूजनीय
**तम् एव** = उनै वामनरूप
**भगवन्तम्** = भगवान्‌लाई
**आराधयन्** = पूजा गर्दै
**अधुना अपि** = अहिले पनि
**आस्ते** = बसिरहेका छन्

**वाक्यार्थ–** वितल लोकभन्दा तल रहेको सुतल लोकमा महायशस्वी पवित्र कीर्ति विरोचनका छोरा, राजा बलि बस्दछन्। इन्द्रको कल्याण गर्न अदितिको गर्भबाट वामनको रूपमा जन्मनुभएका भगवान् नारायणले तीन पाउमा सम्पूर्ण राज्यसम्पत्ति हरण गरेर पनि फेरि कृपा गरेर यी

बलिराजालाई सुतल लोकको राजा बनाइदिनुभएको हो। इन्द्रको भन्दा बढ्ता सम्पत्ति भएका यी बलिराजा आज पनि आफ्ना धर्म र आचरणअनुसार परमपूज्य भगवान् वामनको आराधना गरेर बसेका छन्।

**नो एवैतत् साक्षात्कारो भूमिदानस्य यत् तद्**
**भगवत्यशेषजीवनिकायानां जीवभूतात्मभूते परमात्मनि वासुदेवे**
**तीर्थतमे पात्र उपपन्ने परया श्रद्धया परमादरसमाहितमनसा**
**सम्प्रतिपादितस्य साक्षादपवर्गद्वारस्य यद् बिलनिलयैश्वर्यम्॥ १९॥**

**पदार्थ–**
**यत्** = जुन
**बिलनिलयैश्वर्यम्** = भूविवर वा सुतल लोकको ऐश्वर्य छ
**एतत्** = यो
**अशेषजीवनिकायानां** = सम्पूर्ण प्राणीसमूहहरूका
**जीवभूतात्मभूते** = जीवको रूपमा रहनुहुने आत्मस्वरूप र
**तीर्थतमे** = सबै जीवका नियन्ता
**भगवति वासुदेवे** = भगवान् वासुदेव रूप
**परमात्मनि** = परमात्मालाई
**पात्रे** = सत्पात्रको रूपमा
**उपपन्ने** = प्राप्त गरेपछि
**परया** = अत्यन्त
**श्रद्धया** = श्रद्धाले युक्त
**परमादरसमाहितमनसा** = परम आदरका कारण स्थिर मनद्वारा
**सम्प्रतिपादितस्य** = समर्पण गरिएको
**साक्षात्** = साक्षात्
**अपवर्गद्वारस्य** = मोक्षद्वार भएको
**भूमिदानस्य** = त्रिलोकरूप भूमिदानको
**साक्षात्कारः** = फल
**नो एव** = हुन सक्दैन

**वाक्यार्थ–** राजा बलिले साक्षात् भगवान् नारायणलाई श्रद्धापूर्वक गरेको भूमिदानको फल केवल सुतल लोकको ऐश्वर्य प्राप्त गर्नु मात्र पर्याप्त छैन। सम्पूर्ण प्राणीका आत्मा र नियन्ताको रूपमा रहनुहुने परमात्मालाई सत्पात्रको रूपमा पाएर उहाँलाई श्रद्धापूर्वक एकाग्र भई गरिएको त्यो भूमिदानको फल अनित्य ऐश्वर्य मात्र हुन सक्दैन, मोक्ष मात्र त्यसको उचित फल हो।

**विवरण–** कुनै पनि उदात्त कर्म, कठोर साधना वा तपस्याको परम फल भनेको मोक्ष नै हो। तपस्या आदिबाट ऐश्वर्य आदि फल पनि प्राप्त हुन सक्छ तर त्यो अनित्य छ, एक दिन त्यसको नाश हुन्छ। यसर्थ परमात्माको प्राप्ति र त्यसबाट प्राप्त हुने मोक्ष नै मुख्य फल हुन्छ भन्ने देखाउनका लागि नै यहाँ बलिले साक्षात् भगवान् नारायणलाई श्रद्धापूर्वक गरेको उदात्त कर्म भूमिदानको फल केवल सुतल लोकको ऐश्वर्य प्राप्त गर्नु मात्र पर्याप्त होइन भनिएको हो।

**यस्य ह वाव क्षुतपतनप्रस्खलनादिषु विवशः सकृन्नामाभिगृणन्**
**पुरुषः कर्मबन्धनमञ्जसा विधुनोति यस्य हैव प्रतिबाधनं**
**मुमुक्षवोऽन्यथैवोपलभन्ते॥ २०॥**

**पदार्थ–**
**क्षुतपतनप्रस्खलनादिषु** = हाच्छिउँ गर्दा, लड्दा, चिप्लँदा यस्ता अवस्थामा
**विवशः** = विवश भएको
**पुरुषः** = पुरुषले
**सकृत्** = एकपल्ट मात्र
**यस्य** = जुन परमात्माको
**नाम अभिगृणन्**= नामोच्चारण गर्दा
**कर्मबन्धनम्** = कर्मबन्धनलाई
**ह वाव** = निश्चय नै
**अञ्जसा** = सजिलैसँग
**विधुनोति** = नष्ट गर्दछ
**यस्य ह एव** = जुन कर्मबन्धनको
**प्रतिबाधनं** = विनाशका लागि
**मुमुक्षवः** = मुमुक्षुहरू
**अन्यथा एव** = साङ्ख्य, योग आदिद्वारा प्रतिपादित क्लेशदायी अनेक साधनहरूको
**उपलभन्ते** = आश्रय लिन्छन्

**वाक्यार्थ–** मुमुक्षुहरूले ठुलो योग साधनद्वारा कष्टपूर्वक नष्ट गर्ने कर्मबन्धनलाई हाच्छिउँ गर्दा, लड्दा र चिप्लँदा आत्तिएर एक पटक पनि भगवान्को नाम उच्चारण गर्ने व्यक्तिले सजिलै नष्ट गर्दछ। (साक्षात् भगवान्लाई गरेको भूमिदानको फल के होला ?)

**तद्भक्तानामात्मवतां सर्वेषामात्मन्यात्मद आत्मतयैव ॥ २१ ॥**

**पदार्थ–**
**तत्** = त्यसैले
**आत्मवतां** = आफ्ना ज्ञानी
**भक्तानाम्** = भक्तहरूलाई
**आत्मदे** = आफ्नै स्वरूप प्रदान गर्ने
**सर्वेषाम्** = सम्पूर्ण प्राणीहरूका
**आत्मनि** = आत्मारूप भगवान्मा
**आत्मतया एव** = आत्मभावले (गरिएको भूमिदानको फल यत्ति मात्र त होइन)

**वाक्यार्थ–** त्यसैले आफ्ना भक्त र ज्ञानीहरूलाई आफ्नै स्वरूप प्रदान गर्ने र सम्पूर्ण प्राणीहरूका आत्मारूप भगवान्लाई भक्तिपूर्वक आत्मभावले गरिएको भूमिदानको फल सुतल लोकको ऐश्वर्य मात्र हुन सक्दैन।

**न वै भगवान् नूनममुष्यानुजग्राह यदुत पुनरात्मानुस्मृतिमोषणं मायामयभोगैश्वर्यमेवातनुतेति ॥ २२ ॥**

**पदार्थ–**
**नूनम्** = निश्चय नै
**अमुष्य** = यी बलिलाई
**भगवान्** = भगवान्ले
**वै** = निश्चय नै
**न अनुजग्राह** = अनुग्रह गर्नुभएन
**यत् उत पुनः** = किनभने
**आत्मानुस्मृतिमोषणं** = भगवान्को आफ्नो स्वरूपको स्मृतिलाई चोर्ने (विस्मृति गराउने)
**मायामयं** = माया (प्रकृति)को कार्य भएको
**भोगैश्वर्यम् एव** = भोग र ऐश्वर्य नै
**अमुम्** = यिनलाई
**अतनुत इति** = विस्तार (प्रदान) गर्नुभयो

**वाक्यार्थ–** यदि भगवान्ले बलिले गरेको सर्वस्व दानको सट्टामा आफैँलाई भुलाइदिने अनित्य भोग र ऐश्वर्य मात्र दिनुभएको हो भने भगवान्ले बलिलाई वास्तवमा अनुग्रह गर्नुभएन।

**यत् तद् भगवतानधिगतान्योपायेन याच्ञाच्छलेनापहृतस्वशरीरा-वशेषितलोकत्रयो वरुणपाशैश्च सम्प्रतिमुक्तो गिरिदर्यां चापविद्ध इति होवाच ॥ २३ ॥**

**पदार्थ–**
**यत् तत्** = जुन ती बलिबाट
**अनधिगतान्योपायेन** = छलबाहेक अरू कुनै उपाय प्राप्त नगरेका
**भगवता** = भगवान्‌द्वारा
**याच्ञाच्छलेन** = चार पाउ जमिन माग्ने वहानाले
**अपहृतस्वशरीरावशेषित-लोकत्रयः** = आफ्नो शरीरबाहेकको तीनै लोक हरण गरिएका र
**वरुणपाशैः च** = वरुणपाशद्वारा
**सम्प्रतिमुक्तः** = राम्ररी बन्धनमा पारिएका
**गिरिदर्यां** = पर्वतीय गुफामा
**अपविद्धः च** = थुनिएका बलिले
**ह** = निश्चय नै
**इति उवाच** = यसो भनेका थिए

**वाक्यार्थ–** अरू कुनै उपाय नभएर भगवान्‌ले जमिन माग्ने वहानाले बलिको तीनै लोकको राज्य खोसी केवल शरीर मात्र बाँकी राख्नुभयो। त्यत्तिले पनि नपुगेर उसलाई वरुणपाशले बाँधेर पर्वतको गुफामा फालिदिनुभयो। त्यस समयमा पनि बलिले यस्तो भनेका थिए–

**नूनं बतायं भगवानर्थेषु न निष्णातो योऽसाविन्द्रो यस्य सचिवो**
**मन्त्राय वृत एकान्ततो बृहस्पतिस्तमतिहाय स्वयमुपेन्द्रेणात्मान-**
**मयाचतात्मनश्चाशिषो नो एव तद्दास्यमतिगम्भीरवयसः कालस्य**
**मन्वन्तरपरिवृत्तं कियल्लोकत्रयमिदम् ॥ २४ ॥**

**पदार्थ–**
**यः असौ** = जुन यी
**भगवान्** = ऐश्वर्यशाली
**इन्द्रः** = देवराज इन्द्र छन्
**बृहस्पतिः** = देवगुरु बृहस्पति
**यस्य** = जसको
**सचिवः** = सहायक (सहयोगी) छन् तथा
**मन्त्राय** = विचार विमर्शका लागि
**एकान्ततः** = परम भक्तिपूर्वक
**वृतः** = नियुक्त गरिएका छन्
**नूनं बत** = निश्चय नै
**अयं** = यी इन्द्र
**अर्थेषु** = आफ्नो प्रयोजनमा
**न निष्णातः** = सिपालु छैनन् किनभने इन्द्रले
**तम्** = ती भगवान्‌लाई
**अतिहाय** = त्यागेर
**स्वयम् उपेन्द्रेण** = वामनरूपधारी साक्षात् नारायणद्वारा
**आत्मानम्** = आफू (म बलि) लाई
**आत्मनः च** = आफ्नो (म बलिको)
**आशिषः एव** = तीनै लोकको भोग नै
**अयाचत** = मागे (मूर्खताले गर्दा)
**तद्दास्यम्** = भगवान्‌को दासत्व
**नो** = मागेनन्
**अतिगम्भीरवयसः** = अत्यन्तै वेगशाली (परिवर्तनशील वा क्षणिक)
**कालस्य** = समयको हिसाबले
**मन्वन्तरपरिवृत्तं** = एक मन्वन्तरसम्म मात्र रहने
**इदम्** = यो
**लोकत्रयम्** = तीन लोक त
**कियत्** = कति हो र

**वाक्यार्थ–** दुःखको कुरा यी इन्द्र विद्वान् भएर पनि आफ्नो स्वार्थ पूरा गर्नमा सिपालु रहेनछन् किनभने देवगुरु बृहस्पतिजस्ता सल्लाहकार भएर पनि उनले भगवान्‌लाई माध्यम बनाएर मेरो राज्य मागे। सम्पूर्ण ऐश्वर्यभन्दा ठुलो भगवान्‌को चरणकमलको सेवा नमागेर तुच्छ राज्यभोग माग्नु निश्चय नै उनको मूर्खता हो। केवल एक मन्वन्तरसम्म मात्र रहने यी तीनै लोक त के नै महत्त्वपूर्ण वस्तु हुन् र ?

**यस्यानुदास्यमेवास्मत्पितामहः किल वव्रे न तु स्वपित्र्यं यदुताकुतोभयं पदं दीयमानं भगवतः परमिति भगवतोपरते खलु स्वपितरि ॥ २५ ॥**

**पदार्थ–**
**खलु** = निश्चय नै
**अस्मत्पितामहः** = हाम्रा हजुरबा प्रह्लादले (असली स्वार्थ बुझेकोले)
**स्वपितरि** = आफ्ना पिता हिरण्यकशिपु
**उपरते** = मरेपछि
**यत् उत** = जुन
**अकुतोभयं** = कतैबाट पनि भय नभएको
**भगवता** = भगवान्ले
**दीयमानं** = दिन चाहेको
**स्वपित्र्यं** = आफ्नो पिताको
**पदं किल** = निष्कण्टक राज्य पनि
**भगवतः परम् इति** = भगवान्देखि भिन्न वस्तु भन्ने बुझी
**न वव्रे** = वरण गर्नुभएन
**यस्य** = जुन भगवान्को
**अनुदास्यम् एव तु** = दासता चाहिँ याचना गर्नुभयो

**वाक्यार्थ–** यसै कारणले मेरा हजुरबुबा प्रह्लादले भगवान् नृसिंहको हातबाट आफ्ना पिता हिरण्यकशिपुको मृत्यु भएपछि भगवत्सेवाकै वर माग्नुभएको थियो। भगवान्ले निष्कष्टक राज्य दिन खोज्दा पनि त्यसले भगवान्देखि टाढा बनाउने सम्झेर उहाँले त्यसलाई स्वीकार नगरी केवल भगवान्को सेवा माग्नुभयो।

**तस्य महानुभावस्यानुपथममृजितकषायः को वास्मद्विधः परिहीणभगवदनुग्रह उपजिगमिषतीति ॥ २६ ॥**

**पदार्थ–**
**महानुभावस्य** = महामनस्वी
**तस्य** = ती प्रह्लादका
**अनुपथम्** = मार्गको पछि–पछि
**अमृजितकषायः** = राग, द्वेष आदि क्षीण नभएको
**परिहीणभगवदनुग्रहः** = भगवान्को अनुग्रह प्राप्त नभएको
**अस्मद्विधः** = म (बलि) जस्तो
**कः वा** = कुन पुरुष
**उपजिगमिषति इति** = जान सक्छ

**वाक्यार्थ–** त्यस्ता महापुरुषको अनुसरण म जस्तो राग, द्वेषले भरिएको र भगवान्को कृपा नमिलेको पुरुषले कसरी गर्न सक्ने ?

**तस्यानुचरितमुपरिष्टाद् विस्तरिष्यते यस्य भगवान् स्वयमखिल-जगद्गुरुर्नारायणो द्वारि गदापाणिरवतिष्ठते निजजनानुकम्पितहृदयो येनाङ्गुष्ठेन पदा दशकन्धरो योजनायुतायुतं दिग्विजय उच्चाटितः ॥ २७ ॥**

**पदार्थ–**
**तस्य** = ती बलिको
**अनुचरितम्** = जीवनचरित्र
**उपरिष्टात्** = माथि (अगाडि अष्टमस्कन्धमा)
**विस्तरिष्यते** = विस्तारपूर्वक

बताइनेछ
**यस्य** = जुन बलिको
**द्वारि** = ढोकामा
**अखिलजगद्गुरुः** = ब्रह्म आदि सम्पूर्ण प्राणीहरूका गुरु
**निजजनानुकम्पितहृदयः** = आफ्ना भक्तप्रति दयाले युक्त हृदय भएका
**स्वयम् भगवान्** = साक्षात् भगवान्
**गदापाणिः** = गदा हातमा लिने
**नारायणः** = नारायण नै
**अवतिष्ठते** = बस्नुहुन्छ
**येन** = जुन भगवान् नारायणले
**दिग्विजये** = दिग्विजयका लागि (बलिको द्वारमा प्रवेश गरेको)
**दशकन्धरः** = रावण
**पदा अङ्गुष्ठेन** = पाउको बुढी औँलाले नै
**योजनायुतायुतं** = एक लाख योजन टाढा
**उच्चाटितः** = फ्याँकिएको थियो

**वाक्यार्थ—** दानी बलि राजाको चरित्र अष्टम स्कन्धमा विस्तारपूर्वक वर्णन गरिनेछ। राजा बलिको ढोकामा भक्तहरूका लागि अत्यन्त दयालु हृदय भएका सम्पूर्ण जगत्का परमपूज्य गुरु भगवान् नारायण स्वयं हातमा गदा लिई पहरा दिइरहनुभएको छ। जुन भगवान्ले एक पटक दिग्विजय गर्दै सुतल लोकमा पुगेको घमण्डी रावणलाई आफ्नो पाउको बुढी औँलाको प्रहारले नै लाखौँ योजन पर फालिदिनुभएको थियो।

**ततोऽधस्तात् तलातले मयो नाम दानवेन्द्रस्त्रिपुराधिपतिर्भगवता पुरारिणा त्रिलोकीशं चिकीर्षुणा निर्दग्धस्वपुरत्रयस्तत्प्रसादाल्लब्ध-पदो मायाविनामाचार्यो महादेवेन परिरक्षितो विगतसुदर्शनभयो महीयते ॥ २८ ॥**

**पदार्थ—**
**ततः** = त्यस सुतलबाट
**अधस्तात्** = तल रहेको
**तलातले** = तलातल लोकमा
**त्रिपुराधिपतिः** = तीनै लोकका मालिक
**मयः नाम** = मय नाम गरेका
**दानवेन्द्रः** = असुरराज बस्दछन्
**त्रिलोकीशं** = तीनै लोकमा शान्ति
**चिकीर्षुणा** = चाहने
**भगवता** = भगवान्
**पुरारिणा** = शङ्करद्वारा
**निर्दग्धस्वपुरत्रयः** = आफ्ना तीनै लोक डढाइएपछि
**तत्प्रसादात्** = उनै भगवान् शिवको कृपाबाट
**लब्धपदः** = डढेका तीनै लोक फेरि प्राप्त गरेको र
**महादेवेन** = महादेवद्वारा
**परिरक्षितः** = रक्षा गरिएकाले
**विगतसुदर्शनभयः** = नारायणको सुदर्शनास्त्रबाट पनि नडराउने
**मायाविनाम्** = मायावीहरूका
**आचार्यः** = गुरु मय
**महीयते** = तलातल लोकमा पूजित छन्

**वाक्यार्थ—** सुतलभन्दा तल रहेको तलातल लोकमा तीनै लोकका मालिक दानवराज मय बस्दछन्। पहिला तीनै लोकको कल्याणका निम्ति भगवान् शङ्करले मयका तीनै लोक भस्म गरिदिनुभएको थियो तापनि पछि फेरि भगवान्कै कृपाले उनले यो लोक प्राप्त गरेका हुन्। भगवान् महादेवद्वारा सधैँ सुरक्षित हुनाले सुदर्शन चक्रको समेत कुनै डर नभएका मायावीहरूका गुरु ती मयलाई तलातलवासीहरू अत्यन्त आदर गर्दछन्।

**ततोऽधस्तान्महातले काद्रवेयाणां सर्पाणां नैकशिरसां क्रोधवशो नाम गणः कुहकतक्षककालियसुषेणादिप्रधाना महाभोगवन्तः पतत्त्रिराजाधिपतेः पुरुषवाहादनवरतमुद्विजमानाः स्वकलत्रापत्य-सुहृत्कुटुम्बसङ्गेन क्वचित् प्रमत्ता विहरन्ति ॥ २९ ॥**

**पदार्थ–**
**ततः** = त्यस तलातलदेखि
**अधस्तात्** = तल रहेको
**महातले** = महातल लोकमा
**काद्रवेयाणां** = कद्रूका सन्तान
**नैकशिरसां** = अनेक फणा भएका
**सर्पाणां** = सर्पहरूको
**क्रोधवशः नाम** = क्रोधवश नामक
**गणः** = समूह बसेको छ
**पतत्त्रिराजाधिपतेः** = पक्षिराज
**पुरुषवाहात्** = भगवान् नारायणका वाहन गरुडजीबाट
**अनवरतम्** = निरन्तर
**उद्विजमानाः** = तर्सिएर पनि
**क्वचित्** = कहिलेकाहीँ
**स्वकलत्रापत्यसुहृत्कुटुम्बसङ्गेन** = आफ्ना पत्नी, पुत्र, मित्र, कुटुम्ब आदिको साथमा रहँदा
**प्रमत्ताः** = प्रमादी (विषयासक्त)
**कुहकतक्षककालियसुषेणादि-प्रधानाः** = कुहक, तक्षक, कालिय, सुषेण आदि गरिएका
**महाभोगवन्तः** = विशाल शरीर भएका नाग (सर्प)हरू
**विहरन्ति** = विहार गर्दछन्

**वाक्यार्थ–** तलातल लोकभन्दा तल महातल लोक रहेको छ। त्यस लोकमा अनेक फणा भएका क्रोधवश नाम गरेका कद्रूका सन्तान सर्पहरूको समूह रहेको छ। यिनमा कुहक, तक्षक, कालिय र सुषेण आदि मुख्य सर्पहरू रहेका छन्। यी सर्पहरू भगवान् नारायणका वाहन पक्षीहरूका राजा गरुडजीको भयले सधैँ हड्बडाइरहे तापनि कहिलेकाहीँ विषयासक्त भई आफ्ना पत्नी, पुत्र र मित्र आदिका साथमा विहार गर्दछन्।

**ततोऽधस्ताद् रसातले दैतेया दानवाः पणयो नाम निवातकवचाः कालेया हिरण्यपुरवासिन इति विबुधप्रत्यनीका उत्पत्त्या महौजसो महासाहसिनो भगवतः सकललोकानुभावस्य हरेरेव तेजसा प्रतिहतबलावलेपा बिलेशया इव वसन्ति ये वै सरमयेन्द्रदूत्या वाग्भिर्मन्त्रवर्णाभिरिन्द्राद् बिभ्यति ॥ ३० ॥**

**पदार्थ–**
**ततः** = त्यस महातलदेखि
**अधस्तात्** = तल रहेको
**रसातले** = रसातल लोकमा
**निवातकवचाः**= निवातकवच आदि नाम भएका
**दैतेयाः** = दैत्यहरू
**कालेयाः** = कालेय नामक
**दानवाः** = दानवहरू र
**पणयः नाम** = पणि नामका
**हिरण्यपुरवासिनः इति** = हिरण्यपुरवासीहरू बस्दछन्
**उत्पत्त्या** = जन्मदेखि नै
**महौजसः** = अत्यन्त शक्तिशाली
**महासाहसिनः** = अधिक साहसी

**विबुधप्रत्यनीकाः** = देवताका शत्रु
**सकललोकानुभावस्य** = सम्पूर्ण लोकमा प्रभाव भएका
**भगवतः हरेः एव** = भगवान् नारायणको नै
**तेजसा** = तेज (सुदर्शनचक्र)द्वारा
**प्रतिहतबलावलेपाः** = शक्तिको अभिमान चूर्ण भएका ती असुरहरू
**बिलेशयाः इव** = सर्प झैँ लुकेर
**वसन्ति** = बस्दछन्
**ये वै** = जुन दैत्यहरू
**इन्द्रदूत्या** = इन्द्रकी सन्देशवाहिका दूती
**सरमया** = सरमाद्वारा उच्चरित
**मन्त्रवर्णाभिः** = मन्त्रवर्ण आदि युक्त
**वाग्भिः** = वाक्यहरूद्वारा
**इन्द्रात्** = देवराज इन्द्रबाट
**बिभ्यति** = डराउँछन्

**वाक्यार्थ–** महातलदेखि तल रसातल रहेको छ। त्यस रसातलमा निवातकवच नामका दैत्यहरू, कालेय नाममा दानवहरू र पणि नामका हिरण्यपुरवासीहरू रहन्छन्। देवताका शत्रु भएका यिनीहरू जन्मैदेखि अत्यन्त बलिया र साहसी भए तापनि भगवान् नारायणको सुदर्शन चक्रले बल र घमण्ड नासिएकाले सर्प झैँ लुकेर बस्दछन्। इन्द्रकी सन्देशवाहिका सरमाका मन्त्रवर्ण आदि युक्त सन्देश वाक्य सुनेर यिनीहरू इन्द्रदेखि सधैँ डराइरहन्छन्।

**विवरण–** यस प्रसङ्गमा प्रसिद्ध वैदिक आख्यान यसप्रकार छ– एक पटक पणि नामको असुरले पृथिवीलाई रसातलमा लगेर लुकाएको थियो। इन्द्रले पृथिवीको खोजी गर्न सरमा नाम गरेकी दूतीलाई पठाए। सरमाले पृथिवीलाई पणिले रसातलमा पुऱ्याएको थाहा पाइन् र रसातल पुगिन्। त्यसपछि पणि आदि दानवहरूले सरमासँग सन्धि गर्न चाहे तर सरमा सन्धिको पक्षमा थिइनन्। अतः उनले इन्द्रको स्तुति गर्दै दैत्यहरूलाई कठोर वचनले भनिन्– **हताः इन्द्रेण पणयः शयध्वमिति** (हे पापीहरू ! तिमीहरू इन्द्रबाट मरेर पृथ्वीमा सुत्नेछौ)। सरमाको यस्तो वचनका कारण पणि आदि असुरहरू इन्द्रबाट सधैँ डराएर रहन थाले।

**ततोऽधस्तात् पाताले नागलोकपतयो वासुकिप्रमुखाः शङ्ख-कुलिकमहाशङ्खश्वेतधनञ्जयधृतराष्ट्रशङ्खचूडकम्बलाश्वतरदेवदत्ता-दयो महाभोगिनो महामर्षा निवसन्ति येषामु ह वै पञ्चसप्तदशशतसहस्रशीर्षाणां फणासु विरचिता महामणयो रोचिष्णवः पातालविवरतिमिरनिकरं स्वरोचिषा विधमन्ति ॥ ३१ ॥**

**पदार्थ–**
**ततः** = त्यस रसातलदेखि
**अधस्तात्** = (दश हजार योजन) तल रहेको
**पाताले** = पाताल लोकमा
**वासुकिप्रमुखाः** = वासुकि समेतका
**शङ्खकुलिकमहाशङ्खश्वेत-धनञ्जयधृतराष्ट्रशङ्खचूड-कम्बलाश्वतरदेवदत्तादयः** = शङ्ख, कुलिक, महाशङ्ख, श्वेत, धनञ्जय, धृतराष्ट्र, शङ्खचूड, कम्बल, अश्वतर, देवदत्त आदि
**महामर्षाः** = अत्यन्तै रिसाहा
**महाभोगिनः** = ठुला शरीर भएका
**नागलोकपतयः** = नागलोकका पतिहरू
**निवसन्ति** = बस्दछन्
**उ ह वै** = निश्चय नै

| | | |
|---|---|---|
| **पञ्चसप्तदशशतसहस्रशीर्षाणां** = पाँच, सात, दश, सय र कसैको हजार ओटा शिर भएका | **विरचिताः** = रहेका | लोकमा रहेको अन्धकारको समूहलाई |
| **येषाम्** = जुन यी नागराजहरूको | **रोचिष्णवः** = चम्किला | **विधमन्ति** = नष्ट गर्दछन् |
| **फणासु** = फणाहरूमा | **महामणयः** = ठुला मणिहरूले | |
| | **स्वरोचिषा** = आफ्नो कान्तिद्वारा | |
| | **पातालविवरतिमिरनिकरं** = पाताल | |

**वाक्यार्थ–** रसातलभन्दा दश हजार योजन तल पातालोक छ। त्यहाँ वासुकी, शङ्ख, कुलिक, महाशङ्ख, धनञ्जय, धृतराष्ट्र, शङ्खचूड, कम्बल, अश्वतर र देवदत्त आदि ठुला-ठुला फणा भएका अत्यन्त क्रोधी नागहरू बस्दछन्। तीमध्ये वासुकी यस लोकका प्रधान नाग हुन्। यी नागहरू कुनै पाँच कुनै सात, कुनै दश, कुनै सय र कुनै हजार शिर भएका छन्। तिनै शिरहरूमा रहेका प्रकाशयुक्त फणाको कान्तिले नै रसातलको सम्पूर्ण अन्धकार नष्ट गर्दछ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां पञ्चमस्कन्धे राह्वादिस्थिति-बिलस्वर्गमर्यादानिरूपणं नाम चतुर्विंशोऽध्यायः ॥ २४ ॥**

# अथ पञ्चविंशोऽध्यायः

## सङ्कर्षण देवको वर्णन र स्तुति

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**तस्य मूलदेशे त्रिंशद्योजनसहस्रान्तर आस्ते या वै कला भगवतस्तामसी समाख्यातानन्त इति सात्वतीया द्रष्टृदृश्ययोः सङ्कर्षणमहमित्यभिमानलक्षणं यं सङ्कर्षणमित्याचक्षते ॥ १ ॥**

**पदार्थ–**
**तस्य** = त्यस पाताल लोकको
**मूलदेशे** = तलतिर
**त्रिंशद्योजनसहस्रान्तरे** = तीस हजार योजनको दूरीमा
**या वै** = जुन
**अनन्तः इति** = अनन्त नामले
**समाख्याता** = प्रसिद्ध
**भगवतः** = भगवान्को
**तामसी** = तमोगुणका कार्यको संहार गर्ने
**कला** = कला (मूर्ति)
**आस्ते** = छ
**सात्वतीयाः** = सात्वत तन्त्रमा निष्ठा भएका (पाञ्चरात्रागमका अनुयायी) भक्तहरू
**द्रष्टृदृश्ययोः** = द्रष्टा र दृश्यको
**अहम् इति अभिमानलक्षणं** = म यसको भोक्ता हुँ, यो मेरो भोग्य हो भन्ने अहङ्कारद्वारा
**सङ्कर्षणम्** = द्रष्टा र दृश्यलाई एकीकरण गर्ने
**यं** = भगवान्को जुन तामस कलालाई
**सङ्कर्षणम् इति** = सङ्कर्षण भनेर
**आचक्षते** = भन्दछन्

**वाक्यार्थ–** हे राजा ! पाताललोकभन्दा तल तीस हजार योजनको दूरीमा तमोगुणका कार्यको संहार गर्ने अनन्त नामले प्रसिद्ध भगवान्को नित्यकला छ। अहङ्काररूप भएकाले त्यसले द्रष्टा र दृश्यलाई तानेर एउटै गराउँछ। त्यसै हुनाले पञ्चरात्र आगमका अनुयायीहरूले भगवान्को यस स्वरूपलाई 'सङ्कर्षण' भन्दछन्।

**यस्येदं क्षितिमण्डलं भगवतोऽनन्तमूर्तेः सहस्रशिरस एकस्मिन्नेव शीर्षणि ध्रियमाणं सिद्धार्थ इव लक्ष्यते ॥ २ ॥**

**पदार्थ–**
**यस्य** = जुन
**सहस्रशिरसः** = हजार फणा र
**अनन्तमूर्तेः** = अनन्त स्वरूप भएका
**भगवतः** = भगवान् सङ्कर्षणको
**एकस्मिन् एव** = एउटा मात्र
**शीर्षणि** = फणामा
**ध्रियमाणं** = राखिएको
**इदं** = यो
**क्षितिमण्डलं** = भूमण्डल
**सिद्धार्थः इव** = सर्स्यूंको दाना झैं सानो
**लक्ष्यते** = लाग्दछ

**वाक्यार्थ–** भगवान् सङ्कर्षण हजार शिरवाला र अनन्त स्वरूपयुक्त हुनुहुन्छ। तीमध्ये एउटा शिरमा राखिएको यो सम्पूर्ण भूमण्डल सर्स्यूंको एउटा दानाजस्तो देखिन्छ।

**यस्य ह वा इदं कालेनोपसञ्जिहीर्षतोऽमर्षविरचित-रुचिरभ्रमद्भ्रुवोरन्तरेण साङ्कर्षणो नाम रुद्र एकादशव्यूहस्त्र्यक्ष-स्त्रिशिखं शूलमुत्तम्भयन्नुदतिष्ठत् ॥ ३ ॥**

**पदार्थ–**
**कालेन** = काल क्रमअनुसार
**ह वा** = निस्सन्देह
**इदं** = यो जगत्लाई
**उपसञ्जिहीर्षतः** = संहार गर्ने इच्छा भएका
**यस्य** = जुन भगवान्को
**अमर्षविरचितरुचिरभ्रमद्भ्रुवोः** = क्रोधबाट उत्पन्न भएर घुमिरहेको सुन्दर भ्रुकुटीको
**अन्तरेण** = बीचबाट
**साङ्कर्षणः नाम** = सङ्कर्षण नामका
**एकादशव्यूहः** = एघार ओटाको समूह भएका
**त्र्यक्षः** = तीन ओटा आँखा भएका (त्रिलोचन)
**रुद्रः** = रुद्र भनेर चिनिने शिवको अवतार
**त्रिशिखं** = तीन ओटा शिखा भएको
**शूलम्** = शूल (त्रिशूल)
**उत्तम्भयन्** = उठाउँदै
**उदतिष्ठत्** = प्रकट हुनुभयो

**वाक्यार्थ–** प्रलयकाल आएपछि जब भगवान्लाई यस संसारको संहार गर्ने इच्छा भयो तब क्रोधले गर्दा चञ्चल बनेर घुमिरहेका उहाँका दुबै भ्रुकुटीको बीचबाट तीन टुप्पा भएको त्रिशूल हातमा लिएका एघार मूर्ति र तीन नेत्र भएका 'सङ्कर्षण' नामका रुद्र प्रकट हुनुभयो।

**यस्याङ्घ्रिकमलयुगलारुणविशदनखमणिषण्डमण्डलेष्वहिपतयः सह सात्वतर्षभैरेकान्तभक्तियोगेनावनमन्तः स्ववदनानि परिस्फुरत्कुण्डल-प्रभामण्डितगण्डस्थलान्यतिमनोहराणि प्रमुदितमनसः खलु विलोकयन्ति ॥ ४ ॥**

**पदार्थ–**
**यस्य** = जुन सङ्कर्षण भगवान्को
**अङ्घ्रिकमलयुगलारुणविशद-नखमणिषण्डमण्डलेषु** = दुई ओटा चरणकमलको रातोरातो नङरूप मणिको समूहका घेरामा
**सात्वतर्षभैः सह** = श्रेष्ठ-श्रेष्ठ भक्तहरूका साथ
**एकान्तभक्तियोगेन** = एकाग्रता पूर्वक गरिएको शुद्ध भक्तिले
**अवनमन्तः** = नमस्कार गर्दै
**प्रमुदितमनसः** = प्रसन्नचित्त भएका
**अहिपतयः** = नागराजहरू
**परिस्फुरत्कुण्डलप्रभामण्डित-गण्डस्थलानि** = चम्किरहेको कुण्डलको प्रभाले अलङ्कृत गाला भएको
**अतिमनोहराणि** = अत्यन्त सुन्दर (आकर्षक)
**स्ववदनानि** = आफ्नो मुखलाई
**खलु** = निश्चय नै
**विलोकयन्ति** = हेर्दछन्

**वाक्यार्थ–** भगवान् सङ्कर्षणका चरणकमलका स्वच्छ र सफा नङहरू मणिको लहर झैं टल्किरहेका छन्। जब अन्य मुख्य-मुख्य भक्तले सहित भएर अनेक नागराजहरूले अत्यन्त भक्तिभावले उहाँलाई प्रणाम गर्दछन् तब उनीहरूले ती नखमणिहरूमा आफ्नो प्रसन्न अनुहारको

प्रतिबिम्ब देख्न थाल्दछन्। चम्किने कुण्डल र त्यसको प्रकाशले चम्किएका गालाले युक्त आफ्नो सुन्दर अनुहारलाई देखेर उनीहरूको मन अत्यन्त प्रसन्न हुन्छ।

**यस्यैव हि नागराजकुमार्य आशिष आशासानाश्चार्वङ्गवलय-विलसितविशदविपुलधवलसुभगरुचिरभुजरजतस्तम्भेष्वगुरुचन्दन-कुङ्कुमपङ्कानुलेपेनावलिम्पमानास्तदभिमर्शनोन्मथितहृदयमकरध्वजावेश-रुचिरललितस्मितास्तदनुरागमदमुदितमदविघूर्णितारुणकरुणावलोक-नयनवदनारविन्दं सव्रीडं किल विलोकयन्ति ॥ ५ ॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**यस्य एव** = जुन भगवान् सङ्कर्षणको
**चार्वङ्गवलयविलसितविशदविपुल-धवलसुभगरुचिरभुजरजत-स्तम्भेषु** = सुन्दर अङ्गमण्डलमा शोभायमान निष्कलङ्क लामा सेता सौभाग्यसूचक आकर्षक चाँदीको खम्भाजस्ता भुजामा
**अगुरुचन्दनकुङ्कुमपङ्कानुलेपेन** = अगुरु चन्दन र कुङ्कुमको लेपले
**अवलिम्पमानाः** = लेपन गरेका
**तदभिमर्शनोन्मथितहृदयमकर-ध्वजावेशरुचिरललितस्मिताः** = आफ्ना अङ्गहरूको स्पर्शबाट जिस्किएका कामदेवको प्रवेशका कारण मनमोहक र मृदुल मुस्कान भएका
**आशिषः** = आशीर्वाद (भोग)को
**आशासानाः** = चाहना गर्ने
**नागराजकुमार्यः** = नागराजका कन्याहरू (नागराजकुमारीहरू)
**सव्रीडं** = लज्जापूर्वक
**तदनुरागमदमुदितमदविघूर्णिता-रुणकरुणावलोकनयनवदना-रविन्दं** = भगवान् सङ्कर्षणको अनुराग र गर्वयुक्त तथा प्रसन्नता र दयापूर्ण गर्वका कारण हल्लिएका अलिअलि राता नेत्र र मुखरूपी कमललाई
**किल** = निस्सन्देह
**विलोकयन्ति** = हेर्दछन्

**वाक्यार्थ–** विभिन्न नागराजकुमारीहरू अनेक कामनासहित सङ्कर्षण भगवान्का चाँदीका स्तम्भसमान अत्यन्त सुशोभित, लामा-लामा, सेतो वर्ण भएका सुन्दर हातहरूमा अगुरु चन्दन र कुङ्कुम आदिको सुगन्धित लेप लगाउँछन्। त्यस सुन्दर अङ्गस्पर्शले गर्दा कुमारीहरूको मनमा कामवासनाको सञ्चार हुन्छ। त्यसपछि तिनीहरूले भगवान् सङ्कर्षणको सुन्दर मुखारविन्दलाई मधुर मुस्कानसहित लजाउँदै हेर्न थाल्दछन्।

**स एव भगवाननन्तोऽनन्तगुणार्णव आदिदेव उपसंहृतामर्षरोषवेगो लोकानां स्वस्तय आस्ते ॥ ६ ॥**

**पदार्थ–**
**अनन्तगुणार्णवः** = असङ्ख्य गुणका सागर
**आदिदेवः** = प्रथम देवता
**उपसंहृतामर्षरोषवेगः** = आफ्नो असहनशीलता र क्रोधको वेगलाई नियन्त्रण गरेका
**सः एव** = उनै सङ्कर्षण नामले परिचित

**भगवान् अनन्तः** = भगवान् अनन्त
**लोकानां** = संसारका
**स्वस्तये** = कल्याणका लागि
**आस्ते** = बस्नुहुन्छ

**वाक्यार्थ–** अनन्त गुणका स्वामी सङ्कर्षण नामले परिचित आदिदेव अनन्त आफ्नो सहन गर्न नसकिने स्वभाव र क्रोधको वेगलाई रोकेर सम्पूर्ण लोकको कल्याणका निम्ति विराजमान हुनुहुन्छ।

**ध्यायमानः सुरासुरोरगसिद्धगन्धर्वविद्याधरमुनिगणैरनवरतमदमुदित-**
**विकृतविह्वललोचनः सुललितमुखरिकामृतेनाप्यायमानः स्वपार्षद-**
**विबुधयूथपतीनपरिम्लानरागनवतुलसिकामोदमध्वासवेन माद्यन्मधु-**
**करव्रातमधुरगीतश्रियं वैजयन्तीं स्वां वनमालां नीलवासा**
**एककुण्डलो हलककुदि कृतसुभगसुन्दरभुजो भगवान् महेन्द्रो**
**वारणेन्द्र इव काञ्चनीं कक्षामुदारलीलो बिभर्ति॥ ७॥**

**पदार्थ–**
**सुरासुरोरगसिद्धगन्धर्वविद्याधर-मुनिगणैः** = देवता, दानव, नाग, सिद्ध, गन्धर्व, विद्याधर र ऋषि गणहरूद्वारा
**ध्यायमानः** = ध्यान गरिएका
**अनवरतमदमुदितविकृतविह्वल-लोचनः** = मदद्वारा निरन्तर प्रसन्न, चञ्चल तथा वरपर घुमिरहेका आँखा भएका
**सुललितमुखरिकामृतेन** = मधुर वाणीरूप अमृतद्वारा
**स्वपार्षदविबुधयूथपतीन्** = आफ्ना पार्षद र देवताका गणपतिहरूलाई
**आप्यायमानः** = हर्षित गराउने
**नीलवासाः** = निलो वस्त्र लगाउनुहुने
**एककुण्डलः** = कानमा एउटा मात्रै कुण्डल लगाउनुहुने
**हलककुदि** = हलोको बिँडमा
**कृतसुभगसुन्दरभुजः** = मङ्गलमय सुन्दर हात राख्नुहुने
**उदारलीलः** = भक्तहरूको मनोरथ पूर्ण गर्ने दिव्य लीलामा संलग्न
**भगवान्** = सङ्कर्षण भगवान्
**अपरिम्लानरागनवतुलसिकामोद-मध्वासवेन** = कहिल्यै फिका नहुने कान्ति भएको नयाँ तुलसीदलको सुगन्ध र मधुर मकरन्दद्वारा
**माद्यन्मधुकरव्रातमधुरगीतश्रियं** = उन्मत्त भँवराहरूका समूहहरूको मधुर गीतले शोभायमान
**स्वां** = आफ्नो
**वैजयन्तीं वनमालां** = वैजयन्ती नामको वनमालालाई
**महेन्द्रः** = देवराज इन्द्रका
**वारणेन्द्रः** = गजराज ऐरावतले
**काञ्चनीं** = सुनले निर्मित
**कक्षाम् इव** = मेखलालाई धारण गरे झैं
**बिभर्ति** = धारण गर्नुहुन्छ

**वाक्यार्थ–** देवता, असुर, नाग, सिद्ध, गन्धर्व, विद्याधर र मुनिहरू निरन्तर भगवान् सङ्कर्षणको ध्यान गरिरहन्छन्। उहाँका दुबै नेत्र निरन्तर मदले प्रफुल्लित, विह्वल र चञ्चल छन्। उहाँ आफ्ना सुललित वचनरूपी अमृतले आफ्ना पार्षद देवगणलाई सदा सन्तुष्ट गराइरहनुहुन्छ। उहाँको शरीरमा नीलाम्बर र कानमा कुण्डल चम्किरहेका छन्। उदार लीला गर्नुहुने उहाँको सुन्दर हात

हलोको बिँडमा राखिएको छ। घाँटीमा उहाँले इन्द्रको ऐरावत हात्तीले सुनको सिक्री धारण गरे झैँ वैजयन्ती माला पहिरनुभएको छ। कहिल्यै नओइलाउने मालाको सुगन्ध र नयाँ तुलसीदलको सुवासले उन्मत्त भएका भ्रमराहरू निरन्तर मधुरस्वरले भूँ भूँ गर्दै त्यस मालाको शोभालाई बढाइरहेका छन्।

**य एष एवमनुश्रुतो ध्यायमानो मुमुक्षूणामनादिकालकर्मवासना-**
**ग्रथितमविद्यामयं हृदयग्रन्थिं सत्त्वरजस्तमोमयमन्तर्हृदयं गत आशु**
**निर्भिनत्ति तस्यानुभावान् भगवान् स्वायम्भुवो नारदः सह तुम्बुरुणा**
**सभायां ब्रह्मणः संश्लोकयामास ॥ ८ ॥**

**पदार्थ–**
**एवम्** = यसप्रकार
**अनुश्रुतः** = भक्तहरूद्वारा गुरुको मुखबाट माहात्म्य सुनिएका
**ध्यायमानः** = चिन्तन गरिएका
**मुमुक्षूणाम्** = मुमुक्षुहरूको
**अन्तः हृदयं** = हृदयभित्र
**गतः** = प्रवेश गरेका
**यः एषः** = जुन यी भगवान् सङ्कर्षणले
**अनादिकालकर्मवासनाग्रथितम्** = अनादि कालदेखिका कर्मवासनाद्वारा बाँधिएको
**सत्त्वरजस्तमोमयम्** = सत्त्व, रज र तम गुणले युक्त
**अविद्यामयं** = अविद्यात्मक
**हृदयग्रन्थिं** = हृदयको ग्रन्थिलाई
**आशु** = तत्काल
**निर्भिनत्ति** = नष्ट गरिदिनुहुन्छ
**तस्य** = त्यस्ता भगवान् सङ्कर्षणको
**अनुभावान्** = पवित्र कीर्तिहरू
**स्वायम्भुवः** = ब्रह्माका पुत्र
**भगवान् नारदः** = भगवान् नारदले
**ब्रह्मणः** = ब्रह्माजीको
**सभायां** = सभामा
**तुम्बुरुणा सह** = तुम्बुरु नाम गरेका गन्धर्वका साथ
**संश्लोकयामास** = यसप्रकार वर्णन गर्नुभएको थियो

**वाक्यार्थ–** यसप्रकार आफ्नो माहात्म्यको श्रवण र ध्यान गर्ने भक्तहरूको हृदयमा सङ्कर्षण भगवान् स्वयं प्रवेश गर्नुहुन्छ र अनादि कालदेखि कामवासनामा जेलिएको जीवको त्रिगुणात्मक अविद्याग्रन्थिलाई छिट्टै चुँडालिदिनुहुन्छ। एक पटक ब्रह्माका छोरा देवर्षि नारदजीले तुम्बुरु गन्धर्वको साथमा ब्रह्माजीको सभामा पुगेर यसप्रकार उहाँको महिमाको वर्णन गर्नुभएको थियो।

**उत्पत्तिस्थितिलयहेतवोऽस्य कल्पाः सत्त्वाद्याः प्रकृतिगुणा यदीक्षयासन्।**
**यद्रूपं ध्रुवमकृतं यदेकमात्मन् नानाधात् कथमु ह वेद तस्य वर्त्म ॥ ९ ॥**

**पदार्थ–**
**अस्य** = यो जगत्को
**उत्पत्तिस्थितिलयहेतवः** = उत्पत्ति, स्थिति र लयका कारण भएका
**सत्त्वाद्याः** = सत्त्व आदि
**प्रकृतिगुणाः** = प्रकृतिका तीन गुणहरू
**यदीक्षया** = जुन सङ्कर्षण प्रभुको दृष्टि मात्रले
**कल्पाः** = आ-आफ्नो कार्यमा समर्थ
**आसन्** = हुन्छन्
**यद्रूपं** = जुन परमात्माको स्वरूप
**ध्रुवम्** = नित्य (अनन्त)

| | | |
|---|---|---|
| **अकृतं** = अकृत्रिम (अनादि) | **नाना** = भूतभौतिक अनेक कार्य | **तस्य** = ती भगवान् सङ्कर्षणको |
| **यत् एकम्** = जो एक मात्र सत्य | सङ्कल्प मात्रले उत्पन्न गरेर | **वर्त्म** = प्राप्तिमार्ग |
| भएर | **अधात्** = प्रकट (धारण) गर्नुहुन्छ | **कथम्** = कसरी |
| **आत्मन्** = स्वयं आफैँभित्र | **उ ह** = निश्चय नै | **वेद** = जान्न सकिन्छ र |

**वाक्यार्थ–** जसको दृष्टि मात्रले जगत्को सृष्टि, स्थिति र प्रलयका कारण भएका सत्त्व, रज, तम आदि गुणहरू आ-आफ्नो काम गर्न समर्थ हुन्छन्, जसको स्वरूप अनादि र अनन्त छ तथा जो एक मात्र भएर पनि अनेक किसिमका प्रपञ्चको सिर्जना गर्नुहुन्छ वा आफू नै कार्यरूपमा प्रकट हुनुहुन्छ त्यस्ता ब्रह्मस्वरूप भगवान् सङ्कर्षणको महिमालाई उहाँको कृपा विना कसरी जान्न सकिन्छ र ?

**मूर्तिं नः पुरुकृपया बभार सत्त्वं संशुद्धं सदसदिदं विभाति तत्र ।**
**यल्लीलां मृगपतिराददेऽनवद्यामादातुं स्वजनमनांस्युदारवीर्यः ॥ १० ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **पुरुकृपया** = अत्यन्त कृपापूर्वक | **स्वजनमनांसि** = आफ्ना |
| **तत्र** = उनै परमात्मामा | **संशुद्धं सत्त्वं** = शुद्ध सत्त्वात्मक | भक्तहरूका मनलाई |
| **इदं** = यो | **मूर्तिं** = स्वरूपलाई | **आदातुं** = आकर्षित गर्न |
| **सदसत्** = स्थूलसूक्ष्मात्मक | **बभार** = धारण गर्नुभयो | **यत्** = जो |
| (कार्यकारणात्मक) जगत् | **उदारवीर्यः** = ठुलो सामर्थ्य | **अनवद्याम्** = पवित्र |
| **विभाति** = प्रकाशित छ | भएका | **लीलां** = लीला |
| (उहाँ सङ्कर्षण भगवान्ले) | **मृगपतिः** = सिंह जैँ (सम्पूर्ण | **आददे** = गर्नुभयो |
| **नः** = हामी भक्तहरूको लागि | जीवका स्वामी ती भगवान्ले) | |

**वाक्यार्थ–** उहाँबाट नै यो कार्यकारणरूप सारा प्रपञ्च प्रकाशित भइरहेको छ। आफ्ना भक्तहरूको चित्त आकर्षित गर्नका लागि उहाँले गरेका वीरतापूर्ण लीलाहरूलाई पराक्रमी सिंहले आदर्श मानेर ग्रहण गरेको छ। उनै दयालु सङ्कर्षण भगवान्ले हामीमाथि ठुलो कृपा गरेर यो विशुद्ध सत्त्वमय स्वरूप धारण गर्नुभएको हो।

**यन्नाम श्रुतमनुकीर्तयेदकस्मादार्तो वा यदि पतितः प्रलम्भनाद् वा ।**
**हन्त्यंहः सपदि नृणामशेषमन्यं कं शेषाद् भगवत आश्रयेन्मुमुक्षुः ॥ ११ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **आर्तः** = दुःखी | भगवन्नामको श्रवण र कीर्तनले) |
| **यन्नाम** = जुन भगवान्को नाम | **पतितः** = सदाचार र वर्णाश्रम | **नृणाम्** = मनुष्यहरूको |
| **श्रुतम्** = अरूले उच्चारण गरेको | धर्मबाट पतित भएका मानिसले | **अशेषम्** = सम्पूर्ण |
| सुनिएको छ | **प्रलम्भनात् वा** = उपहासपूर्वक नै | **अंहः** = पापलाई |
| **अकस्मात्** = अचानक | **यदि अनुकीर्तयेत्** = यदि | **सपदि** = तुरुन्तै |
| **वा** = अथवा | उच्चारण गर्दछ भने (त्यो | **हन्ति** = नाश गरिदिन्छ त्यसैले |

| | | |
|---|---|---|
| **मुमुक्षुः** = मुमुक्षुले | **शेषात्** = भिन्न | **कं** = कसलाई |
| **भगवतः** = भगवान्देखि | **अन्यं** = अर्को | **आश्रयेत्** = आश्रय बनाउला |

**वाक्यार्थ–** उहाँको नाम मात्र पनि कतैबाट सुनेर कुनै दुःखी वा पापीले पापनिवृत्तिका लागि अकस्मात् वा ठट्टाका रूपमा उच्चारण गर्‍यो भने पनि त्यो पवित्र हुन्छ र त्यसलाई सुन्ने अरू सबैको पनि पाप नष्ट हुन्छ। यस्ता सङ्कर्षण भगवान्लाई छाडेर मोक्षको इच्छा गर्ने कुन व्यक्तिले अरू कसैको आश्रय लेला ?

**मूर्धन्यर्पितमणुवत् सहस्रमूर्ध्नो भूगोलं सगिरिसरित्समुद्रसत्त्वम्।**
**आनन्त्यादनिमितविक्रमस्य भूम्नः को वीर्याण्यधिगणयेत् सहस्रजिह्वः ॥१२॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सहस्रमूर्ध्नः** = हजार फणा भएका भगवान् सङ्कर्षणको | **अणुवत्** = अणु झैँ | **सहस्रजिह्वः** = हजार जिभ्रो भएको |
| **मूर्धनि** = एउटै शिरमा | **अर्पितम्** = बसेको छ | **कः** = कुन व्यक्तिले |
| **सगिरिसरित्समुद्रसत्त्वम्** = अनेक पर्वत, नदी, समुद्रहरूसहित | **अनिमितविक्रमस्य** = अपरिमेय शक्ति भएका | **अधिगणयेत्** = गणना गर्न सक्ला |
| **भूगोलं** = ब्रह्माण्ड | **भूम्नः** = परमात्माको | |
| | **आनन्त्यात्** = अन्त नभएकाले | |
| | **वीर्याणि** = शक्तिहरूलाई | |

**वाक्यार्थ–** पर्वत, नदी, समुद्र र प्राणी समुदाय आदिले भरिपूर्ण यो सम्पूर्ण संसार उनै हजार शिर भएका भगवान् सङ्कर्षणको एउटा शिरमा सानो अणुसमान रहेको छ। अनन्त भएको हुनाले उहाँको पराक्रमको कुनै गणना नै छैन। हजार जिभ्रो भएको व्यक्तिले पनि सर्वव्यापक भगवान्को पराक्रमको गणना गर्न सक्दैन।

**एवम्प्रभावो भगवाननन्तो दुरन्तवीर्योरुगुणानुभावः।**
**मूले रसायाः स्थित आत्मतन्त्रो यो लीलया क्ष्मां स्थितये बिभर्ति ॥ १३ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **एवम्प्रभावः** = यस्तो प्रभाव (हजारौँ जिभ्रो भएका व्यक्तिले पनि वर्णन गर्न नसक्ने शक्ति) भएका | **आत्मतन्त्रः** = आफैँमा स्वतन्त्र | **स्थितः** = बसेर |
| **दुरन्तवीर्योरुगुणानुभावः** = अनन्त बल, धेरै ज्ञान, वैराग्य, ऐश्वर्य आदि गुणले युक्त भएका | **यः** = जुन | **लीलया** = सजिलैसँग |
| | **अनन्तः** = अन्त्य रहित | **स्थितये** = जगत्को स्थितिका लागि |
| | **भगवान्** = भगवान् | **क्ष्मां** = पृथिवीलाई |
| | **रसायाः** = पृथिवीको | **बिभर्ति** = धारण गर्नुहुन्छ |
| | **मूले** = फेदमा (पातालमा) | |

**वाक्यार्थ–** वास्तवमा अनन्त भगवान्को बल, ज्ञान, गुण र प्रभावको कुनै सीमा नै छैन। यस्ता प्रभावशाली भएर पनि उहाँले सम्पूर्ण लोकको कल्याणका निम्ति रसातलमुनि आफ्नै महिमामा रहेर लीलापूर्वक पृथिवीलाई धारण गरिरहनुभएको छ।

| | | |
|---|---|---|
| **परमं** = परम कारण परमात्मा नै हुनुहुन्छ (किनभने) | **प्रसिद्धं** = स्वतः सिद्ध हुनुहुन्थ्यो | **एकम्** = सजातीय आदि भेदशून्य |
| **प्राक्** = कार्यकारणको सृष्टि हुनुभन्दा अगाडि पनि (हजुर) | **तद्धेतुः** = त्यो जगत्को कारणका रूपमा रहेको | **तत् ब्रह्म** = त्यो ब्रह्मस्वरूप हजुर मात्र हुनुहुन्छ |
| | **अनन्यत्** = विजातीय भेदशून्य | |

**वाक्यार्थ–** यो जगत् अधिकरणरूप हजुरमा नै स्थित छ। अपादानरूप हजुरबाट नै उत्पन्न हुन्छ। करणरूप स्वयं हजुरद्वारा सम्बन्धरूप आफ्नै कुरा सम्प्रदानको रूपमा आफ्नै लागि आफैं प्रयोजक बनेर यस जगत्को सृष्टि गर्नुहुन्छ। त्यसकारण कर्मको रूपमा जगत् बन्ने र कर्ताको रूपमा जगत् बनाउने पनि हजुर नै हुनुहुन्छ। परावर कारणहरूका पनि परमकारण हजुर नै हुनुहुन्छ। कार्यकारणात्मक जगत्को सृष्टि हुनुभन्दा पहिले पनि हजुर नै स्वतःसिद्धरूपले विराजमान हुनुहुन्थ्यो। जगत्को कारण भएर पनि हजुरमा जगत्को सजातीय र विजातीय भेद छैन। हजुर नै अद्वितीय ब्रह्म हुनुहुन्छ।

**यच्छक्तयो वदतां वादिनां वै विवादसंवादभुवो भवन्ति।**
**कुर्वन्ति चैषां मुहुरात्ममोहं तस्मै नमोऽनन्तगुणाय भूम्ने॥ ३१॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **वै** = निश्चय नै | र कहिले संवादको विषय | **कुर्वन्ति** = बनाइदिन्छन् |
| **यच्छक्तयः** = जुन परमात्माका माया आदि शक्तिहरू | **भवन्ति** = हुन्छन् | **तस्मै** = त्यस्ता |
| **वदतां** = दर्शनको कुरा गर्ने | **मुहुः** = निरन्तर | **अनन्तगुणाय** = अनन्त गुण भएका |
| **वादिनां** = वादी प्रतिवादीहरूको | **एषां** = यी आफूलाई विद्वान् मान्ने वादी प्रतिवादीहरूको | **भूम्ने** = सर्वव्यापक परमात्मालाई |
| **विवादसंवादभुवः** = कहिले विवाद | **आत्ममोहं** = मनको मोह | **नमः** = नमस्कार छ |
| | **च** = पनि | |

**वाक्यार्थ–** विभिन्न दर्शनका विषयहरूमा वादविवाद गर्ने वादी-प्रतिवादीहरूको लागि परमात्माका माया आदि शक्तिहरू कहिले विवाद र कहिले संवादका विषय बन्दछन्। ती परमात्माका शक्तिहरूले आफूलाई विद्वान् ठान्ने वादी-प्रतिवादीको मनलाई मोहित बनाइदिन्छन्। यस्ता कल्याण आदि अनन्तगुण भएका सर्वव्यापक हजुरलाई म नमस्कार गर्दछु।

**अस्तीति नास्तीति च वस्तुनिष्ठयोरेकस्थयोर्भिन्नविरुद्धधर्मयोः।**
**अवेक्षितं किञ्चन योगसाङ्ख्ययोः समं परं ह्यनुकूलं बृहत् तत्॥ ३२॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अस्ति इति** = परमात्मा साकार हुनुहुन्छ | **हि** = निश्चय नै | **एकस्थयोः** = एक परमात्मालाई ब्रह्मरूपले प्रतिपादन गर्ने |
| **नास्ति इति च** = परमात्मा साकार हुनुहुन्न | **भिन्नविरुद्धधर्मयोः** = भिन्न र विरुद्ध स्वरूप बताउने | **योगसाङ्ख्ययोः** = योग र साङ्ख्य शास्त्रको |
| | **वस्तुनिष्ठयोः** = तर परमात्माको अस्तित्वलाई स्वीकार गर्ने | **किञ्चन** = परमतत्त्वमा केही |

पनि भिन्नता नभएको | **परं समं** = परम समवस्तु | **अवेक्षितं** = प्रतीत हुन्छ
**अनुकूलं** = दुबैमा विवाद नहुने | **तत् बृहत्** = त्यही ब्रह्म नै

**वाक्यार्थ—** उपासनामूलक योग आदि शास्त्रका अनुयायीहरू उपास्य परमात्मा हात, पाउ आदि अवयव भएका मूर्तिमान् साकार हुनुहुन्छ भन्दछन् भने ज्ञानमूलक साङ्ख्यसिद्धान्तका अनुयायीहरू परमात्मा निर्गुण निराकार हुनुहुन्छ भन्दछन्। यसरी परमात्मा साकार हुनुहुन्छ र निराकार हुनुहुन्छ भन्ने कुरामा भिन्न-भिन्न मान्यताहरू देखिए पनि परमात्माको अस्तित्वलाई स्वीकार गर्ने साङ्ख्य र योगमा वस्तुतः भिन्नता छैन किनभने दुबैले ब्रह्मरूपमा हजुरकै प्रतिपादन गरेका हुन्। हे भगवान् ! हजुरको स्वरूपको विषयमा उठ्ने गरेका विवादको समाधान हुने परमसम ब्रह्मवस्तु हजुर नै हुनुहुन्छ।

**विवरण—** उपनिषद्मा आएका ज्ञानपरक वाक्यहरू विधिमुख र निषेधमुख गरी दुई प्रकारका छन्। यी दुबै किसिमका वाक्यले परमात्माको वर्णन गर्दछन्।

विधिमुख वाक्यले आत्मालाई सद्रूपले प्रतिपादन गर्दछन्। विधिमुख वाक्यका अनुसार जगत्का सम्पूर्ण पदार्थहरूमा परमात्मा विद्यमान हुनुहुन्छ। सर्वाधिष्ठान उहाँबाटै जगत्को सृष्टि, स्थिति र लय हुन्छ भन्ने **सत्यं ज्ञानमनन्तं ब्रह्म** (तैत्तिरीयोपनिषद्, २/१/१), **यतो वा इमानि भूतानि जायन्ते** (तैत्तिरीयोपनिषद्, ३/१/१) **ईशावास्यमिदं सर्वम्** (ईशावास्योपनिषद्, १) जस्ता आत्मालाई सद्रूपले प्रतिपादन गर्ने वाक्यहरू विधिमुख वाक्य हुन्। सम्पूर्ण प्राणीहरूका हात खुट्टाहरू परमात्माकै हात खुट्टा हुन्। उहाँको पाउ नै पृथ्वी हो, आकाश नै मूर्धास्थान हो, उनन्चास वायु नै उहाँका प्राण हुन् भनी विराट् रूपमा परमात्माको चिन्तन गरिन्छ। परमात्माबाट नै जगत्को सृष्टि, स्थिति र लय हुन्छ। परमात्माको स्वरूप सत्य, ज्ञान र आनन्द हो। यसप्रकार परमात्मामा सत्य, ज्ञान आदि स्वरूपभूत गुणहरू, जगत्कर्तृत्व र सर्वरूपत्वको विधान गरेर विधिवाक्यद्वारा परमात्माको प्रतिपादन गरिन्छ। अस्तिरूपले परमात्माको वर्णन गर्नु यस्ता वाक्यको वैशिष्ट्य हो।

निषेधमुख वाक्यमा चाहिँ कार्यकारणात्मक प्रपञ्चको निषेध गरिन्छ। कार्यहरूको क्रमशः निषेध गर्दै जाँदा कारण परमात्मा मात्र अवशिष्ट रहने भएकाले उहाँको निषेध हुन सक्दैन। यसरी निषेध हुन नसक्ने भएकाले परमात्मालाई सत्य र अविनाशी भनिएको हो। यसरी माया र त्यसका कार्यहरूको निषेध गरेर अवशिष्ट आत्मतत्त्वको प्रतिपादन गर्ने वाक्यलाई निषेधमुख वाक्य भनिन्छ। जस्तै— **अस्थूलमनण्वह्रस्वम्** (बृहदारण्यकोपनिषद् ३/८/८) **नान्तःप्रज्ञं न बहिष्प्रज्ञम्** (माण्डूक्योपनिषद् ७) **नेति नेति** (बृहदारण्यकोपनिषद् ४/४/२२) इत्यादि वाक्यहरू निषेधमुख वाक्य हुन्। सम्पूर्ण पदार्थहरू निषिद्ध भइसक्दा पनि ब्रह्मको कहिल्यै निषेध हुँदैन।

एउटा वाक्यले परमात्मामा जगत्कर्तृत्व देखाउनु अनि अर्कोले त्यही परमात्मामा जगत्को निषेध गर्नु परस्पर विरुद्ध कुरा हुन्। तर परमात्मालाई बुझाउने ती दुबै वाक्यहरू एउटै परमात्माको प्रतिपादनमा पर्यवसित भएका छन्। कुनै वस्तुलाई विधान गर्न त्यसको अधिष्ठान चाहिन्छ अनि कुनै वस्तुलाई हटाउँदा पनि कुनै अधिष्ठानबाट नै त्यसलाई हटाइन्छ। विधिमुख वाक्यले जगत्को विधान परमात्मारूप अधिष्ठानमा गरिन्छ र निषेधमुख वाक्यले जगत्को निषेध पनि परमात्मामा नै

गरिन्छ। यसरी विधि र निषेध दुबैको अधिष्ठानको रूपमा परमात्मा सिद्ध हुन्छ। निषेध र विधान जगत्को गरिन्छ परमात्माको होइन। यसैले विधि र निषेधले परमात्मालाई स्पर्श गर्न सक्दैनन् भन्ने आशय यस श्लोकमा प्रस्तुत गरिएको छ।

**योऽनुग्रहार्थं भजतां पादमूलमनामरूपो भगवाननन्तः।**
**नामानि रूपाणि च जन्मकर्मभिर्भेजे स मह्यं परमः प्रसीदतु॥ ३३॥**

**पदार्थ–**
**अनन्तः** = देश, काल र वस्तुको सीमाले नछुट्टिने
**अनामरूपः** = नाम र रूपले रहित
**यः** = जुन
**भगवान्** = परमात्माले
**पादमूलम्** = आफ्नो चरणतलको
**भजतां** = भजन गर्ने मनुष्यहरूको
**अनुग्रहार्थं** = अनुग्रहका लागि
**जन्मकर्मभिः** = जन्म र कर्मद्वारा
**नामानि** = वासुदेव, मुरारि इत्यादि नाम र
**रूपाणि च** = विभिन्न रूपहरू पनि
**भेजे** = ग्रहण गर्नुभयो
**सः** = त्यस्ता
**परमः** = परमेश्वर
**मह्यं** = ममाथि
**प्रसीदतु** = प्रसन्न हुनुहोस्

**वाक्यार्थ–** हे भगवान् ! हजुर देश, काल र वस्तुको सीमाले छुट्टिनुहुन्न। हजुरको कुनै पनि नाम र रूप छैन तापनि आफ्नो चरणतलको भजन गर्ने भक्तजनहरूलाई अनुग्रह गर्न स्वयं अजन्मा भएर पनि विभिन्न रूपमा उत्पन्न हुनुहुन्छ। जन्मबाट प्रसिद्ध वासुदेव आदि र कर्मबाट प्रसिद्ध मुरारि इत्यादि नामहरूलाई स्वीकार गर्नुहुन्छ। हे परमेश्वर ! ममाथि प्रसन्न हुनुहोस्।

**यः प्राकृतैर्ज्ञानपथैर्जनानां यथाशयं देहगतो विभाति।**
**यथानिलः पार्थिवमाश्रितो गुणं स ईश्वरो मे कुरुतान्मनोरथम्॥ ३४॥**

**पदार्थ–**
**यः** = जुन अन्तर्यामी भगवान्ले
**जनानां** = मनुष्यहरूको
**देहगतः अपि** = देहभित्र विराजमान भए पनि
**प्राकृतैः** = साधारण
**ज्ञानपथैः** = ज्ञानमार्गद्वारा
**यथाशयं** = उपासकहरूको भावअनुसार (तत्तद्देवताको रूपमा उनीहरूको हृदयमा)
**विभाति** = प्रकाशित हुनुहुन्छ
**यथा** = जसरी
**पार्थिवम्** = पार्थिव
**गुणं** = धुलो, गन्ध आदि गुणमा
**आश्रितः** = आश्रित भएको
**अनिलः** = हावा (विविध नाम र रूपवाला हुन्छ)
**सः** = त्यस्ता
**ईश्वरः** = भगवान्ले
**मे** = मेरो
**मनोरथम्** = मनोरथलाई
**कुरुतात्** = पूरा गर्नुहोस्

**वाक्यार्थ–** हे भगवान् ! हजुर सम्पूर्ण प्राणीहरूको हृदयतलमा विराजमान हुनुहुन्छ। जसरी पार्थिव धुलो, गन्ध आदि गुणमा आश्रित भएको हावा विविध धुलोमय, गन्धमय आदि नाम र रूपवाला हुन्छ त्यसरी नै साधारण ज्ञानमार्गद्वारा उपासकहरूको हृदयमा उनीहरूको भावनाअनुसार तत्तद् देवताको रूपमा प्रकाशित हुनुहुने हजुरले मेरो मनोरथलाई पूर्ण गर्नुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति स्तुतः संस्तुवतः स तस्मिन्नघमर्षणे ।**

**आविरासीत् कुरुश्रेष्ठ भगवान् भक्तवत्सलः ॥ ३५ ॥**

**पदार्थ–**
**कुरुश्रेष्ठ** = कुरुश्रेष्ठ हे परीक्षित्
**इति** = यसप्रकार
**तस्मिन्** = त्यो विन्ध्याचलको नजिकै रहेको
**अघमर्षणे** = अघमर्षण तीर्थमा
**संस्तुवतः** = स्तुति गर्ने दक्षद्वारा
**स्तुतः** = स्तुति गरिएका
**भक्तवत्सलः** = भक्तवत्सल
**सः** = ती
**भगवान्** = भगवान्
**आविरासीत्** = प्रकट हुनुभयो

**वाक्यार्थ–** हे कुरुश्रेष्ठ परीक्षित् ! यसप्रकार विन्ध्याचलको नजिकै रहेको अघमर्षण तीर्थमा दक्षले भगवान्को स्तुति गरे। त्यो स्तुतिद्वारा प्रसन्न हुनुभएका भक्तवत्सल भगवान् दक्षको अगाडि प्रकट हुनुभयो।

**कृतपादः सुपर्णांसे प्रलम्बाष्टमहाभुजः ।**

**चक्रशङ्खासिचर्मेषुधनुःपाशगदाधरः ॥ ३६ ॥**

**पीतवासा घनश्यामः प्रसन्नवदनेक्षणः ।**

**वनमालानिवीताङ्गो लसच्छ्रीवत्सकौस्तुभः ॥ ३७ ॥**

**महाकिरीटकटकः स्फुरन्मकरकुण्डलः ।**

**काञ्च्यङ्गुलीयवलयनूपुराङ्गदभूषितः ॥ ३८ ॥**

**पदार्थ–**
**सुपर्णांसे** = गरुडको काँधमा
**कृतपादः** = पाउ राखेका
**प्रलम्बाष्टमहाभुजः** = लामा-लामा आठ ओटा हात भएका
**चक्रशङ्खासिचर्मेषुधनुःपाशगदाधरः** = हातमा चक्र, शङ्ख, तरबार, ढाल, बाण, धनु, पाश (डोरी) र गदा धारण गरेका
**पीतवासाः** = पहेँलो लुगा लगाउने
**घनश्यामः** = वर्षाको बादलजस्तो श्याम (कृष्ण) वर्ण भएका
**प्रसन्नवदनेक्षणः** = मुखमण्डल र आँखा प्रसन्न भएका
**वनमालानिवीताङ्गः** = गलादेखि पाउसम्म वनमाला लगाएका
**लसच्छ्रीवत्सकौस्तुभः** = छातीमा श्रीवत्स चिह्न र गलामा कौस्तुभ मणि शोभायमान भएका
**महाकिरीटकटकः** = शिरमा बहुमूल्य महामुकुट र हातमा सुनौलो बाला लगाएका
**स्फुरन्मकरकुण्डलः** = कानमा प्रकाशमान मकराकार कुण्डल लगाएका
**काञ्च्यङ्गुलीयवलयनूपुराङ्गदभूषितः** = सुनले बनेको कन्दनी, औँठी, बाला, पाउजु र बाजुले भूषित भएका भगवान् (दक्षका अगाडि प्रकट हुनुभयो)

**वाक्यार्थ–** भगवान्ले प्रकट हुँदा गरुडको काँधमा पाउ राख्नुभएको थियो। उहाँले आठ ओटा आफ्ना लामा-लामा हातमा शङ्ख, चक्र, तरबार, ढाल, बाण, धनु, पाश (डोरी) र गदा धारण गर्नुभएको थियो। पीताम्बर लगाउनुभएका भगवान्को वर्ण वर्षाकालीन मेघको जस्तो श्यामल थियो। मुखमण्डल र नेत्रयुगल प्रसन्न थिए। कण्ठदेखि पाउसम्म लत्रने वनमाला धारण गर्नुभएको

थियो। छातीमा शोभायमान श्रीवत्स चिह्न, गलामा कौस्तुभ मणि, शिरमा बहुमूल्य महामुकुट, हातमा सुनौलो बाला, कानमा प्रकाशमान मकराकार कुण्डल लगाउनुभएको थियो। यसै गरी सुनले बनेको कन्दनी, औँठी, बाला, पाउजु र बाजु पनि भगवान्का तत्तत् अङ्गमा शोभायमान थिए।

**त्रैलोक्यमोहनं रूपं बिभ्रत् त्रिभुवनेश्वरः।**
**वृतो नारदनन्दाद्यैः पार्षदैः सुरयूथपैः॥ ३९॥**
**स्तूयमानोऽनुगायद्भिः सिद्धगन्धर्वचारणैः।**
**रूपं तन्महदाश्चर्यं विचक्ष्यागतसाध्वसः॥ ४०॥**
**ननाम दण्डवद् भूमौ प्रहृष्टात्मा प्रजापतिः।**
**न किञ्चनोदीरयितुमशकत् तीव्रया मुदा॥**
**आपूरितमनोद्वारैर्ह्रदिन्य इव निर्झरैः॥ ४१॥**

**पदार्थ—**
**नारदनन्दाद्यैः** = नारद र नन्द आदि
**पार्षदैः** = पार्षदहरूद्वारा तथा
**सुरयूथपैः** = इन्द्र आदि लोकपालहरूको समूहद्वारा
**वृतः** = ढाकिएका
**अनुगायद्भिः** = स्तुति गरिरहेका
**सिद्धगन्धर्वचारणैः** = सिद्ध, गन्धर्व र चारणहरूद्वारा
**स्तूयमानः** = प्रार्थना गरिएका
**त्रैलोक्यमोहनं** = तीनै लोकलाई मोहित पार्ने सुन्दर रूप
**बिभ्रत्** = धारण गर्ने
**त्रिभुवनेश्वरः** = तीनै लोकका ईश्वर भगवान् (दक्षका अगाडि प्रकट हुनुभयो)
**तन्महदाश्चर्यं** = त्यो भगवान्को महान् आश्चर्यमय
**रूपं** = स्वरूपलाई
**विचक्ष्य** = देखेर
**प्रहृष्टात्मा** = प्रसन्न चित्त भएका (तर)
**अगतसाध्वसः** = डर नहटेका
**प्रजापतिः** = दक्ष प्रजापतिले
**भूमौ** = पृथिवीमा
**दण्डवत्** = लौरो झैँ लमतन्न भई
**ननाम** = साष्टाङ्ग प्रणाम गरे
**निर्झरैः** = झरनाहरूद्वारा
**ह्रदिन्यः इव** = नदीहरू झैँ
**तीव्रया** = अत्यन्त तीव्र
**मुदा** = आनन्दका कारण
**आपूरितमनोद्वारैः** = खुसीले मन आदि इन्द्रियहरू भरिएको हुँदा
**किञ्चन** = केही पनि
**उदीरयितुम्** = बोल्न (दक्षले)
**न अशकत्** = सकेनन्

**वाक्यार्थ—** भगवान्ले तीनै लोकलाई मोहित गराउने रूप धारण गर्नुभएको थियो। नारद, नन्द आदि पार्षद र इन्द्र आदि लोकपालहरू भगवान्का वरिपरि बसी स्तुतिगान र सिद्ध, गन्धर्व र चारणहरूले भगवान्को प्रार्थना गरिरहेका थिए। त्रिलोकपति भगवान्को यस्तो महान् आश्चर्यप्रद अलौकिक रूप देखेर दक्ष प्रसन्न त भए तर केही डरका कारण अलिअलि आत्तिए। त्यसपछि दक्ष प्रजापतिले भूमिमा लौरो झैँ लमतन्न भई भगवान्का चरणकमलमा साष्टाङ्ग दण्डवत् प्रणाम गरे। जसरी झरनाको पानीले नदी भरिन्छ त्यसै गरी अतिशय खुसीका कारण दक्षको मनलगायत सम्पूर्ण इन्द्रियका द्वारहरू भरिएको हुनाले उनले तत्काल केही बोल्न सकेनन्।

**तं तथावनतं भक्तं प्रजाकामं प्रजापतिम् ।**

**चित्तज्ञः सर्वभूतानामिदमाह जनार्दनः ॥ ४२ ॥**

**पदार्थ–**

**सर्वभूतानाम्** = सबै प्राणीहरूको

**चित्तज्ञः** = मनोभावलाई जान्ने

**जनार्दनः** = भगवान् नारायणले

**तथा** = त्यसरी

**अवनतं** = झुकेका

**प्रजाकामं** = सन्तति चाहने

**भक्तं** = आफ्नो भक्त

**तं** = ती

**प्रजापतिम्** = दक्ष प्रजापतिलाई

**इदम्** = यसो

**आह** = भन्नुभयो

**वाक्यार्थ–** त्यसरी झुकेर बसेका, प्रजाहरूको सृष्टि गर्न चाहने आफ्ना भक्त दक्ष प्रजापतिलाई सबै प्राणीहरूको मनोभावलाई जान्नुहुने भगवान् नारायणले यसो भन्नुभयो।

**श्रीभगवानुवाच** (श्रीभगवान्‌ले भन्नुभयो)

**प्राचेतस महाभाग संसिद्धस्तपसा भवान् ।**

**यच्छ्रद्धया मत्परया मयि भावं परं गतः ॥ ४३ ॥**

**पदार्थ–**

**महाभाग** = परम भाग्यमानी

**प्राचेतस** = प्रचेताका पुत्र हे दक्ष

**भवान्** = तिमी

**तपसा** = तपस्याद्वारा

**संसिद्धः** = सिद्ध भएका छौ

**यत्** = त्यसकारण

**मत्परया** = मलाई विषय गर्ने

**श्रद्धया** = श्रद्धाका कारण

**मयि** = ममा

**परं भावं** = परम भक्ति

**गतः** = प्राप्त गरेका (छौ)

**वाक्यार्थ–** हे परम भाग्यमानी प्रचेतापुत्र दक्ष ! तिमीले अत्यन्त श्रद्धापूर्वक ममा प्रेम गरेर मेरो परम भक्तिलाई प्राप्त गरेका छौ। त्यसैले तिम्रो तपस्या सिद्ध भएको छ।

**प्रीतोऽहं ते प्रजानाथ यत् तेऽस्योद्‌बृंहणं तपः ।**

**ममैष कामो भूतानां यद्भूयासुर्विभूतयः ॥ ४४ ॥**

**पदार्थ–**

**प्रजानाथ** = हे प्रजापति दक्ष

**अस्य** = यस संसारको

**उद्‌बृंहणं** = वृद्धि गराउने

**यत्** = जो यो

**ते** = तिम्रो

**तपः** = तपस्या हो (त्यसैले)

**अहं** = म

**ते** = तिमीबाट

**प्रीतः** = प्रसन्न भएको छु

**भूतानां** = समस्त प्राणीहरूको

**विभूतयः** = समृद्धि

**भूयासुः** = होस्

**यत्** = किनभने

**एषः** = यो

**मम** = मेरो

**कामः** = इच्छा हो

**वाक्यार्थ–** हे प्रजापति दक्ष ! तिमीले संसार (प्रजा)को वृद्धिका लागि मेरो तपस्या गरेका हौ। म तिमीबाट अति प्रसन्न छु। समस्त प्रजाहरूको अभिवृद्धि होस् भन्ने यो मेरो पनि इच्छा हो।

**ब्रह्मा भवो भवन्तश्च मनवो विबुधेश्वराः ।**

**विभूतयो मम ह्येता भूतानां भूतिहेतवः ॥ ४५ ॥**

**पदार्थ–**
**ब्रह्मा** = चतुर्मुख ब्रह्मा
**भवः** = महादेव
**भवन्तः** = तिमी लगायतका प्रजापतिहरू
**मनवः** = स्वायम्भुव आदि मनुहरू
**विबुधेश्वराः** = इन्द्र आदि देवताहरू
**च** = पनि
**भूतानां** = प्राणीहरूका
**भूतिहेतवः** = अभिवृद्धिका कारण हुन्
**हि** = किनभने
**एताः** = यी ब्रह्मा आदि देवताहरू
**मम** = मेरा
**विभूतयः** = अवतारविशेष हुन्

**वाक्यार्थ–** चतुर्मुख ब्रह्मा, महादेव, तिमी लगायत अन्य प्रजापतिहरू, स्वायम्भुव मनुहरू, इन्द्र आदि देवताहरू यी सबै प्राणीहरूका अभिवृद्धिका कारण हुन् किनभने यी सबै देवताहरू मेरै विभूति (अवतारविशेष) हुन्।

**तपो मे हृदयं ब्रह्मंस्तनुर्विद्या क्रियाकृतिः।**
**अङ्गानि क्रतवो जाता धर्म आत्मासवः सुराः॥ ४६॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे ब्रह्मन्
**तपः** = यम, नियम आदि तपस्या
**मे** = मेरो
**हृदयं** = हृदय हो
**विद्या** = विद्या (साङ्ग मन्त्रजप)
**तनुः** = मेरो शरीर हो
**क्रिया** = नित्य, नैमित्तिक क्रिया
**आकृतिः** = मेरो आकृति हो
**जाताः** = निष्पन्न भएका
**क्रतवः** = यज्ञहरू
**अङ्गानि** = मेरा अङ्ग हुन्
**धर्मः** = यज्ञबाट उत्पन्न अपूर्व
**आत्मा** = मेरो मन हो
**सुराः** = यज्ञभाग खाने देवताहरू
**असवः** = मेरा प्राण हुन्

**वाक्यार्थ–** हे ब्रह्मन्! यमनियम आदिले युक्त तपस्या मेरो हृदय हो। साङ्ग मन्त्रजप मेरो शरीर हो। नित्य नैमित्तिक क्रिया मेरो आकृति हो। निष्पन्न यज्ञहरू मेरा अङ्ग हुन्। यज्ञजन्य धर्म मेरो मन हो। यज्ञभाग खाने देवताहरू मेरा प्राण हुन्।

**अहमेवासमेवाग्रे नान्यत् किञ्चान्तरं बहिः।**
**संज्ञानमात्रमव्यक्तं प्रसुप्तमिव विश्वतः॥ ४७॥**

**पदार्थ–**
**अग्रे** = सृष्टि हुनुभन्दा अघि
**अहम् एव** = म मात्र
**आसम् एव** = थिएँ नै
**आन्तरं** = भित्री (आध्यात्मिक) र
**बहिः** = बाहिरी (यो सृष्टिभन्दा बाहिरको भौतिक सृष्टि वा बाह्य वस्तु र तद्ग्राहक इन्द्रिय आदि)
**किञ्च** = केही पनि
**अन्यत्** = मभिन्न वस्तु
**न** = थिएन
**संज्ञानमात्रम्** = चैतन्य मात्र (थियो, त्यो पनि)
**अव्यक्तं** = प्रकट भएको थिएन
**विश्वतः** = सबैतिरबाट
**प्रसुप्तम् इव** = सुषुप्ति जस्तै थियो

**वाक्यार्थ–** सृष्टि हुनुभन्दा अघि म मात्रै थिएँ। अन्तर्वस्तुग्राहक अन्तःकरण तथा भौतिक सृष्टि अर्थात् मभन्दा भिन्न बाह्य वस्तु र तद्ग्राहक इन्द्रियहरू केही पनि थिएनन्। अव्यक्त अवस्थामा

चैतन्य मात्र थियो। त्यसैले सबैतिर सुषुप्ति व्याप्त भए झैँ लाग्दथ्यो।

**मय्यनन्तगुणेऽनन्ते गुणतो गुणविग्रहः।**

**यदासीत् तत एवाद्यः स्वयम्भूः समभूदजः॥ ४८॥**

**पदार्थ—**
**यदा** = जब
**अनन्तगुणे** = अनन्त गुण भएका
**अनन्ते** = अनन्त
**मयि** = म परमात्मामा
**गुणतः** = गुणमयी मायाबाट
**गुणविग्रहः** = गुणहरूको कार्यरूप ब्रह्माण्ड
**आसीत्** = पैदा भएको थियो (तब)
**ततः एव** = ब्रह्माण्डको उत्पत्ति भएपछि
**आद्यः** = प्रजापतिहरूका पनि आदिपुरुष
**स्वयम्भूः** = स्वयम्भू
**अजः** = अयोनिज ब्रह्मा
**समभूत्** = उत्पन्न भए

**वाक्यार्थ—** म असीमित गुणसम्पन्न सर्वव्यापक अनन्त हुँ। जब ममा गुणमयी मायाका सत्त्व आदि गुणहरूको क्षोभबाट ब्रह्माण्ड उत्पन्न भयो त्यसपछि प्रजापतिहरूका पनि आदिपुरुष अयोनिज स्वयम्भू (ब्रह्मा) उत्पन्न भए।

**स वै यदा महादेवो मम वीर्योपबृंहितः।**

**मेने खिलमिवात्मानमुद्यतः सर्गकर्मणि॥ ४९॥**

**पदार्थ—**
**मम** = मेरो
**वीर्योपबृंहितः** = शक्तिले ढाकिएर सृष्टि गर्न लागिपरेका
**महादेवः** = देवताहरूमा प्रमुख
**सः** = ती ब्रह्माजी
**वै** = निश्चय नै
**सर्गकर्मणि** = सृष्टि गर्ने काममा
**यदा** = जब
**उद्यतः** = तयार भए (तब)
**आत्मानम्** = आफूलाई
**खिलम् इव** = सृष्टि गर्न असमर्थ झैँ
**मेने** = पाए (माने)

**वाक्यार्थ—** मेरो शक्ति पाएर सृष्टि गर्न कटिबद्ध भएका देवश्रेष्ठ ब्रह्मा जब सृष्टिविस्तार गर्न लागे तब उनले आफूलाई त्यस काममा असमर्थ भएको जस्तो महसुस गरे।

**अथ मेऽभिहितो देवस्तपोऽतप्यत दारुणम्।**

**नव विश्वसृजो युष्मान् येनादावसृजद् विभुः॥ ५०॥**

**पदार्थ—**
**अथ** = त्यसपछि
**मे** = मद्वारा
**अभिहितः** = तपस्या गर भनिएका
**देवः** = ब्रह्मदेवले
**दारुणम्** = कठोर
**तपः** = तपस्या
**अतप्यत** = गरे
**येन** = जुन तपस्याद्वारा
**विभुः** = प्रजा सृष्टि गर्न समर्थ भएका ब्रह्माजीले
**आदौ** = सर्वप्रथम
**युष्मान्** = तिमीलगायत
**नव** = नौ जना
**विश्वसृजः** = प्रजापतिहरूलाई
**असृजत्** = सृष्टि गरे

**वाक्यार्थ—** त्यसपछि मैले ब्रह्माजीलाई तपस्या गर्न आदेश दिएँ। मेरो आज्ञाबमोजिम उनले कठोर

तपस्या गरे। तपस्याकै बलले उनी प्रजाहरूको सृष्टि गर्न समर्थ भए र उनले सर्वप्रथम तिमीसमेतका नौ जना प्रजापतिहरूको सृष्टि गरे।

**एषा पञ्चजनस्याङ्ग दुहिता वै प्रजापतेः।**
**असिक्नी नाम पत्नीत्वे प्रजेश प्रतिगृह्यताम्॥ ५१॥**

पदार्थ–
**अङ्ग** = हे प्रिय
**प्रजेश** = प्रजापति
**एषा** = यी
**असिक्नी नाम** = असिक्नी नाम भएकी
**पञ्चजनस्य** = पञ्चजन नामका
**प्रजापतेः** = प्रजापतिकी
**दुहिता** = कन्यालाई
**पत्नीत्वे** = पत्नीको रूपमा
**वै** = निश्चय नै
**प्रतिगृह्यताम्** = स्वीकार गर

**वाक्यार्थ–** हे प्रिय प्रजापति दक्ष ! पञ्चजन नाम भएका प्रजापतिकी असिक्नी नाम भएकी यी कन्यालाई तिमी पत्नीको रूपमा स्वीकार गर।

**मिथुनव्यवायधर्मस्त्वं प्रजासर्गमिमं पुनः।**
**मिथुनव्यवायधर्मिण्यां भूरिशो भावयिष्यसि॥ ५२॥**

पदार्थ–
**मिथुनव्यवायधर्मः** = स्त्री र पुरुषका बीच मैथुन (सम्भोग) धर्मलाई स्वीकार गर्नेवाला
**त्वं** = तिमीले
**मिथुनव्यवायधर्मिण्यां** = त्यस्तै धर्मलाई नै स्वीकार गर्ने पत्नी असिक्नीमा
**पुनः** = फेरि
**इमं** = यो
**प्रजासर्गम्** = प्रजाहरूको सृष्टिलाई
**भूरिशः** = धेरै (फैलिएको)
**भावयिष्यसि** = बनाउन सक्छौ

**वाक्यार्थ–** तिमी स्त्रीपुरुषबीच हुने मैथुनधर्मलाई स्वीकार गर। यिनी असिक्नीले पनि मैथुनधर्मलाई स्वीकार गर्नेछिन्। यही मैथुनधर्मबाट तिमीले प्रजासृष्टिलाई विस्तार गर्न सक्नेछौ।

**त्वत्तोऽधस्तात् प्रजाः सर्वा मिथुनीभूय मायया।**
**मदीयया भविष्यन्ति हरिष्यन्ति च मे बलिम्॥ ५३॥**

पदार्थ–
**त्वत्तः** = तिमीभन्दा
**अधस्तात्** = पछि
**मदीयया** = मेरो
**मायया** = मायाका कारण
**मिथुनीभूय** = स्त्री र पुरुषको मिथुनीभावबाट
**सर्वाः** = सम्पूर्ण
**प्रजाः** = छोरा, नाति आदि प्रजाहरू
**भविष्यन्ति** = उत्पन्न हुनेछन्
**मे** = मेरो
**बलिम् च** = पूजा पनि
**हरिष्यन्ति** = गर्नेछन्

**वाक्यार्थ–** तिमीभन्दा पछि मेरो मायाका कारण स्त्रीपुरुषको मिथुनीभावबाट छोरा, नाति आदि रूपले सम्पूर्ण प्रजाहरू उत्पन्न हुनेछन् र मेरो सेवा पूजा पनि गर्नेछन्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्युक्त्वा मिषतस्तस्य भगवान् विश्वभावनः।**

**स्वप्नोपलब्धार्थ इव तत्रैवान्तर्दधे हरिः॥ ५४॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**उक्त्वा** = भनेर (आज्ञा दिएर)
**विश्वभावनः** = विश्वव्यापक
**भगवान्** = भगवान्
**हरिः** = नारायण
**स्वप्नोपलब्धार्थः इव** = स्वप्नमा देखिएका पदार्थहरू ब्युँझिएपछि हराए झैँ
**मिषतः** = हेरिरहेका
**तस्य** = ती दक्षको
**तत्र एव** = अगाडि नै
**अन्तर्दधे** = अन्तर्धान हुनुभयो

**वाक्यार्थ–** विश्वव्यापक भगवान्ले यसप्रकार दक्षलाई आज्ञा दिएपछि जसरी स्वप्नमा देखिएका पदार्थहरू ब्युँझिएपछि लुप्त हुन्छन् त्यसै गरी उनकै आँखाको अगाडि भगवान् अन्तर्धान हुनुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां षष्ठस्कन्धे चतुर्थोऽध्यायः॥ ४॥**

# अथ पञ्चमोऽध्यायः

## नारदको उपदेशबाट दक्षपुत्रलाई वैराग्य र नारदजीलाई दक्षको श्राप

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**तस्यां स पाञ्चजन्यां वै विष्णुमायोपबृंहितः।**

**हर्यश्वसंज्ञानयुतं पुत्रानजनयद् विभुः॥ १॥**

**पदार्थ–**
**विष्णुमायोपबृंहितः** = भगवान् विष्णुको मायाद्वारा सामर्थ्य प्राप्त गरेका
**विभुः** = सृष्टि गर्न समर्थ
**सः** = ती दक्षले
**वै** = निश्चय नै
**पाञ्चजन्यां** = पञ्चजनकी पुत्री
**तस्यां** = ती पत्नी असिक्नीमा
**हर्यश्वसंज्ञान्** = हर्यश्व नाम भएका
**अयुतं** = दश हजार
**पुत्रान्** = छोराहरूलाई
**अजनयत्** = उत्पन्न गरे

**वाक्यार्थ–** भगवान् विष्णुको मायाशक्तिद्वारा प्रजाहरूको सृष्टि गर्न सामर्थ्य प्राप्त गरेका शक्तिसम्पन्न दक्ष प्रजापतिले आफ्नी पत्नी पञ्चजनकी पुत्री असिक्नीको गर्भबाट हर्यश्व नाम भएका दश हजार छोराहरू उत्पन्न गरे।

**अपृथग्धर्मशीलास्ते सर्वे दाक्षायणा नृप।**

**पित्रा प्रोक्ताः प्रजासर्गे प्रतीचीं प्रययुर्दिशम्॥ २॥**

**पदार्थ–**
**नृप** = हे महाराज परीक्षित्
**पित्रा** = पिता दक्षद्वारा
**प्रजासर्गे** = प्रजाको सृष्टि गर्न
**प्रोक्ताः** = आदेश दिइएका
**अपृथग्धर्मशीलाः** = एकै किसिमको आचरण र स्वभाव भएका
**ते** = ती हर्यश्व नामका
**सर्वे** = सम्पूर्ण
**दाक्षायणाः** = दक्षका पुत्रहरू
**प्रतीचीं** = पश्चिम
**दिशम्** = दिशातिर
**प्रययुः** = गए

**वाक्यार्थ–** हे महाराज परीक्षित्! दक्षका ती दश हजार पुत्रहरूको स्वभाव र आचरण एकै किसिमको थियो। उनीहरूलाई पिता दक्ष प्रजापतिले प्रजाहरूको सृष्टि गर्न आज्ञा दिए। त्यसपछि ती दक्षपुत्रहरू तपस्या गर्न पश्चिम दिशातिर गए।

**तत्र नारायणसरस्तीर्थं सिन्धुसमुद्रयोः।**

**सङ्गमो यत्र सुमहन्मुनिसिद्धनिषेवितम्॥ ३॥**

**पदार्थ–**
**यत्र** = जहाँ
**सिन्धुसमुद्रयोः** = सिन्धु नदी र समुद्रको
**सङ्गमः** = सङ्गम छ
**तत्र** = त्यस पश्चिम दिशामा

**मुनिसिद्धनिषेवितम्** = मुनि र सिद्धहरूद्वारा सेवन गरिएको
**सुमहत्** = अत्यन्त विशाल
**नारायणसरः** = नारायणसर नाम भएको
**तीर्थं** = तीर्थ छ

**वाक्यार्थ–** उनीहरू गएको पश्चिम दिशामा सिन्धु नदी र समुद्रको सङ्गमस्थल छ। त्यहीं ठुलाठुला मुनि र सिद्धहरूले निवास गर्ने गरेको 'नारायणसर' नाम गरेको अत्यन्त विशाल तीर्थ छ।

**तदुपस्पर्शनादेव विनिर्धूतमलाशयाः।**
**धर्मे पारमहंस्ये च प्रोत्पन्नमतयोऽप्युत॥ ४॥**
**तेपिरे तप एवोग्रं पित्रादेशेन यन्त्रिताः।**
**प्रजाविवृद्धये यत्तान् देवर्षिस्तान् ददर्श ह॥ ५॥**

**पदार्थ–**
**तदुपस्पर्शनात् एव** = त्यस नारायणसरको जलमा स्नान, आचमन गर्नाले मात्रै पनि
**विनिर्धूतमलाशयाः** = राग आदि मल नहुनाले शुद्ध हृदय भएका
**पारमहंस्ये** = परमहंस (विवेकी) योगीहरूको
**धर्मे** = आत्मज्ञानरूप धर्ममा
**प्रोत्पन्नमतयः च** = योग्य (शुद्ध) अन्तःकरण भएका
**अप्युत** = तर
**पित्रा** = पिता दक्षको
**आदेशेन** = आज्ञाद्वारा
**यन्त्रिताः** = बाँधिएका दक्षपुत्रहरू
**उग्रं** = कठोर
**तपः एव** = तपस्या नै
**तेपिरे** = गर्न लागे
**ह** = निश्चय नै
**देवर्षिः** = देवर्षि नारदले
**प्रजाविवृद्धये** = प्रजाहरूको वृद्धिका लागि
**यत्तान्** = प्रयत्नशील
**तान्** = ती दक्षपुत्रहरूलाई
**ददर्श** = देख्नुभयो

**वाक्यार्थ–** नारायणसरको जलमा स्नान, आचमन गर्नासाथ हर्यश्वहरूको हृदय राग, द्वेष आदि मलले रहित भयो। उनीहरूको बुद्धि परमहंस योगीहरूको आत्मज्ञान रूप भागवत धर्ममा केन्द्रित थियो। यसरी ज्ञानमार्गमा रुचि भएर पनि पिता दक्षको आदेशमा बाँधिएर प्रजाहरूको सृष्टि गर्न प्रयत्नशील भई कठोर तपस्या गर्न लागेका दक्षपुत्रहरूलाई देवर्षि नारदले देख्नुभयो।

**उवाच चाथ हर्यश्वाः कथं स्रक्ष्यथ वै प्रजाः।**
**अदृष्ट्वान्तं भुवो यूयं बालिशा बत पालकाः॥ ६॥**

**पदार्थ–**
**अथ च** = तपस्यामा लागेका हर्यश्वलाई देखेपछि (नारदजीले)
**उवाच** = भन्नुभयो
**हर्यश्वाः** = हे हर्यश्वहरू हो
**बत** = निश्चय नै
**पालकाः** = प्रजापालक (भएर पनि)
**यूयं** = तिमीहरू
**बालिशाः** = अज्ञानी (मूर्ख) रहेछौ
**वै** = निश्चय नै
**भुवः** = पृथिवीको
**अन्तम्** = अन्तलाई
**अदृष्ट्वा** = नदेखीकन
**कथं** = कसरी
**प्रजाः** = प्रजाहरूलाई
**स्रक्ष्यथ** = सृष्टि गर्नेछौ

**वाक्यार्थ–** तपस्यामा लागेका हर्यश्वलाई देखेपछि नारदजीले प्रश्न गर्दै भन्नुभयो– हे दक्षपुत्र हर्यश्वहरू हो ! तिमीहरू प्रजापालक भएर पनि मूर्ख रहेछौ किनभने तिमीहरूले पृथिवीको अन्तलाई देखेका छैनौ। यो कुरा नजानी तिमीहरू कसरी प्रजासृष्टि गर्दछौ ?

**तथैकपुरुषं राष्ट्रं बिलं चादृष्टनिर्गमम्।**
**बहुरूपां स्त्रियं चापि पुमांसं पुंश्चलीपतिम्॥ ७॥**
**नदीमुभयतो वाहां पञ्चपञ्चाद्भुतं गृहम्।**
**क्वचिद्धंसं चित्रकथं क्षौरपव्यं स्वयं भ्रमिम्॥ ८॥**

**पदार्थ–**
**तथा** = त्यसै पृथिवीको अन्त झैं
**एकपुरुषं** = एक मात्र पुरुष भएको
**राष्ट्रं** = राष्ट्रलाई
**अदृष्टनिर्गमम्** = बाहिर निस्कने बाटो नभएको
**बिलं च** = छिद्रलाई
**बहुरूपां** = धैरे रूप भएकी
**स्त्रियं** = स्त्रीलाई
**च अपि** = त्यस्तै
**पुंश्चलीपतिम्** = व्यभिचारिणी स्त्रीको पति भएको
**पुमांसं** = पुरुषलाई
**उभयतोवाहां** = दुबैतिर बग्ने
**नदीम् च** = नदीलाई
**पञ्चपञ्चाद्भुतं** = पच्चीस ओटा वस्तुहरूले बनेको अनौठो
**गृहम्** = घरलाई
**चित्रकथं** = अनौठो कथा (स्वर) भएको
**हंसं** = हाँसलाई
**क्षौरपव्यं** = छुरी र वज्रले बनेको
**स्वयं भ्रमिम्** = आफैं घुम्ने (चक्रजस्तो) वस्तुलाई समेत
**क्वचित्** = कहिल्यै पनि (नजानी कसरी प्रजाहरूको सृष्टि गर्दछौ)

**वाक्यार्थ–** यहाँ एउटा यस्तो राष्ट्र छ जसमा एउटा मात्रै पुरुष बस्दछ, एउटा यस्तो छिद्र (गुफा) छ जहाँ छिरिसकेपछि बाहिर निस्कने बाटो छैन, एउटी स्त्री छे जो धैरे रूप भएकी छे, एउटा पुरुष छ जो व्यभिचारिणी स्त्रीको पति हो, एउटा यस्तो नदी छ जो दुबै दिशातिर बग्दछ, एउटा अनौठो घर छ जुन पच्चीस ओटा वस्तुहरूले बनेको छ, एउटा हाँस छ जसको स्वर विचित्रको छ, एउटा यस्तो चक्र छ जुन छुरी र वज्रले बनेको छ र आफैं घुमिरहन्छ। यो कुरा के हो नजानी कसरी प्रजाहरूको सृष्टि गर्दछौ ?

**विवरण–** माथिका तीन श्लोकहरूमा नारदजीले हर्यश्वहरूलाई विभिन्न आध्यात्मिक प्रश्नहरू सोध्नुभएको छ। ती प्रश्नहरू यस प्रकार छन्– १. भूमिको अन्त कहाँ छ ? २. एउटै पुरुष भएको राष्ट्र कुन हो ? ३. निस्कने ठाउँ नै नभएको गुफा कुन हो ? ४. बहुरूपी स्त्री को हुन् ? ५. व्यभिचारिणी स्त्रीको पति को हो ? ६. तलमाथि दुबैतिर बग्ने नदी कुन हो ? ७. पच्चीस चिजले बनेको अद्भुत घर कुन हो ? ८. विचित्र स्वर भएको हाँस कुन हो ? ९. वज्रजत्तिकै दृढ अनि आफैं घुमिरहने वस्तु के हो ? यी नौ ओटा प्रश्नहरू प्रतीकात्मक रूपमा आध्यात्मिक विषयलाई सोधिएका प्रश्नहरू हुन्। तलका ११-१९ श्लोकमा हर्यश्वहरूले यिनै प्रश्नहरूको उत्तरको बारेमा चिन्तन गरेका छन्।

**कथं स्वपितुरादेशमविद्वांसो विपश्चितः।**
**अनुरूपमविज्ञाय अहो सर्गं करिष्यथ॥ ९॥**

**पदार्थ–**
**अहो** = आश्चर्य छ
**विपश्चितः** = विद्वान् भएका
**स्वपितुः** = आफ्ना पिता दक्षको
**अनुरूपम्** = वास्तविक अर्थले युक्त भएको
**आदेशम्** = आदेश (आज्ञा)लाई
**अविज्ञाय** = नबुझी
**अविद्वांसः** = मूर्ख भई (तिमीहरूले)
**कथं** = कसरी
**सर्गं** = सृष्टि
**करिष्यथ** = सञ्चालन गर्नेछौ

**वाक्यार्थ–** हे हर्यश्वहरू ! आफ्ना विद्वान् पिता दक्षको वास्तविक अर्थ भएको आदेशलाई तिमीहरूले बुझ्न सकेनौ। पिताको भनाइको वास्तविक तात्पर्यलाई नबुझी तिमीहरू कसरी सृष्टि सञ्चालन गर्न सक्दछौ ?

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**तन्निशम्याथ हर्यश्वा औत्पत्तिकमनीषया।**
**वाचः कूटं तु देवर्षेः स्वयं विममृशुर्धिया॥ १०॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**देवर्षेः** = नारदजीको
**तत्** = त्यो
**वाचः कूटं तु** = बुझ्न कठिन गूढ रहस्यमय वाणीलाई
**निशम्य** = सुनेर
**हर्यश्वाः** = हर्यश्वहरूले
**औत्पत्तिकमनीषया** = जन्मसिद्ध सहज विचार शक्ति भएको
**धिया** = आफ्नो बुद्धिद्वारा
**स्वयं** = आफैँ
**विममृशुः** = विचार गर्न लागे

**वाक्यार्थ–** हर्यश्वहरू जन्मजात विचारशील विवेकी थिए। उनीहरूले देवर्षि नारदले घुमाएर भनेको गूढ रहस्यमय वाणी सुनेर आफ्नो बुद्धिले आफैँ मनमनै विचार गर्न लागे।

**भूः क्षेत्रं जीवसंज्ञं यदनादि निजबन्धनम्।**
**अदृष्ट्वा तस्य निर्वाणं किमसत्कर्मभिर्भवेत्॥ ११॥**

**पदार्थ–**
**भूः** = पृथिवी नै
**क्षेत्रं** = खेत झैँ (पुण्यपाप सुखदुःख आदिको जनक भएकाले)
**जीवसंज्ञं** = जीव उपाधि भएको लिङ्गशरीर हो
**यत्** = जो लिङ्गशरीर
**अनादि** = अनादि कालदेखिको
**निजबन्धनम्** = जीवको बन्धन हो
**तस्य** = त्यस सूक्ष्म शरीरको
**निर्वाणं** = अन्त (विनाशको उपायलाई)
**अदृष्ट्वा** = नजानी
**असत्कर्मभिः** = मोक्षमा काम नलाग्ने बेकारका कर्महरूद्वारा
**किम्** = के प्रयोजन (फल)
**भवेत्** = सिद्ध हुन सक्ला

**वाक्यार्थ–** (भूमिको अन्त कहाँ छ ? नारदको यस प्रश्नको विषयमा हर्यश्वहरूले यसरी विचार गरे) पृथिवी भनेको लिङ्गशरीर हो किनभने पृथिवीमा धान आदि फले झैँ यस लिङ्गशरीरबाट

पुण्यपाप, सुखदुःख आदि उत्पन्न हुन्छन्। लिङ्गशरीर नै अनादि कालदेखिको जीवको बन्धन हो। अतः लिङ्गशरीरको विनाशको उपाय नबुझी मोक्षमा काम नलाग्ने बेकारका कर्महरूको अवलम्बन गरेर हामीलाई के लाभ हुन सक्दछ ? केही पनि हुँदैन।

**एक एवेश्वरस्तुर्यो भगवान् स्वाश्रयः परः।**
**तमदृष्ट्वाभवं पुंसः किमसत्कर्मभिर्भवेत्॥ १२॥**

**पदार्थ–**
**ईश्वरः** = सर्वसमर्थ ईश्वर
**एकः एव** = एउटै छ
**तुर्यः** = विश्व, तैजस र प्राज्ञदेखि भिन्न भई तिनीहरूको साक्षीरूपले रहेको छ
**स्वाश्रयः** = आफैँमा आश्रित छ
**परः** = प्रकृति र त्यसको कार्यभन्दा पनि पर रहेको छ
**भगवान्** = ऐश्वर्यले परिपूर्ण छ
**अभवम्** = उत्पत्तिरहित (नित्य)
**तम्** = त्यो परमात्मालाई
**अदृष्ट्वा** = नजानी
**असत्कर्मभिः** = बन्धनमूलक कर्महरूद्वारा
**पुंसः** = पुरुषको
**किम्** = कुन प्रयोजन
**भवेत्** = सिद्ध हुन्छ र

**वाक्यार्थ–** (एउटै पुरुष भएको राष्ट्र कुन हो ? नारदको यस प्रश्नको विषयमा हर्यश्वहरूले यसरी विचार गरे) ईश्वर एउटै र सर्वसमर्थ छ। ऊ जाग्रत् आदि अवस्था र तिनका अभिमानी विश्व, तैजस र प्राज्ञभन्दा भिन्न छ र ती-ती अवस्थाहरूमा साक्षीरूपले रहेको छ। प्रकृति र त्यसका कार्यहरूभन्दा पर रहेको ऐश्वर्यले परिपूर्ण भगवान् उत्पत्तिरहित र नित्य छ। यस्तो भगवान्लाई नजानी मोक्षका लागि अनुपयोगी कर्महरू गरेर पुरुषलाई के लाभ हुन्छ र ?

**पुमान्नैवैति यद् गत्वा बिलस्वर्गं गतो यथा।**
**प्रत्यग्धामाविद इह किमसत्कर्मभिर्भवेत्॥ १३॥**

**पदार्थ–**
**यत्** = जसलाई
**गत्वा** = प्राप्त गरेर
**बिलस्वर्गं** = पाताल
**गतः यथा** = गएको व्यक्ति झैँ
**पुमान्** = पुरुष
**न एव एति** = फेरि संसारमा आउँदैन
**प्रत्यग्धाम** = त्यो ज्योतिर्मय ब्रह्मलाई
**अविदः** = नजान्ने व्यक्तिको लागि
**इह** = यस लोकमा
**असत्कर्मभिः** = नष्ट हुने स्वर्गादिको साधन भएका कर्महरूद्वारा
**किम्** = के प्रयोजन सिद्ध
**भवेत्** = हुन्छ

**वाक्यार्थ–** (एउटा छिद्र छ जसमा छिरेपछि निस्कने बाटो छैन ? यो प्रश्नको विचार हर्यश्वहरूले यसरी गरे) जसरी भूछिद्ररूप पातालमा प्रवेश गरेको व्यक्ति फर्किएर फेरि आउँदैन त्यसै गरी ज्योतिर्मय ब्रह्मलाई प्राप्त गरेको व्यक्ति पुनः संसारमा फर्केर आउँदैन। त्यो ब्रह्मलाई नजानी नश्वर स्वर्गादि लोकको साधन भएका कर्महरू गरेर के प्रयोजन सिद्ध हुन्छ ?

**नानारूपात्मनो बुद्धिः स्वैरिणीव गुणान्विता।**
**तन्निष्ठामगतस्येह किमसत्कर्मभिर्भवेत्॥ १४॥**

**पदार्थ–**
**स्वैरिणी इव** = व्यभिचारिणी स्त्री झैं
**नानारूपा** = गन्ध आदि विषयहरूमा उन्मुख हुने भएकाले रूप, रस आदि अनेक रूप भएको
**आत्मनः** = जीवको
**बुद्धिः** = बुद्धि
**गुणान्विता** = विभिन्न गुणले युक्त छ
**तन्निष्ठाम्** = बुद्धिको अवसानभूत विवेकलाई
**अगतस्य** = प्राप्त नगरेको व्यक्तिको
**इह** = यो लोकमा
**असत्कर्मभिः** = कुत्सित भोग भोगाउने कर्मद्वारा
**किम्** = के प्रयोजन सिद्ध
**भवेत्** = हुन्छ

**वाक्यार्थ–** (एउटी यस्ती बहुरूपिणी स्त्री छे, त्यो को हो भन्ने नारदको प्रश्नमा हर्यश्वहरूले विचार गर्दछन्) जसरी व्यभिचारिणी स्त्री विभिन्न वस्त्र लगाएर बहुरूपिणी बन्दछे त्यसै गरी गन्ध आदि विषयहरूमा उन्मुख हुने रूप, रस आदि अनेक रूप भएकी बुद्धि नै बहुरूपिणी स्त्री हो। बुद्धिले विभिन्न सत्त्व आदि गुणलाई वस्त्र झैं धारण गर्दछ। त्यही बुद्धिनिष्ठ विवेकलाई प्राप्त नगरेको व्यक्तिले यस लोकमा कुत्सित भोग भोगाउने कर्म गरेर के लाभ प्राप्त गरोस् ?

**तत्सङ्गभ्रंशितैश्वर्यं संसरन्तं कुभार्यवत्।**
**तद्गतीरबुधस्येह किमसत्कर्मभिर्भवेत्॥ १५॥**

**पदार्थ–**
**तत्सङ्गभ्रंशितैश्वर्यं** = बुद्धिको सङ्गतले असङ्गता, स्वतन्त्रता आदि ऐश्वर्य नष्ट भएको
**कुभार्यवत्** = व्यभिचारिणी स्त्रीको पति झैं
**तद्गतीः** = बुद्धिको सङ्गतका कारण हर्ष, विषाद आदि प्राप्त गरेर
**संसरन्तं** = आउने र जाने गरिरहने आत्मालाई
**अबुधस्य** = नजान्ने व्यक्तिको
**इह** = यो लोकमा
**असत्कर्मभिः** = बन्धनमूलक कर्मद्वारा
**किम्** = के प्रयोजन सिद्ध
**भवेत्** = हुन्छ

**वाक्यार्थ–** (कुन यस्तो पुरुष छ जो व्यभिचारिणी स्त्रीको पति हो ? यस प्रश्नको उत्तरमा हर्यश्वहरूले सोच्न लागे) जसरी व्यभिचारिणी स्त्रीको पतिको स्वतन्त्रता र ऐश्वर्य नष्ट हुन्छ त्यसै गरी बुद्धि पनि व्यभिचारिणी स्त्रीसमान छ। बुद्धिसँग सङ्गत गर्ने मानिसको पनि स्वतन्त्रता नष्ट हुन्छ र हर्ष, विषाद आदि प्राप्त गरी संसारमा आउने र जाने भइरहन्छ। यसरी संसारमा आउने र जाने गरिरहने आत्मालाई नजान्ने मानिसले बन्धनमूलक सकाम कर्म गरेर के प्रयोजन प्राप्त होला ?

**सृष्ट्यप्ययकरीं मायां वेलाकूलान्तवेगिताम्।**
**मत्तस्य तामविज्ञस्य किमसत्कर्मभिर्भवेत्॥ १६॥**

**पदार्थ–**
**सृष्ट्यप्ययकरीं** = जगत्को सृष्टि र लय गर्ने
**ताम्** = त्यो भगवान्को शक्तिभूत
**वेलाकूलान्तवेगिताम्** = नदीप्रवाहमा परेका मनुष्यहरूको निस्किने ठाउँ तट भए झैं संसारप्रवाहमा परेका मानिसको निस्किने ठाउँ विद्या, तप आदि

उपाय अपनाउने व्यक्तिको मनमा क्रोध आदि वेगपूर्वक उत्पन्न गराइदिने र सृष्टि र लय दुबैतिर बग्ने
**मायां** = मायालाई
**अविज्ञस्य** = नजान्ने
**मत्तस्य** = विषयभोगमा लम्पट व्यक्तिको लागि
**असत्कर्मभिः** = संसारमैं जाकिदिने कर्मद्वारा
**किम् भवेत्** = के लाभ हुन्छ

**वाक्यार्थ–** (दुबैतिर बग्ने नदी कुन हो ? भन्ने नारदको प्रश्नमा हर्यश्वहरूले विचार गरे) जगत्को सृष्टि र लय गर्ने भगवान्को शक्तिरूप माया नै दुबै दिशातिर बग्ने नदी हो। सृष्टिकालमा पूर्वपूर्वक्रमले तत्त्वहरू सृष्टि गर्ने र लयकालमा उत्तरोत्तर क्रमले पूर्वपूर्वतत्त्वहरूमा प्रवेश गर्ने भएकाले मायालाई दुबैतिर (सृष्टि र लय) बग्ने नदी भनिएको हो। नदीप्रवाहमा परेका मनुष्यको निस्किने ठाउँ तट भए झैं संसारप्रवाहमा परेका मानिसको निस्किने उपाय विद्या, तप आदि हुन्। मायाले त्यो विद्या, तप आदि उपायको अवलम्बन गर्ने व्यक्तिको मनमा वेगपूर्वक क्रोध, अहङ्कार आदि उत्पन्न गरिदिन्छ। त्यसरी सृष्टि र लय दुबैतिर प्रवाह भएको मायाद्वारा मोहित भई काम, क्रोध आदिका कारण संसार प्रवाहमा खसेको छु भन्ने नजानी मायाकै कार्य विषयभोगमा लम्पट हुने व्यक्तिले संसारचक्रमा घुमाइरहने कर्म गरेर के प्राप्त गर्ला ?

**पञ्चविंशतितत्त्वानां पुरुषोऽद्भुतदर्पणम्।**
**अध्यात्ममबुधस्येह किमसत्कर्मभिर्भवेत्॥ १७॥**

**पदार्थ–**
**पुरुषः** = परमात्मा
**पञ्चविंशतितत्त्वानां** = पच्चीस तत्त्वरूप घरको
**अद्भुतदर्पणम्** = अनौठो प्रकाशक र आश्रय हो
**अध्यात्मम्** = समस्त कार्यकारण रूप समूहको अधिष्ठाता भएको यो परमेश्वरलाई
**अबुधस्य** = नजान्ने व्यक्तिको
**इह** = यस लोकमा
**असत्कर्मभिः** = स्वतन्त्रजस्तो लाग्ने तर आत्मस्वरूपलाई ढाक्ने (परतन्त्रता दिने) कर्महरूद्वारा
**किम्** = के प्रयोजन
**भवेत्** = सिद्ध हुन्छ र

**वाक्यार्थ–** (पच्चीस ओटा तत्त्वहरूले बनेको घर के हो ? भन्ने नारदको प्रश्नमा हर्यश्वहरूले विचार गरे) पच्चीस तत्त्वहरू (चौबीस ओटा प्राकृत पदार्थ र एउटा जीव)ले बनेको शरीर नै आश्चर्यमय अद्भुत घर हो। यसको आश्रय र प्रकाशक परमात्मा हुनुहुन्छ। समस्त कार्यकारणरूप समूहको अधिष्ठाता ती परमेश्वरलाई नबुझी मानिसले यो लोकमा आत्मस्वतन्त्रता विरोधी कर्महरू गरी के लाभ होला ?

**ऐश्वरं शास्त्रमुत्सृज्य बन्धमोक्षानुदर्शनम्।**
**विविक्तपदमज्ञाय किमसत्कर्मभिर्भवेत्॥ १८॥**

**पदार्थ–**
**ऐश्वरं** = ईश्वरको प्रतिपादन गर्ने
**विविक्तपदम्** = जड र चेतन पदार्थलाई विभिन्न पदद्वारा छुट्याउने
**बन्धमोक्षानुदर्शनम्** = बन्धन र मोक्षलाई स्पष्ट देखाउने
**शास्त्रम्** = वेद, उपनिषद् आदि शास्त्रलाई

**अज्ञाय** = नजानी
**उत्सृज्य** = त्यागेर
**असत्कर्मभिः** = बहिर्मुखी कर्मद्वारा
**किम्** = के लाभ
**भवेत्** = हुन्छ र

**वाक्यार्थ–** (विचित्र स्वर भएको हाँस के हो ? यसको उत्तर) ईश्वरको प्रतिपादन गर्ने वेद, उपनिषद् आदि शास्त्रहरू नै विचित्र स्वर भएका विवेकी हाँससमान हुन्। विभिन्न पद र वाक्यहरूद्वारा शास्त्रहरूले बन्धन र मोक्षको स्वरूपलाई छुट्याएर स्पष्ट देखाउने गर्दछन्। यस्तो आत्ममुखी शास्त्रलाई छाडी मानिसलाई बहिर्मुखी बनाउने कर्मद्वारा के त्यस्तो लाभ हुन सक्दछ ?

**कालचक्रं भ्रमिस्तीक्ष्णं सर्वं निष्कर्षयज्जगत्।**
**स्वतन्त्रमबुधस्येह किमसत्कर्मभिर्भवेत्॥ १९॥**

**पदार्थ–**
**भ्रमिः** = सधैं घुमिरहने
**तीक्ष्णं** = छुरा र वज्र झैं अत्यन्त तिखो भएको
**सर्वं** = सम्पूर्ण
**जगत्** = संसारलाई
**निष्कर्षयत्** = कर्मानुरूप स्वर्ग, नरक आदिमा खिच्ने
**स्वतन्त्रम्** = कसैद्वारा नरोकिने
**कालचक्रं** = कालरूपी चक्रलाई
**अबुधस्य** = नजान्ने व्यक्तिको
**इह** = यस लोकमा
**असत्कर्मभिः** = अनित्य कर्मद्वारा
**किम्** = के प्रयोजन सिद्ध
**भवेत्** = हुन्छ

**वाक्यार्थ–** (छुरी र वज्रले बनेको आफैं घुमिरहने चक्रविशेषको सन्दर्भमा हर्यश्वहरूले विचार गरे) सधैं घुमिरहने छुरा र वज्र झैं अत्यन्त तिखो कालचक्रले नै संसारका समस्त जीवहरूलाई जन्म, मरण आदि विभिन्न रूपमा तान्ने र उनीहरूको कर्मअनुरूप स्वर्ग, नरक आदि लोकमा खिच्ने काम गरिरहन्छ। कसैद्वारा पनि रोक्न नसकिने कालचक्रको स्वरूपलाई नबुझी यो लोकमा जसले अनित्य कर्मको अनुष्ठान गरिरहन्छ त्यसले के प्रयोजन सिद्ध गर्न सक्ला ?

**विवरण–** माथिका नौ श्लोकहरूमा नारदजीले सोधेका नौ ओटा प्रश्नहरूको उत्तरका बारेमा हर्यश्वहरूले चिन्तन गरेका छन्। ती प्रश्नहरू यसै अध्यायको आठौं श्लोकको विवरणमा दिइएका छन्।

हर्यश्वहरूले चिन्तन गरेको पहिलो प्रश्नको उत्तर यस प्रकार छ– भूमिको क्षेत्र विशाल छ। क्षेत्र भन्नाले सत्र कलाले बनेको लिङ्गशरीर हो। त्यसको अन्त्य ज्ञानद्वारा मोक्ष भएपछि हुन्छ। यस्तै दोस्रो प्रश्नको उत्तर यसप्रकार छ– एक मात्र पुरुष परमात्मा हुनुहुन्छ जो सम्पूर्ण संसारको आश्रय र शासक हुनुहुन्छ। तेस्रो प्रश्नको उत्तर हो– निस्कने ठाउँ नै नभएको गुफा भनेको स्वयम्प्रकाश ब्रह्मतत्त्व हो जसलाई प्राप्त गरेपछि ज्ञानीहरू संसारमा फर्कंदैनन्। चौथो प्रश्नको उत्तर हो– बुद्धि वेश्या स्त्री जस्ती छे जसले आफ्ना रुचि र निर्णयहरूलाई फेरिरहन्छे। पाँचौं प्रश्नको उत्तर हो– व्यभिचारिणी स्त्रीको पति भनेको बुद्धिको मालिक यही जीवात्मा हो जो दुष्ट स्त्रीको सङ्गतले बिग्रिएको मानिस झैं संसारको उल्झनमा परिरहेको छ। छैंटौं प्रश्नको उत्तर हो– दुबैतिर बग्ने नदी भनेको माया हो जो जगत्को सृष्टि र प्रलय दुबै गर्दछे। सातौं प्रश्नको उत्तर हो– पच्चीस वस्तुले बनेको अद्भुत घर भनेको यही शरीर नै हो जो दश इन्द्रिय, पञ्चप्राण, पञ्चतन्मात्रा र मन, बुद्धि, अहङ्कार, प्रकृति अनि पुरुष मिलेर बनेको छ, जसको अधिष्ठाता पुरुष

जीवात्मा हो। आठौं प्रश्नको उत्तर हो— बन्धन र मोक्ष दुबैको बाटो स्पष्ट छुट्याएर देखाउने शास्त्रहरू नै हाँस हुन्। यिनले संसार र आत्मालाई छुट्याउँछन्। नवौं प्रश्नको उत्तर हो— वज्रसमान बलियो आफैं घुम्ने चक्र भनेको काल हो जो दिनप्रतिदिन आफ्नो वेगले बढ्दै नै जान्छ।

यी प्रश्नहरूको उत्तर नबुझी गरिएका कर्महरू **असत्कर्म** अर्थात् व्यर्थका कर्महरू हुन् भनी नारदजीले हर्यश्वलाई भन्नुभएको छ। असत्कर्म नौ प्रकारका छन्— १. जीवलाई सुख दिन नसक्ने कर्महरू २. ईश्वरलाई समर्पण नगरिएका कर्महरू ३. ब्रह्ममा नपुऱ्याई तर संसारमैं फर्काउने स्वर्गादि फल भएका सकाम कर्महरू ४. चञ्चल बुद्धिजस्तै अशान्त कर्महरू ५. बुद्धिको भर परी विवेक विना नै जीवले गरेका कर्महरू ६. मायाद्वारा प्रायोजित मायिक असत्य कर्महरू ७. शरीरभित्र बन्धनमा परेको जीवले आफूलाई स्वतन्त्र झैं ठानी गरेका स्वतन्त्रता हनन गर्ने कर्महरू ८. मोक्षको विचार नगरी गरिने जीवलाई बहिर्मुख बनाउने कर्महरू एवं ९. कालले सबै दृष्ट फल नाश गर्ने सकाम कर्महरू। यस्ता कर्महरूबाट जीवलाई परमपुरुषार्थरूप मोक्ष प्राप्तिमा सहयोग नमिल्ने भएकाले यिनीहरूलाई असत्कर्म भनिएको हो।

**शास्त्रस्य पितुरादेशं यो न वेद निवर्तकम्।**

**कथं तदनुरूपाय गुणविस्रम्भ्युपक्रमेत्॥ २०॥**

| | | |
|---|---|---|
| **पदार्थ—** | **यः** = जसले | **तदनुरूपाय** = कर्मबाट |
| **शास्त्रस्य** = वेद आदि शास्त्ररूप | **न वेद** = जान्दैन (त्यो) | निवृत्तिका लागि पिताको |
| **पितुः** = पिताको | **गुणविस्रम्भी** = शब्दात्मक | आज्ञापालन |
| **निवर्तकम्** = कर्मनिवृत्तिरूप | गुणप्रयुक्त प्रवृत्तिमार्गमा विश्वास | **कथं** = कसरी |
| **आदेशं** = आदेशलाई | गर्ने व्यक्तिले | **उपक्रमेत्** = गर्न सक्छ |

**वाक्यार्थ—** उपनयन आदि संस्कारद्वारा दोस्रो जन्म दिने र जन्मपछि पनि हित उपदेश गर्ने भएकाले वेद आदि शास्त्रहरू पिता हुन्। त्यस्ता शास्त्ररूप पिताको आदेश कर्ममा होइन कर्मनिवृत्तिमा केन्द्रित छ। यो कुरा जसले बुझ्दैन त्यो व्यक्ति ('स्वर्गकामो यजेत' इत्यादि) शब्दात्मक गुणद्वारा प्रयुक्त प्रवृत्तिमार्गमा विश्वास गर्दछ। त्यस्तो मानिसले कर्मनिवृत्तिमूलक पिताको आज्ञापालन कसरी गर्न सक्दछ ?

**इति व्यवसिता राजन् हर्यश्वा एकचेतसः।**

**प्रययुस्तं परिक्रम्य पन्थानमनिवर्तनम्॥ २१॥**

| | | |
|---|---|---|
| **पदार्थ—** | अर्थनिश्चय गरेका | **परिक्रम्य** = परिक्रमा गरेर |
| **राजन्** = हे राजा परीक्षित् | **एकचेतसः** = एक मत भएका | **अनिवर्तनम्** = फेरि संसार |
| **इति** = यसप्रकार | **हर्यश्वाः** = हर्यश्वहरू | नफर्कने |
| **व्यवसिताः** = नारदको वाक्यमा | **तं** = ती उपदेश दिने नारदलाई | **पन्थानम्** = मोक्षमार्गमा |

(निवृत्तिमार्गमा) | **प्रययुः** = हिँडे

**वाक्यार्थ–** हे राजा परीक्षित् ! यसप्रकार देवर्षि नारदको वचनको अर्थ (रहस्य) सबै हर्यश्वहरूले बुझे र त्यसमा सबैको मत पनि मिल्यो। त्यसपछि उनीहरूले ज्ञानको उपदेश गर्ने नारदजीलाई परिक्रमा गरी मोक्षपथ (निवृत्तिमार्ग)को अनुयायी भई त्यहाँबाट हिँडे जहाँबाट फेरि संसारमा फर्कनु पर्दैन।

**स्वरब्रह्मणि निर्भातहृषीकेशपदाम्बुजे।**

**अखण्डं चित्तमावेश्य लोकाननुचरन्मुनिः॥ २२॥**

**पदार्थ–**
**मुनिः** = देवर्षि नारद
**निर्भातहृषीकेशपदाम्बुजे** = अभिन्नरूपले प्रकट हुनुभएका भगवान् विष्णुको चरणकमलमा
**स्वरब्रह्मणि** = षड्ज आदि स्वररूप परब्रह्ममा
**अखण्डं** = एकाग्र
**चित्तम्** = मन
**आवेश्य** = स्थिर गरी
**लोकान्** = लोक लोकान्तरमा
**अनुचरत्** = घुम्न थाल्नुभयो

**वाक्यार्थ–** देवर्षि नारदमुनि पनि षड्ज आदि स्वरमा अभिन्न रूपले प्रकट हुनुभएका परब्रह्म परमात्मामा आफ्नो मनलाई एकाग्रतापूर्वक स्थिर गरी लोकलोकान्तरमा विचरण गर्न लाग्नुभयो।

**नाशं निशम्य पुत्राणां नारदाच्छीलशालिनाम्।**

**अन्वतप्यत कः शोचन् सुप्रजस्त्वं शुचां पदम्॥ २३॥**

**पदार्थ–**
**नारदात्** = देवर्षि नारदबाट
**शीलशालिनाम्** = अत्यन्त सुशील
**पुत्राणां** = हर्यश्व आदि छोराहरूको
**नाशं** = गृहस्थधर्मबाट निवृत्ति
**निशम्य** = सुनेर
**कः** = दक्षप्रजापति
**शोचन्** = (मेरा छोराहरू सन्तानोत्पादनरूप धर्मबाट च्युत भए भनेर) शोक गर्दै
**अन्वतप्यत** = दुःखाकुल भए
**सुप्रजस्त्वं** = राम्रो छोरा हुनु पनि
**शुचां** = शोकको
**पदम्** = कारण (स्थान) हो

**वाक्यार्थ–** देवर्षि नारदको वचनबाट अत्यन्त सुशील आफ्ना हर्यश्व आदि पुत्रहरू गार्हस्थ्य धर्मबाट पराङ्मुख भई निवृत्तिमार्गमा लागेर हिँडे भन्ने सुनेर दक्षप्रजापतिले 'अहो ! मेरा छोराहरू सन्तानोत्पादनरूप धर्मबाट च्युत भए' भनी शोक गर्दै अत्यन्त दुःखी हुन लागे। राम्रो छोरा हुनु पनि शोकको कारण हो।

**स भूयः पाञ्चजन्यायामजेन परिसान्त्वितः।**

**पुत्रानजनयद् दक्षः शबलाश्वान् सहस्रशः॥ २४॥**

**पदार्थ–**
**अजेन** = ब्रह्माद्वारा
**परिसान्त्वितः** = आश्वस्त गरिएका
**सः** = ती शोकाकुल
**दक्षः** = दक्षप्रजापतिले

| | | |
|---|---|---|
| **भूयः** = फेरि<br>**पाञ्चजन्यायाम्** = आफ्नी पत्नी पाञ्चजन्या (असिक्नी)मा | **शबलाश्वान्** = शबलाश्व नाम गरेका<br>**सहस्रशः** = एक हजार | **पुत्रान्** = छोराहरू<br>**अजनयत्** = उत्पन्न गरे |

**वाक्यार्थ–** यसरी दुःखित भएका दक्षप्रजापतिलाई ब्रह्माजीले सम्झाई-बुझाई गरेर आश्वस्त बनाए। त्यसपछि दक्षले फेरि आफ्नी पत्नी पञ्चजनीकी छोरी असिक्नीबाट शबलाश्व नाम गरेका एक हजार पुत्र जन्माए।

**तेऽपि पित्रा समादिष्टाः प्रजासर्गे धृतव्रताः।**
**नारायणसरो जग्मुर्यत्र सिद्धाः स्वपूर्वजाः॥ २५॥**

| | | |
|---|---|---|
| पदार्थ–<br>**पित्रा** = पिता दक्षद्वारा<br>**प्रजासर्गे** = प्रजाहरूको सृष्टि गर्न<br>**समादिष्टाः** = आदेश दिइएका<br>**धृतव्रताः** = प्रजावृद्धिको व्रत लिएका | **ते अपि** = ती शबलाश्व आदि दक्षका छोराहरू पनि<br>**नारायणसरः** = नारायणसर नाम गरेको तीर्थमा<br>**जग्मुः** = तपस्या गर्न गए<br>**यत्र** = जुन तीर्थमा | **स्वपूर्वजाः** = आफ्ना हर्यश्व आदि दाइहरू<br>**सिद्धाः** = नारदको उपदेशद्वारा सिद्ध भएका थिए |

**वाक्यार्थ–** ती पुत्रहरू पनि पिता दक्षको आज्ञानुसार प्रजाको सृष्टि गर्न कटिबद्ध थिए। त्यसका लागि उनीहरू पनि नारायणसर नामक तीर्थमा तपस्या गर्न गए जुन तीर्थमा हर्यश्व आदि आफ्ना दाजुहरू नारदको उपदेशबाट भक्ति र ज्ञान प्राप्त गरी कृतार्थ भएका थिए।

**तदुपस्पर्शनादेव विनिर्धूतमलाशयाः।**
**जपन्तो ब्रह्म परमं तेपुस्तेऽत्र महत् तपः॥ २६॥**

| | | |
|---|---|---|
| पदार्थ–<br>**तदुपस्पर्शनादेव** = त्यो नारायणसर तीर्थको जलाचमन आदि गर्नासाथ<br>**विनिर्धूतमलाशयाः** = मनका | रागादि मल नष्ट भएर शुद्ध अन्तःकरण भएका<br>**ते** = ती शबलाश्वहरूले<br>**अत्र** = यो नारायणसर तीर्थमा<br>**परमं** = परम | **ब्रह्म** = ब्रह्मलाई (प्रणवलाई)<br>**जपन्तः** = जप गर्दै<br>**महत्तपः** = ठुलो तपस्या<br>**तेपुः** = गरे |

**वाक्यार्थ–** शबलाश्वहरूले नारायणसरको जलमा आचमन गर्नासाथ राग आदि मलहरू नष्ट भई उनीहरूको अन्तःकरण शुद्ध भयो। त्यसपछि त्यही तीर्थमा बसेर उनीहरूले परब्रह्मरूप प्रणवको जप गर्दै कठोर तपस्या गर्न लागे।

**अब्भक्षाः कतिचिन्मासान् कतिचिद् वायुभोजनाः।**
**आराधयन् मन्त्रमिममभ्यस्यन्त इडस्पतिम्॥ २७॥**

**ॐ नमो नारायणाय पुरुषाय महात्मने ।**
**विशुद्धसत्त्वधिष्ण्याय महाहंसाय धीमहि ॥ २८ ॥**

**पदार्थ–**
**कतिचित्** = कति (केही)
**मासान्** = महिनासम्म
**अब्भक्षाः** = पानी मात्र पिएर
**कतिचित्** = केही महिनासम्म
**वायुभोजनाः** = हावा मात्र खाएर (तपस्यारत शबलाश्वहरूले)
**ॐ** = ॐकारस्वरूप
**विशुद्धसत्त्वधिष्ण्याय** = शुद्ध चित्त नै प्रतीतिस्थान भएका
**महाहंसाय** = परमहंसस्वरूप
**महात्मने** = सर्वव्यापक अन्तर्यामी महात्मा
**पुरुषाय** = सर्वेश्वर
**नारायणाय** = नारायणलाई
**नमः** = नमस्कारपूर्वक
**धीमहि** = ध्यान गर्दछौँ
**इमम्** = यो
**मन्त्रम्** = मन्त्रलाई
**अभ्यस्यन्तः** = अभ्यास गर्दै
**इडस्पतिम्** = मन्त्रका अधिपति नारायणलाई
**आराधयन्** = आराधना गरे

**वाक्यार्थ–** केही महिनासम्म पानी मात्र पिएर र केही महिनासम्म हावा मात्र खाएर शबलाश्वहरूले 'शुद्ध चित्त नै प्रतीतिस्थान भएका परमहंस अन्तर्यामी ॐकारस्वरूप सर्वेश्वर नारायणलाई नमस्कारपूर्वक ध्यान गर्दछौँ' यो मन्त्रको अभ्यास गरी मन्त्राधिपति नारायणको आराधना गरे।

**इति तानपि राजेन्द्र प्रतिसर्गधियो मुनिः ।**
**उपेत्य नारदः प्राह वाचः कूटानि पूर्ववत् ॥ २९ ॥**

**पदार्थ–**
**राजेन्द्र** = हे महाराज
**इति** = यसप्रकार
**प्रतिसर्गधियः** = नयाँ सृष्टिका लागि दृढ विचार भएका
**तान् अपि** = ती शबलाश्वहरू भएको ठाउँमा पनि
**उपेत्य** = आएर
**नारदः** = नारद
**मुनिः** = मुनि (देवर्षि)ले
**पूर्ववत्** = पहिले भने झैँ
**वाचः कूटानि** = कूट वचन
**प्राह** = भन्न लाग्नुभयो

**वाक्यार्थ–** हे महाराज परीक्षित् ! यसप्रकार प्रजाहरूको नयाँ सृष्टिका लागि व्रत बसेका शबलाश्वहरूले तपस्या गरेको ठाउँमा पुनः नारदमुनि आइपुग्नुभयो र पहिले हर्यश्वहरूलाई भने झैँ कूटवचन भन्नुभयो।

**दाक्षायणाः संशृणुत गदतो निगमं मम ।**
**अन्विच्छतानुपदवीं भ्रातॄणां भ्रातृवत्सलाः ॥ ३० ॥**

**पदार्थ–**
**भ्रातृवत्सलाः** = दाइहरूलाई प्रेम गर्ने
**दाक्षायणाः** = हे दक्षपुत्रहरू हो
**गदतः** = उपदेश दिनेवाला
**मम** = मेरो
**निगमं** = उपदेश
**संशृणुत** = सुन
**भ्रातॄणां** = आफ्ना दाजु हर्यश्व

| | |
|---|---|
| आदिको | **अन्विच्छत** = इच्छा गर |
| **अनुपदवीं** = निवृत्तिमार्गलाई | (अनुसरण गर) |

**वाक्यार्थ–** हे दक्षपुत्र शबलाश्वहरू ! म तिमीहरूलाई उपदेश गर्दछु, मेरो उपदेश सुन। तिमीहरू आफ्ना दाजु हर्यश्वहरूहरूले अवलम्बन गरेको निवृत्तिमार्गकै अनुसरण गर।

**भ्रातॄणां प्रायणं भ्राता योऽनुतिष्ठति धर्मवित्।**

**स पुण्यबन्धुः पुरुषो मरुद्भिः सह मोदते॥ ३१॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **भ्रातॄणां** = दाइहरूको | **सः** = त्यो |
| **धर्मवित्** = धर्मलाई जान्ने | **प्रायणं** = श्रेष्ठ मार्गलाई | **पुरुषः** = पुरुष |
| **यः** = जुन | **अनुतिष्ठति** = अनुसरण गर्दछ | **मरुद्भिः सह** = मरुद्गणहरूसँग |
| **भ्राता** = भाइले | **पुण्यबन्धुः** = पुण्य नै बन्धु भएको | **मोदते** = स्वर्गमा आनन्दले रहन्छ |

**वाक्यार्थ–** तिमीहरू दाजुको अनुगमनरूप धर्मलाई जान्दछौ र पुण्यवान् पनि छौ। जुन भाइहरूले आफ्ना दाजुहरूद्वारा अनुष्ठान गरिएको उत्तम मार्गको अनुसरण गर्दछन् ती भाइहरू मरुद्गणहरूसँग स्वर्गलोकमा आनन्दपूर्वक रमाउँछन्।

**एतावदुक्त्वा प्रययौ नारदोऽमोघदर्शनः।**

**तेऽपि चान्वगमन् मार्गं भ्रातॄणामेव मारिष॥ ३२॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **एतावत्** = यति कुरा | **भ्रातॄणाम् एव** = हर्यश्व आदि |
| **मारिष** = हे श्रेष्ठ परीक्षित् | **उक्त्वा** = भनेर | दाजुहरूको नै |
| **अमोघदर्शनः** = सफल दर्शन | **प्रययौ** = जानुभयो | **मार्गं** = निवृत्तिमार्गलाई |
| भएका | **ते अपि च** = ती शबलाश्वहरूले | **अन्वगमन्** = अनुसरण गरे |
| **नारदः** = नारदमुनि | पनि | |

**वाक्यार्थ–** हे पुरुषश्रेष्ठ परीक्षित् ! नारदजीको दर्शन कहिल्यै विफल (व्यर्थ) हुँदैन। पूर्वोक्त प्रकारले उपदेश गरेर नारदजी त्यहाँबाट हिँड्नुभयो। त्यसपछि शबलाश्वहरूले पनि प्रजासृष्टिमूलक प्रवृत्तिमार्गलाई त्यागी दाजु हर्यश्वहरूकै निवृत्तिमार्गको अनुसरण गरे।

**सध्रीचीनं प्रतीचीनं परस्यानुपथं गताः।**

**नाद्यापि ते निवर्तन्ते पश्चिमा यामिनीरिव॥ ३३॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **परस्य** = परब्रह्मरूप नारायणको | **पश्चिमाः** = बितेका |
| **सध्रीचीनं** = अत्यन्त सुन्दर | **अनुपथं** = अनुकूल मार्गमा | **यामिनीः इव** = रात्रि झैँ |
| **प्रतीचीनं** = अन्तर्मुखी | **गताः** = प्राप्त भएका | **अद्य अपि** = अहिलेसम्म पनि |
| चित्तवृत्तिद्वारा पाइने | **ते** = ती शबलाश्वहरू | **न निवर्तन्ते** = फर्किएका छैनन् |

**वाक्यार्थ–** ती दक्षपुत्र शबलाश्वहरूले अन्तर्मुखी चित्तवृत्तिद्वारा पाइने परब्रह्मस्वरूप नारायणको अनुकूल अति सुन्दर भगवत्प्राप्तिको मार्गमा लागे। जसरी बितेका रातहरू फर्किंदैनन् त्यसै गरी उनीहरू पनि अहिलेसम्म पनि त्यो भगवत्प्राप्तिको मार्गबाट फर्किएका छैनन्।

**एतस्मिन् काल उत्पातान् बहून् पश्यन् प्रजापतिः।**
**पूर्ववन्नारदकृतं पुत्रनाशमुपाशृणोत्॥ ३४॥**

| | | |
|---|---|---|
| पदार्थ– | **पश्यन्** = देख्न थालेका | प्रजासृष्टि गर्नबाट रोकी |
| **एतस्मिन्** = यो | **प्रजापतिः** = प्रजापति दक्षले | निवृत्तिमार्गमा लगाएको कुरा |
| **काले** = समयमा | **पूर्ववत्** = अघि झैं | **उपाशृणोत्** = सुने |
| **बहून्** = अनेक | **नारदकृतं** = देवर्षि नारदले गरेको | |
| **उत्पातान्** = अनिष्ट सङ्केतहरू | **पुत्रनाशम्** = छोराहरूलाई | |

**वाक्यार्थ–** यता दक्षप्रजापतिले अनेक थरीका नराम्रा लक्षणहरू देख्न थालेका थिए। यस्तै अवस्थामा उनले देवर्षि नारदको उपदेशबाट आफ्ना छोरा शबलाश्वहरू पनि हर्यश्वहरू झैं प्रजासृष्टि गर्ने काममा नलागी निवृत्तिमार्गमा लागेको कुरा सुने।

**चुक्रोध नारदायासौ पुत्रशोकविमूर्च्छितः।**
**देवर्षिमुपलभ्याह रोषाद् विस्फुरिताधरः॥ ३५॥**

| | | |
|---|---|---|
| पदार्थ– | **नारदाय** = नारदप्रति | **देवर्षिम्** = नारद मुनिलाई |
| **पुत्रशोकविमूर्च्छितः** = पुत्रहरू | **चुक्रोध** = अत्यन्त रिसाए | **उपलभ्य** = भेटेर |
| कर्तव्यविमुख भए भन्ने चिन्ताले | **रोषात्** = रिसका कारण | **आह** = भने |
| मूर्च्छित (व्याकुल) भएका | **विस्फुरिताधरः** = ओठ काँपेका | |
| **असौ** = ती दक्ष | दक्षप्रजापतिले | |

**वाक्यार्थ–** पुत्रहरू कर्तव्यविमुख भएको सुनेर चिन्ताले व्याकुल भएका दक्ष आफ्ना छोराहरूलाई त्यस्तो उपदेश दिने नारदसँग अत्यन्तै रिसाए। जब उनले नारदलाई भेटे तब रिसले थर्र ओठ कपाउँदै नारदलाई भने।

**विवरण–** आफ्ना परमप्रिय पुत्र शबलाश्वहरू मोक्षमार्गमा लागेको थाहा पाएर प्रजासृष्टि गर्न चाहने यी दक्षप्रजापति विरक्तिन्छन् र त्यही वेला उपदेश गरी यिनको सजिलै उद्धार गर्न सकिन्छ भन्ने विचार गरी दक्षको कल्याणका लागि नारदजी स्वयं दक्षको समीपमा आउनुहुन्छ। स्वायम्भुव मनुको वंशमा उत्पन्न प्रियव्रत, उत्तानपाद, ध्रुव, प्राचीनबर्हि, प्रचेता, हर्यश्व आदि सबैलाई भगवान्कै कृपाद्वारा मैले मोक्षमार्गमा लगाउन उपदेश गरें र ती सबैको उद्धार पनि भयो, एक जना यिनै दक्षलाई मात्र किन अविद्यामय अन्धकारमा छोडूँ, यिनको उद्धार किन नगरूँ भन्ने सोची नारदजी दक्षका अगाडि आउनुभएको हो। नारदलाई आफ्नो अगाडि देखेर दक्ष झन् क्रुद्ध भए।

**पदार्थ–**
**ह्रीश्रीदयाकीर्तिभिः** = लज्जा, ऐश्वर्य, दया र कीर्ति आदि सद्गुणहरूले
**उज्झितं** = रहित एवं
**स्वकर्मणा** = आफ्ना क्रूर दुष्कर्महरूका कारणले
**पुरुषादैश्च** = मान्छेको मासु खाने राक्षसहरूद्वारा पनि
**गर्ह्यम्** = अत्यन्त घृणा गरिएको
**मच्छूलविभिन्नदेहम्** = मेरो त्रिशूलद्वारा शरीर छिन्नभिन्न भएको
**कृच्छ्रेण** = कठिनाइले (मर्नेछस्)
**अस्पृष्टवह्निं** = मृत्युपछि घृणाले आगोले पनि शरीर छुन नचाहने
**त्वां** = तँ पापीलाई
**गृध्राः** = गिद्धहरूले
**समदन्ति** = मजाले खानेछन्

**वाक्यार्थ–** लज्जा, ऐश्वर्य, दया र कीर्ति आदि सद्गुणहरूले रहित तेरा यस्ता कुकर्मलाई त मान्छेको मासु खाने राक्षसले समेत निन्दा गर्दछन्। अब मेरो त्रिशूलले छियाछिया भएर तड्पी-तड्पी मरेको तेरो लाशलाई घृणाले गर्दा आगोले समेत छुनेछैन र गिद्धहरूले तेरो शरीरको मासु लुछीलुछी खानेछन्।

**अन्येऽनु ये त्वेह नृशंसमज्ञा ये ह्युद्यतास्त्राः प्रहरन्ति मह्यम्।**
**तैर्भूतनाथान् सगणान्निशातत्रिशूलनिर्भिन्नगलैर्यजामि ॥ १७ ॥**

**पदार्थ–**
**इह** = यो रणभूमिमा
**अन्ये** = अरू
**ये ये** = ज-जसले
**अज्ञाः** = तेरो भयानक अपराध र त्यसको परिणामलाई नबुझेर
**नृशंसं** = नीच कर्म गर्ने
**त्वा अनु** = तेरो साथ लागी
**उद्यतास्त्राः** = अस्त्र-शस्त्र उठाई
**मह्यम्** = ममाथि
**प्रहरन्ति** = प्रहार गर्दछन्
**तैः** = ती-ती
**निशातत्रिशूलनिर्भिन्नगलैः** = अति तिखो त्रिशूलद्वारा गर्धन छिनाइएका देवताहरूद्वारा पनि
**सगणान्** = गण सहितका
**भूतनाथान्** = भगवान् भूतनाथलाई
**यजामि** = बलि अर्पण गर्नेछु

**वाक्यार्थ–** यी अज्ञानी देवताहरू तेरो भयानक अपराध र त्यसको परिणामलाई नबुझेर तँजस्ता पापी र हिंस्रकको पछि लागेर यस रणभूमिमा ममाथि विभिन्न प्रकारका शस्त्रास्त्रहरूले प्रहार गरिरहेका छन्। म अब आफ्नो तिखो त्रिशूलले यी देवताहरूको टाउका काटेर तिनै टाउकाहरूद्वारा गणसहित भएका भगवान् भूतनाथलाई बलि अर्पण गर्नेछु।

**विवरण–** माथिका चार श्लोकहरूमा वृत्रासुरले आफ्नो सहज वीरताको र इन्द्रसँग प्रतिशोध लिने कुराको अभिव्यक्ति वीरकै भाषाले गरेको छ र इन्द्रको जघन्य अपराधलाई धिक्कार्नसम्म धिक्कारेको छ। शत्रुहरूलाई गाली गरेको वर्णन जतासुकै पाइन्छ तर यति आत्मविश्वासपूर्वक उसका कुकृत्यहरूलाई धिक्कार्नु सबैबाट सम्भव छैन। जो व्यक्ति आफूले गल्ती गर्दैन उसले मात्र यस्ता आत्मविश्वासका वचनहरू बोल्न सक्दछ। यहाँ वृत्रासुरले आफ्ना दाइ विश्वरूपलाई इन्द्रले मार्न नहुनेमा निम्नानुसारका विशेष कारणहरू देखाएको छ। ती हुन्–

जो व्यक्तिहरू पाप र दुराचारले रहित छन् त्यस्ता व्यक्तिहरूलाई मार्नु ठुलो अपराध हो। दीक्षित अर्थात् यज्ञ, याग या अन्य कुनै सत्कर्ममा दीक्षा लिएर बसेको वेला आफ्नो प्रबल शत्रु भए पनि उसलाई मार्नु हुँदैन। वेदपाठी द्विजातिलाई कुनै पनि हालतमा मार्नु हुँदैन। आत्मज्ञानीले

आफूभित्र अभिन्न रूपले सम्पूर्ण संसारलाई साक्षात्कार गरेको हुने हुनाले उसलाई मार्दा परमात्मालाई नै मारेसमान हुन जान्छ। जो आफ्नो उद्धार गर्न तयार रहन्छ त्यस्ता गुरुलाई नै मार्नु ज्यादै ठुलो अपराध हो।

इन्द्रादि देवताहरूले तपस्यामा लागेका विश्वरूपलाई आफैँले विश्वास दिलाई गुरु बनाएका थिए। पहिले विश्वास दिलाई पछि उसलाई मार्नु अर्को अपराध हो। यसप्रकार यहाँ वृत्रासुरले इन्द्रलाई अपराधबोधले गलाउने प्रयास गरेको छ।

**अथो हरे मे कुलिशेन वीर हर्ता प्रमथ्यैव शिरो यदीह।**

**तत्रानृणो भूतबलिं विधाय मनस्विनां पादरजः प्रपत्स्ये॥ १८॥**

**पदार्थ–**
**हरे** = हे इन्द्र
**वीर** = हे प्रचण्ड वीर
**अथो** = अथवा
**यदि** = यदि
**प्रमथ्य** = मेरा सारा सेनाहरूको दमन–विनाश गरेर
**एव** = नै
**इह** = यही संग्रामभूमिमा
**कुलिशेन** = वज्रद्वारा
**मे** = मेरो
**शिरः** = शिरलाई
**हर्ता** = यदि छिनाइस् भने पनि
**तत्र** = त्यो अवस्थामा
**भूतबलिं** = आफ्नो शरीरद्वारा पशुपन्छी आदिलाई सन्तुष्ट
**विधाय** = बनाएर
**अनृणः** = कर्मबन्धनबाट छुटेर म
**मनस्विनां** = महापुरुषहरूको
**पादरजः** = चरणरज भएको ठाउँ (परमात्मस्वरूप)मा
**प्रपत्स्ये** = पुग्नेछु

**वाक्यार्थ–** हे वीर इन्द्र! तैँले यस युद्धस्थलमा कुनै उपायले मेरा सेनालाई छिन्नभिन्न गरेर आफ्नो वज्रले मेरो टाउको काटिस् भने पनि आफ्नो शरीरद्वारा पशुपन्छी आदिलाई सन्तुष्ट बनाएर एवं समस्त कर्मबन्धनबाट मुक्त भएर म महापुरुषहरूको चरणरज भएको ठाउँ (परमात्मस्वरूप)मा जानेछु।

**विवरण–** वृत्रासुर केवल प्रबल पराक्रमी वीर मात्र थिएन ऊ सत्यनिष्ठ र भगवान्‌को भक्त समेत थियो। ऊ यो युद्धमा के परिणाम हुँदैछ भन्ने अन्तर्यामी परमात्माको इच्छालाई बुझ्दथ्यो। भगवदिच्छालाई बुझे तापनि सामान्य प्राणीहरू त्यसप्रति विद्रोह गर्न तम्सन्छन् र भगवान्प्रति समर्पित हुँदैनन्। जघन्य अपराधी र आफ्ना सहज शत्रु इन्द्रकै जित हुँदैछ र आफ्नो हार हुँदैछ भन्ने बुझेर पनि वृत्रको भगवान्प्रति विद्वेषभाव जागृत नभएर आदरभाव नै रहेको छ। यसलाई स्वीकारभाव भनिन्छ। परमात्माको इच्छाले जे हुन्छ, आफ्नो हित वा अहित लाग्ने जे कुरा हुन्छ ती सबै कुरा समान रूपले स्वीकार गर्न उत्तम भक्त र ज्ञानीहरूले मात्र सक्छन्।

**सुरेश कस्मान्न हिनोषि वज्रं पुरः स्थिते वैरिणि मय्यमोघम्।**

**मा संशयिष्ठा न गदेव वज्रं स्यान्निष्फलं कृपणार्थेव याच्ञा॥ १९॥**

**पदार्थ–**
**सुरेश** = हे देवराज इन्द्र
**पुरः** = अगाडि
**स्थिते** = उपस्थित
**मयि** = म
**वैरिणि** = शत्रुमाथि

**कस्मात्** = किन
**अमोघम्** = कहिल्यै व्यर्थ नहुने
**वज्रं** = वज्र
**न हिनोषि** = प्रहार गर्दैनस्
**कृपणार्थ्या** = कञ्जुस व्यक्तिसँग गरिएको
**याच्ञा** = याचनासमान (व्यर्थ होला कि भनी)
**मा संशयिष्ठाः** = शङ्का नगर् किनभने
**गदा इव** = गदाप्रहार झैँ
**वज्रः** = वज्रप्रहार
**निष्फलं** = व्यर्थ
**न स्यात्** = हुनेछैन

**वाक्यार्थ–** हे देवराज इन्द्र ! आफ्नै अगाडि उपस्थित शत्रु ममाथि आफ्नो अमोघ वज्र किन प्रहार गर्दैनस् ? कञ्जुस व्यक्तिसँग गरिएको याचना झैँ वज्रप्रहार पनि व्यर्थ हुने हो कि भनी शङ्का नगर् किनभने वज्रप्रहार गदाप्रहार झैँ निष्फल हुनेछैन।

**नन्वेष वज्रस्तव शक्र तेजसा हरेर्दधीचेस्तपसा च तेजितः।**
**तेनैव शत्रुं जहि विष्णुयन्त्रितो यतो हरिर्विजयः श्रीर्गुणास्ततः॥ २०॥**

पदार्थ–
**शक्र** = हे इन्द्र
**ननु** = निश्चय नै
**तव** = तेरो
**एषः वज्रः** = यो वज्र
**हरेः** = भगवान् श्रीहरिको
**तेजसा** = तेजद्वारा र
**दधीचेः** = दधीचि ऋषिको
**तपसा** = तपस्याबाट समेत
**तेजितः** = अत्यन्त तेजिलो भएको छ
**विष्णुयन्त्रितः** = विष्णु भगवान्ले निर्देशन दिएअनुसार
**तेन एव** = त्यही वज्रद्वारा नै
**शत्रुं** = आफ्नो शत्रु मलाई
**जहि** = मारिहाल्, किनभने
**यतः** = जुन पक्षतिर
**हरिः** = भगवान् श्रीहरि र उहाँको मङ्गलमय इच्छा रहन्छ
**ततः** = त्यसैतर्फ नै
**विजयः** = विजय
**श्रीः** = सम्पत्ति र
**गुणाः** = अरू सम्पूर्ण गुणहरूसमेत रहन्छन्

**वाक्यार्थ–** हे इन्द्र ! तेरो यो वज्र भगवान् श्रीहरिको तेज र दधीचिको तपस्याको प्रभावले शक्तिशाली भइरहेको छ। भगवान् विष्णुले मलाई मार्ने आज्ञा तँलाई दिइसक्नुभएको छ। तसर्थ अब छिट्टै यही वज्रले आफ्नो शत्रु मलाई मारिहाल् किनभने जहाँ स्वयं भगवान् विष्णु हुनुहुन्छ त्यहीँ नै विजय, सम्पत्ति र अन्य सम्पूर्ण गुणहरू रहन्छन्।

**अहं समाधाय मनो यथाह सङ्कर्षणस्तच्चरणारविन्दे।**
**त्वद्वज्ररंहोलुलितग्राम्यपाशो गतिं मुनेर्याम्यपविद्धलोकः॥ २१॥**

पदार्थ–
**अहं** = म
**सङ्कर्षणः** = भगवान् सङ्कर्षणले
**यथा** = जे-जे
**आह** = आज्ञा दिनुभएको थियो (त्यहीअनुसार)
**तच्चरणारविन्दे** = उहाँको चरणकमलमा
**मनः** = मनलाई
**समाधाय** = एकाकार बनाएर
**त्वद्वज्ररंहोलुलितग्राम्यपाशः** = तेरो वज्रको वेगद्वारा सांसारिक विषयभोगको बन्धनलाई छिनाउँदै
**अपविद्धलोकः** = यस शरीरलाई समेत यहीँ छोडेर
**मुनेः** = परम ज्ञानी मुनिहरूले पाउने
**गतिं** = भगवत्स्वरूप गतिलाई
**यामि** = प्राप्त गर्नेछु

**वाक्यार्थ–** हे इन्द्र ! अब म भगवान् सङ्कर्षणले मलाई जस्तो उपदेश गर्नुभएको छ त्यसै अनुसार आफ्नो मनलाई उहाँकै चरणमा लगाउनेछु। तेरो वज्रको वेगले विषयभोगरूपी बन्धन काटिएपछि म यस शरीरलाई त्यागेर परम ज्ञानी मुनिहरूले पाउने गति प्राप्त गर्नेछु।

**विवरण–** माथिका तीन श्लोकमा इन्द्रलाई जितेर बाँच्नुभन्दा लडाइँमा मर्नु नै आफ्नो लागि कल्याणकारक भएको वृत्रको बुझाइ छ। उसको प्रबल निश्चय के छ भने जतापट्टि भगवान्को इच्छा रहन्छ त्यतैपट्टि विजय, श्री र अन्य गुणहरू रहन्छन्। एकचोटिको आफ्नो गदाको प्रहार व्यर्थ भइसकेकाले निरास भई बसेका इन्द्रलाई वृत्रले वज्रप्रहार गर्न उक्साउनु र त्यसको महत्त्व सुनाई उनमा साहसको सञ्चार गर्न खोज्नुले यस कुराको पुष्टि हुन्छ। इन्द्रको वज्रद्वारा मर्न चाहनुको स्पष्टीकरण पनि उसले दिएको छ। जसरी पासोमा परेको चरा कसैले पासो काटी आफूलाई त्यसबाट छुटाइदेओस् भन्ने चाहन्छ त्यसै गरी वज्रप्रहारद्वारा ग्राम्यपाश अर्थात् विषयभोगका आकांक्षाहरूलाई छिनाई भगवत्स्वरूपमा पुग्ने छटपटी वृत्रलाई देखिन्छ।

**पुंसां किलैकान्तधियां स्वकानां याः सम्पदो दिवि भूमौ रसायाम्।**
**न राति यद् द्वेष उद्वेग आधिर्मदः कलिर्व्यसनं सम्प्रयासः॥ २२॥**

**पदार्थ–**
**एकान्तधियां** = केवल भगवान्को मात्र चिन्तन गर्ने
**स्वकानां** = आफ्ना अत्यन्त प्रिय
**पुंसां** = प्राणीहरूका लागि (भगवान्ले)
**दिवि** = स्वर्गमा
**भूमौ** = पृथिवीमा र
**रसायाम्** = रसातलमा
**याः** = जति पनि
**सम्पदः** = सम्पत्तिहरू छन्, ती कुनै पनि
**किल** = निश्चय नै
**न राति** = दिनुहुन्न
**यत्** = किनभने (तिनीहरूबाट)
**द्वेषः** = शत्रुता
**उद्वेगः** = चिन्ता
**आधिः** = मानसिक पीडा
**मदः** = घमण्ड
**कलिः** = झगडा
**व्यसनं** = अनेक कष्ट र
**सम्प्रयासः** = कडा परिश्रम मात्र मिल्न सक्छ

**वाक्यार्थ–** आफूमा अनन्य प्रेम गर्ने भक्तलाई भगवान्ले स्वर्ग, पृथिवी र पातालका कुनै पनि सम्पत्ति दिनुहुन्न किनभने ती सम्पत्तिबाट परमानन्द प्राप्त हुनुको सट्टा शत्रुता, चिन्ता, मानसिक पीडा, घमण्ड, कलह, दुःख, क्लेश र कडा परिश्रम मात्र भइरहन्छन्।

**त्रैवर्गिकायासविघातमस्मत्पतिर्विधत्ते पुरुषस्य शक्र।**
**ततोऽनुमेयो भगवत्प्रसादो यो दुर्लभोऽकिञ्चनगोचरोऽन्यैः॥ २३॥**

**पदार्थ–**
**शक्र** = हे इन्द्र
**अस्मत्पतिः** = हाम्रा स्वामीले
**पुरुषस्य** = आफ्नो आश्रयमा आउने प्राणीको
**त्रैवर्गिकायासविघातम्** = धर्म, अर्थ र कामका झन्झटहरूको विनाश
**विधत्ते** = गरिदिनुहुन्छ र
**ततः** = त्यही सम्पत्ति आदिको नाशद्वारा नै
**भगवत्प्रसादः** = भगवान् प्रसन्न हुनुभएछ भन्ने कुराको
**अनुमेयः** = अनुमान गर्न सकिन्छ
**अकिञ्चनगोचरः** = निष्किञ्चन भक्तहरूले मात्र अनुभव गर्न सक्ने

**यः** = जुन भगवान्को प्रसन्नता
**अन्यैः** = अरू तँजस्ता विषयमा आसक्त व्यक्तिहरूद्वारा
**दुर्लभः** = पाउन सकिँदैन

**वाक्यार्थ—** हे इन्द्र ! भगवान्ले आफ्ना भक्तका धर्म, अर्थ र कामसम्बन्धी सबै समस्याहरू नाश गरिदिनुहुन्छ। यसैबाट भगवान्को कृपाको अनुमान हुन्छ। यस्तो भगवत्कृपा त केवल अकिञ्चन भक्तहरूलाई मात्र प्राप्त हुन्छ। अरूका निम्ति त यो अत्यन्त दुर्लभ छ।

**विवरण—** माथिका दुई श्लोकमा वृत्रले भगवान्को कृपाको रहस्यपूर्ण विवेचन गरेको छ। भगवान्ले जो आफ्ना एकान्तभक्त हुन्छन् तिनीहरूलाई यो लोक अथवा परलोकका कुनै पनि विषयभोग, सम्पत्तिहरू दिनुहुन्न। आफ्ना भक्तहरूलाई त उहाँले झन् समृद्ध र सुखी पार्नुपर्ने हो। किन सम्पत्ति दिनुहुन्न ? भन्ने शङ्काको उत्तर के हो भने ती सम्पत्ति, वैभव र समृद्धिबाट मानिसहरू शान्त र प्रसन्न बन्न सक्दैनन्। उनीहरू झन् उद्विग्न र विक्षिप्त बन्दछन्। सम्पत्ति भएपछि त्यसको चिन्ता स्वतः नै भइहाल्दछ। कसैले आफूभन्दा बढी सम्पत्ति कमायो भने त्यसप्रति ईर्ष्या पनि हुन सक्दछ। बृहदारण्यकोपनिषद् (२/४/२)मा याज्ञवल्क्यले भनेका छन्— **अमृतस्य तु नाशास्ति वित्तेन**। सम्पत्ति परम सुख प्राप्त गर्ने साधन होइन, यसद्वारा त सुखको आशा पनि गर्न सकिन्न। मैत्रेयीले याज्ञवल्क्यलाई भनेकी छन्— 'त्यस्तो सम्पत्ति लिएर म के गरूँ, जसबाट म अमृतत्व पाउन सक्दिनँ' (बृहदारण्यकोपनिषद्, २/४/३)। सम्पत्तिले त सुखको आशमा मानिसलाई झुक्याउँदै झन् अशान्त बनाइदिन्छ। त्यसैले भगवान् सच्चा रूपले प्रसन्न हुनुभएको तब थाहा पाइन्छ, जब धर्म, अर्थ र कामका सम्पूर्ण झन्झटहरू समाप्त हुन्छन्। त्रैवर्गिक पदले धर्म, अर्थ र कामलाई लिनुपर्दछ। त्यसबाट हुने झन्झट तिनलाई भोगेर पाइने सुखभन्दा धेरै छ। वृत्रासुर भन्छ— हे इन्द्र ! तँलाई लागेको होला, भगवान्ले मेरो पक्ष लिएर मलाई स्वर्गको राजा बनाउने हुनुभयो, वृत्रासुरलाई मार्ने हुनुभयो। तर हेर्, मेरा भगवान्ले त मेरै पो कल्याण र परमहित गर्दै हुनुहुन्छ। यो कुरा तँलाई थाहै छैन। त्रिलोकको राज्य सञ्चालनको दुःखबाट म मुक्त हुने भएँ। सनातन आनन्दलाई प्राप्त गरी कृतकृत्य रहने मेरो इच्छा पूरा हुने भयो। तँ चाहिँ त्यही झन्झटिलो दलदलमा फस्ने भइस्। तँजस्ता संसारी, जो भगवान्को भजन गरी केही पाउन खोज्छन् त्यस्तामाथि भगवान्को यो परम अनुग्रह कहिल्यै प्रकट हुँदैन। वृत्रासुरका यी भनाइहरूमा परमात्माप्रतिको पूर्ण विश्वास, दृढ भक्ति, आत्मशक्ति र प्रबल वैराग्यको झल्को पाइन्छ।

**अहं हरे तव पादैकमूलदासानुदासो भवितास्मि भूयः।**
**मनः स्मरेतासुपतेर्गुणांस्ते गृणीत वाक् कर्म करोतु कायः॥ २४॥**

**पदार्थ—**
**हरे** = हे अज्ञान आदि समस्त भन्झटहरूलाई नाश गरिदिने प्रभु
**अहं** = म
**भूयः** = अरू-अरू जन्ममा पनि
**तव** = हजुरको
**पादैकमूलदासानुदासः** = चरणको सेवा गर्ने अनन्य भक्तहरूको सेवक
**भविता अस्मि** = भइरहन सकूँ
**मनः** = मेरो मनले
**असुपतेः** = प्राणप्यारा
**ते** = हजुरको
**गुणान्** = परम कल्याणकारी गुणहरूलाई
**स्मरेत** = सधैँ सम्झिरहोस् अनि
**वाक्** = वाणीले पनि
**गृणीत** = हजुरकै गुणहरूको गान गरिरहोस् भने

**कायः** = शरीरले समेत | **कर्म** = हजुरकै सेवारूप कर्म | **करोतु** = गरिरहोस्

**वाक्यार्थ–** हे प्रभु ! मलाई अर्को जन्ममा हजुरका चरणका सेवक भक्तहरूको दास भएर रहने सुअवसर प्राप्त होस्। मेरो मनले प्राणप्रिय हजुरकै गुणको चिन्तन गरिरहोस्। वाणीले हजुरकै गुण गान गरिरहोस् र सम्पूर्ण शरीर हजुरकै सेवामा लागिरहोस्।

**न नाकपृष्ठं न च पारमेष्ठ्यं न सार्वभौमं न रसाधिपत्यम्।**
**न योगसिद्धीरपुनर्भवं वा समञ्जस त्वा विरहय्य काङ्क्षे॥ २५॥**

**पदार्थ–**
**समञ्जस** = हे सम्पूर्ण सौभाग्यका स्रोत हुनुभएका प्रभु (म)
**नाकपृष्ठं** = स्वर्गलोक
**न** = चाहन्नँ
**पारमेष्ठ्यं च** = ब्रह्माजीको पद
पनि **न** = मलाई चाहिँदैन
**सार्वभौमं** = सम्पूर्ण भूमण्डलको राज्य
**न** = चाहिँदैन
**रसाधिपत्यम्** = रसातलको आधिपत्य
**न** = चाहिँदैन
**त्वा** = हजुरलाई
**विरहय्य** = छोडेर प्राप्त हुने कुनै
**योगसिद्धीः** = योगका सिद्धिहरू एवं
**अपुनर्भवं वा** = मोक्षसमेतका अमूल्य पदार्थ पनि
**न काङ्क्षे** = म चाहन्नँ

**वाक्यार्थ–** हे सम्पूर्ण सौभाग्यका स्रोत हुनुभएका प्रभु ! हजुरलाई छाडेर मलाई स्वर्ग, ब्रह्मलोक, भूमण्डलको साम्राज्य, रसातलको आधिपत्य, योगका सिद्धिहरू अथवा मोक्षसमेतका अरू कुनै पनि पदार्थको इच्छा छैन।

**अजातपक्षा इव मातरं खगाः स्तन्यं यथा वत्सतराः क्षुधार्ताः।**
**प्रियं प्रियेव व्युषितं विषण्णा मनोऽरविन्दाक्ष दिदृक्षते त्वाम्॥ २६॥**

**पदार्थ–**
**अजातपक्षाः** = प्वाँख नउम्रिएका
**खगाः** = चराका स-साना बचेराहरूले कुनै कष्ट पर्दा
**मातरं इव** = आफ्नी आमालाई जसरी खोज्छन्
**क्षुधार्ताः** = भोकले आकुल-व्याकुल भएका
**वत्सतराः** = स-साना बाच्छाहरूले
**यथा** = जसरी
**स्तन्यं** = आमाको दुध पिउन खोज्छन् अथवा
**विषण्णा** = लामो वियोगका कारणले कामासक्त भएकी
**प्रिया** = प्रियाले
**व्युषितं** = परदेशमा गएको
**प्रियं इव** = आफ्नो प्रियलाई जसरी सम्झिन्छिन्
**अरविन्दाक्ष** = हे कमलनयन प्रभु
**मनः** = मेरो मन पनि
**त्वाम्** = हजुरलाई
**दिदृक्षते** = हेर्न खोजिरहेको छ

**वाक्यार्थ–** हे कमलनयन प्रभु ! जसरी प्वाँख नउम्रेका चराका बचेराहरू भोकले आत्तिएर आमाको प्रतीक्षा गरिरहन्छन्, जसरी भोका बाच्छाहरू आमाको दुध चुस्नका लागि उत्सुक रहन्छन् र जसरी कामासक्त भएकी प्रिया परदेशमा गएको आफ्नो प्रियलाई भेट्न उत्कण्ठित रहन्छे त्यसै गरी तीन तापले पीडित, कर्मबन्धनले बाँधिएको र काम आदिले सताइएको मेरो मन पनि हजुरको दर्शनका लागि छट्पटाइरहेको छ।

**ममोत्तमश्लोकजनेषु सख्यं संसारचक्रे भ्रमतः स्वकर्मभिः।**
**त्वन्माययात्मात्मजदारगेहेष्वासक्तचित्तस्य न नाथ भूयात्॥ २७॥**

| | | |
|---|---|---|
| **पदार्थ—** | **मम** = मेरो | **त्वन्मायया** = हजुरकी मायाद्वारा |
| **नाथ** = हे नाथ | **उत्तमश्लोकजनेषु** = पवित्रकीर्ति भएका भगवान्का प्यारा भक्त सज्जनहरूसँग | **आत्मात्मजदारगेहेषु** = अनित्य शरीर, पुत्र, पत्नी र घर आदिमा |
| **स्वकर्मभिः** = आफ्ना अनन्त पुण्य र पापकर्महरूका कारण | **सख्यं** = मित्रताको सम्बन्ध | **आसक्तचित्तस्य** = चित्त आसक्त भएका संसारी प्राणीसँग |
| **संसारचक्रे** = संसारको चक्रमा नै | **भूयात्** = होस् तर | **न** = कहिल्यै सम्बन्ध नहोस् |
| **भ्रमतः** = बारम्बार घुमिरहने | | |

**वाक्यार्थ—** हे नाथ! आफ्ना अनन्त पुण्य र पापकर्महरूका कारण संसारचक्रमा घुमिरहनु परे तापनि मेरो हजुरका प्रिय भक्तहरूसँग मित्रता भइरहोस् तर हजुरकी त्रिगुणात्मिका मायाले मोहित भएर पुत्र, पत्नी, शरीर, सम्पत्ति आदिमा आसक्त रहने संसारी मानिससित कुनै प्रकारको सम्बन्ध नहोस्।

**विवरण—** माथिका चार श्लोकहरूमा वृत्रले भगवान्को भावपूर्ण स्तुति गरेको छ। लडाइँको बीचमा भगवान्को विषयमा कुराकानी गर्दागर्दै वृत्रको चित्त भगवान्मा पूरै तन्मय भयो। आफ्ना हृदयमा सधैँ प्रकट रहने प्रभु मानौँ प्रत्यक्ष आफ्नो अगाडि देखिनुभए झैँ उसले भगवान्को प्रार्थना गरेको छ। उसले भगवान्लाई सकेसम्म कोमल पदावलीले स्तुति गरेको छ।

वृत्रको मनले कुनै वस्तु नचाहीकन केवल भगवान्लाई मात्र चाहेको छ। जसरी प्वाँख नउम्रिएका चराका बचेराहरू आफ्नो आमाबाबु चारा खोज्न बाहिर गएको बखत उल्लू, बाज आदिबाट पीडित हुँदा अत्यन्त चिच्याहट र उत्कण्ठाका साथ आमाको खोजी गर्दछन् त्यसै गरी तीन तापहरूबाट अत्यन्त पीडित बनिरहेको वृत्रको मनले पनि उत्कण्ठित भएर भगवान्को खोजी गरिरहेको छ। जसरी भोकले अत्यन्त व्याकुल बनेका बाच्छाबाच्छीहरू आफ्नी आमा वनबाट फर्केर आएपछि दाम्लोबाट फुत्किएर दुध पिउन लालायित हुन्छन् त्यसै गरी वृत्रको कर्महरूको बन्धनमा बाँधिएको मन त्यहाँबाट फुत्किई भगवान्लाई भेट्न लालायित छ। अनि विदेश गएको प्रियलाई कहिले भेटौँला भन्ने कामनाबाट अत्यन्त पीडित भइरहेकी प्रियाले जसरी प्रिय आउने दिन उनको व्यग्रतापूर्वक प्रतीक्षा गर्छिन् त्यसै गरी सांसारिक कामनाहरूले सताएर हैरान परेको वृत्रको मनले भगवान्सँगको मिलनलाई व्यग्रतापूर्वक पर्खिरहेको छ।

वृत्र भगवान्सँग भन्दछ— भगवान्! आफ्ना आसक्तियुक्त कर्महरूको कारणले संसारमा बारम्बार मेरो जन्म भइ नै रहला। म हजुरलाई आफ्नो कर्मबन्धन छिनाइदिने प्रार्थना गर्दा पनि गर्दिनँ र यसको म योग्य पनि छैन। म हजुरको मायाद्वारा शरीर, पुत्र, पत्नी, घर आदिमा स्वतः आसक्त छँदैछु। यदि हजुर कृपा गर्नुहुन्छ भने कर्मका कारणले संसारमा घुमिरहँदा पनि म यी पतनकारी विषयहरूको आसक्तिमा नफसूँ, बरु मलाई भक्तहरूको नै सङ्गत मिलोस्। आफ्नो कर्मबन्धन नाश गरेर मोक्षप्रदान गर्न समेत भगवान्सँग प्रार्थना नगर्ने वृत्रको भक्ति अत्यन्त

उच्चकोटिको देखिन्छ। भगवद्गीतामा बताइएका चारथरी भक्तहरूमध्ये ज्ञानी भक्तले मात्र मोक्षको पनि कामना नराखेर भगवान्‌को भक्ति गर्न सक्दछ। प्रेमलक्षणा भक्तिमा पुगेका ती जीवन्मुक्त व्यक्तिहरू मात्र भगवान्‌को दिव्य प्रेममा यसप्रकार डुब्न सक्छन्। आफ्नो पूर्वजन्मको कल्मष राक्षस भई जन्मँदा पूरा निवृत्त भई वृत्रको हृदयमा ज्ञानको प्रकाश उदित भइसकेको भान हुन्छ। वृत्र मृत्युपछि **अलोकं समपद्यत** अर्थात् भगवान्‌कै स्वरूपमा मिल्यो भनी उसको विदेहमुक्तिको वर्णन श्रीमद्भागवत (६/१२/३५)मैं गरिएको छ। पूर्ण ज्ञान भइसकेकाले ऊ मृत्युपछि वैकुण्ठ आदि कुनै लोकमा पुगेन, अपितु यही ब्रह्मरूपतालाई उसले प्राप्त गऱ्यो। यसप्रकार ज्ञानी भक्तहरूको निश्छल प्रेमको उदात्तता वृत्रमा देखिन्छ।

**इति श्रीमद्भागवते महापुराणे पारहंस्यां संहितायां षष्ठस्कन्धे**

**वृत्रस्येन्द्रोपदेशो नामैकादशोऽध्यायः ॥ ११ ॥**

# अथ द्वादशोऽध्यायः

## वृत्रासुरको वध

**ऋषिरुवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं जिहासुर्नृप देहमाजौ मृत्युं वरं विजयान्मन्यमानः ।**
**शूलं प्रगृह्याभ्यपतत् सुरेन्द्रं यथा महापुरुषं कैटभोऽप्सु ॥ १ ॥**

| | | |
|---|---|---|
| **पदार्थ—** | **मृत्युं** = आफ्नो मृत्युलाई | विष्णुलाई मार्न दगुरेथ्यो त्यसरी |
| **नृप** = हे महाराज | **वरं** = श्रेष्ठ | नै |
| **एवं** = यसप्रकार | **मन्यमानः** = मानेको वृत्रासुरले | **शूलं** = त्रिशूल |
| **आजौ** = युद्धभूमिमा नै | **यथा** = जसरी | **प्रगृह्य** = हातमा लिएर |
| **देहम्** = आफ्नो शरीरलाई | **अप्सु** = प्रलय कालको जलमा | **सुरेन्द्रं** = इन्द्रलाई मार्न |
| **जिहासुः** = छोड्न चाहँदै | **कैटभः** = कैटभ नामक दैत्यले | **अभ्यपतत्** = वेगले दौडियो |
| **विजयात्** = जितभन्दा | **महापुरुषं** = महापुरुष भगवान् | |

**वाक्यार्थ—** यसरी विजय प्राप्त गर्नुको सट्टा मृत्युलाई नै श्रेष्ठ सम्झने त्यस वृत्रासुरले युद्धभूमिमा नै आफ्नो शरीर त्याग्ने चाहनाले जसरी प्रलयकालको जलमा कैटभ नामक दैत्य भगवान् विष्णुमाथि प्रहार गर्न दगुरेथ्यो त्यसै गरी आफ्नो त्रिशूल उचालेर इन्द्रमाथि आक्रमण गर्न वेगले दौडियो ।

**ततो युगान्ताग्निकठोरजिह्वमाविध्य शूलं तरसासुरेन्द्रः ।**
**क्षिप्त्वा महेन्द्राय विनद्य वीरो हतोऽसि पापेति रुषा जगाद ॥ २ ॥**

| | | |
|---|---|---|
| **पदार्थ—** | **शूलं** = आफ्नो त्रिशूललाई | गर्दै |
| **ततः** = त्यसपछि | **आविध्य** = फनफनी घुमाएर | **रुषा** = रिसले चूर भएर |
| **वीरः** = वीर | **महेन्द्राय** = इन्द्रलाई मार्नका | **पाप** = पापी इन्द्र |
| **असुरेन्द्रः** = दानवराज वृत्रासुरले | लागि | **हतः असि** = अब तँ मरिस् |
| **युगान्ताग्निकठोरजिह्वम्** = | **तरसा** = वेगपूर्वक | **इति** = यस्तो |
| प्रलयकालीन अग्निसमान | **क्षिप्त्वा** = प्रहार गरेर | **जगाद** = भन्यो |
| अत्यन्त तिखो टुप्पो भएको | **विनद्य** = चर्को स्वरले गर्जना | |

**वाक्यार्थ—** त्यसपछि वीर वृत्रासुरले प्रलयकालीन अग्निसमान अत्यन्त तिखो टुप्पो भएको आफ्नो त्रिशूललाई फनफनी घुमाएर वेगले इन्द्रमाथि प्रहार गर्‍यो र अति रिसाएर गर्जना गर्दै 'हे पापी इन्द्र ! अब तँ मरिस्' भन्यो ।

**ख आपतत् तद् विचलद् ग्रहोल्कवन्निरीक्ष्य दुष्प्रेक्ष्यमजातविक्लवः।**
**वज्रेण वज्री शतपर्वणाच्छिनद् भुजं च तस्योरगराजभोगम्॥ ३॥**

**पदार्थ–**
**दुष्प्रेक्ष्यम्** = देख्दै अत्यन्त भयङ्कर
**ग्रहोल्कवत्** = ग्रह र उल्काहरू घुमे झैँ
**विचलत्** = घुम्दै-घुम्दै
**खे** = आकाशमार्गमा
**आपतत्** = आफैँतर्फ आइरहेको
**तत्** = त्यो त्रिशूललाई
**निरीक्ष्य** = देखी
**अजातविक्लवः**= कत्ति नडराएका
**वज्री** = इन्द्रले
**शतपर्वणा** = सय आँखला भएको
**वज्रेण** = वज्रद्वारा (त्रिशूललाई र)
**तस्य** = त्यस वृत्रासुरको
**उरगराजभोगम्** = नागराज वासुकिको समान
**भुजं च** = विशाल भुजालाई समेत
**अच्छिनत्** = छिनाए

**वाक्यार्थ–** ग्रह र उल्का झैँ फनफनी घुम्दै आकाशबाट आफैँतिर आइरहेको त्यो भयङ्कर त्रिशूललाई देखेर पनि कत्ति नहड्बडाएका इन्द्रले आफ्नो सय आँखला भएको वज्रले त्रिशूललाई र वृत्रासुरको नागराज वासुकिजस्तो विशाल हातलाई समेत काटिदिए।

**छिन्नैकबाहुः परिघेण वृत्रः संरब्ध आसाद्य गृहीतवज्रम्।**
**हनौ तताडेन्द्रमथामरेभं वज्रं च हस्तान्न्यपतन्मघोनः॥ ४॥**

**पदार्थ–**
**छिन्नैकबाहुः** = एउटा हात छिनाइएको
**वृत्रः** = वृत्रासुरले
**संरब्धः** = अत्यन्त रिसाई
**गृहीतवज्रम्** = हातमा वज्र लिएका
**इन्द्रम्** = इन्द्रको नजिक
**आसाद्य** = पुगेर
**परिघेण** = आफ्नो परिघद्वारा
**हनौ** = च्यापुमा
**तताड** = जोडसँग प्रहार गऱ्यो
**अथ** = त्यसै गरी
**अमरेभं** = इन्द्रको वाहन ऐरावतलाई पनि प्रहार गऱ्यो
**मघोनः** = (वृत्रको प्रहारबाट अचेत झैँ भएका) इन्द्रको त
**हस्तात्** = हातबाट
**वज्रं च** = वज्र पनि
**न्यपतत्** = खस्यो

**वाक्यार्थ–** एउटा हात काटिनाले अत्यन्त रिसाएको वृत्रासुरले हातमा वज्र धारण गरेका इन्द्रको च्यापुमा र उनको वाहन ऐरावत हात्तीको टाउकोमा आफ्नो परिघद्वारा बेस्सरी प्रहार गऱ्यो। त्यस प्रहारबाट अचेत झैँ भएका इन्द्रको हातबाट वज्र नै खस्यो।

**वृत्रस्य कर्मातिमहाद्भुतं तत् सुरासुराश्चारणसिद्धसङ्घाः।**
**अपूजयंस्तत्पुरुहूतसङ्कटं निरीक्ष्य हा हेति विचुक्रुशुर्भृशम्॥ ५॥**

**पदार्थ–**
**वृत्रस्य** = वृत्रासुरको
**अतिमहाद्भुतं** = ज्यादै अद्भुत
**तत् कर्म** = त्यो पराक्रमलाई
**सुरासुराः** = देवता, दानव आदि
**चारणसिद्धसङ्घाः** = चारण र सिद्धहरूले समेत
**अपूजयन्** = साहसिक कार्य भनी प्रशंसा गरे (त्यसै गरी)

| | | |
|---|---|---|
| **तत्** = त्यो प्राणै जालाजस्तो | **निरीक्ष्य** = देखेर (देवताहरू) | **विचुक्रुशुः** = कराउन लागे |
| **पुरुहूतसङ्कटं** = इन्द्रमाथि आइपरेको सङ्कटलाई | **भृशम्** = बारम्बार | |
| | **हा हा इति** = हाहाकार गर्दै | |

**वाक्यार्थ–** वृत्रासुरको यो अद्भुत पराक्रमलाई देखेर सम्पूर्ण देवता, दानव, चारण, सिद्धगणहरूले उसको प्रशंसा गर्न लागे, साथै इन्द्रमाथि परेको सङ्कटलाई देखेर देवताहरू चर्को स्वरले बारम्बार हाहाकार गर्दै कराउन लागे।

**इन्द्रो न वज्रं जगृहे विलज्जितश्च्युतं स्वहस्तादरिसन्निधौ पुनः।**
**तमाह वृत्रो हर आत्तवज्रो जहि स्वशत्रुं न विषादकालः॥ ६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **विलज्जितः** = लाजले भुतुक्कै भएका | **वज्रं** = वज्रलाई | **हरे** = हे इन्द्र |
| **इन्द्रः** = इन्द्रले | **पुनः** = फेरि | **आत्तवज्रः** = हातमा वज्र लिएर |
| **अरिसन्निधौ** = शत्रुको अगाडि | **न जगृहे** = उठाएनन् (उनको त्यस्तो अवस्था देखी) | **स्वशत्रुं** = आफ्नो शत्रुलाई |
| **स्वहस्तात्** = आफ्नो हातबाट | **तम्** = ती इन्द्रलाई | **जहि** = मारिहाल् |
| **च्युतं** = खसेको | **वृत्रः** = वृत्रासुरले | **विषादकालः** = यो दुःख मानेर बस्ने समय |
| | **आह** = भन्यो | **न** = होइन |

**वाक्यार्थ–** आफ्नो शत्रुका अगाडि आफ्नो हातबाट खसेको वज्रलाई लाजले गर्दा इन्द्रले फेरि उठाउन सकेनन्। त्यसपछि लज्जित इन्द्रलाई पराक्रमी वृत्रासुरले 'हे इन्द्र ! छिट्टै वज्र उठाई आफ्नो शत्रुलाई मारिहाल्, यो दुःख मानेर बस्ने समय होइन' भन्दै सम्झाउन लाग्यो।

**युयुत्सतां कुत्रचिदाततायिनां जयः सदैकत्र न वै परात्मनाम्।**
**विनैकमुत्पत्तिलयस्थितीश्वरं सर्वज्ञमाद्यं पुरुषं सनातनम्॥ ७॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **उत्पत्तिलयस्थितीश्वरं** = जगत्को उत्पत्ति, पालन र संहार गर्ने | **विना** = छोडेर | **कुत्रचित्** = कहीँ कहीँ |
| **सर्वज्ञम्** = सर्वज्ञ | **वै** = निश्चय नै | **एकत्र** = कहिलेकाहीँ मात्र |
| **आद्यं पुरुषं** = पुराण पुरुष | **परात्मनाम्** = शरीरलाई म हुँ भन्ने | **जयः** = जित हुन्छ |
| **सनातनम्** = सनातन | **युयुत्सतां** = आपसमा लडाईं गर्ने | **सदा** = सधैँ |
| **एकं** = एक मात्र परमात्मालाई | **आततायिनां** = दुष्ट हत्याराहरूको | **न** = जित मात्र भइरहँदैन |

**वाक्यार्थ–** जगत्को उत्पत्ति, स्थिति र संहार गर्ने सर्वज्ञ र सनातन एक मात्र आदि पुरुष परमात्मालाई छाडेर देहाभिमानी दुष्टहरूको कहिलेकाहीँ मात्र विजय हुन्छ, सधैँ विजय हुँदैन।

**लोकाः सपाला यस्येमे श्वसन्ति विवशा वशे ।**

**द्विजा इव शिचा बद्धाः स काल इह कारणम् ॥ ८ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **विवशाः** = परवश भएका | **कालः** = सबैका मालिक |
| **शिचा** = जालद्वारा | **इमे** = यी सबै | भगवान् नै |
| **बद्धाः** = बाँधिएका | **सपालाः** = लोकपालहरूले सहित | **इह** = यो हाम्रो जय वा |
| **द्विजाः इव** = चराहरू झैँ | **लोकाः** = लोकहरू | पराजयमा |
| **यस्य** = जुन परमात्माको | **श्वसन्ति** = आफ्नो चेष्टा गर्दछन् | **कारणम्** = कारण हुनुहुन्छ |
| **वशे** = अधीनमा रहेर | **सः** = त्यस्ता | |

**वाक्यार्थ–** जालले बाँधिएका चराहरू झैँ विवश भएर लोकपाल सहितका यी सबै लोक जसको अधीनमा रही आ-आफ्नो कार्यमा लागेका छन् त्यही कालरूपी सर्वनियन्त्रक भगवान् नै हामी सबैको जय वा पराजयको मूल कारण हुनुहुन्छ।

**ओजः सहो बलं प्राणममृतं मृत्युमेव च ।**

**तमज्ञाय जनो हेतुमात्मानं मन्यते जडम् ॥ ९ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **अमृतं** = जीवन र | **जनः** = मनुष्य |
| **ओजः** = मानसिक साहस | **मृत्युम् च** = मृत्युको रूपमा | **जडम्** = जड |
| **सहः** = इन्द्रियहरूको सामर्थ्य | समेत रहने | **आत्मानं** = शरीरलाई नै |
| **बलं** = शारीरिक बल | **तं** = ती परमात्मालाई | **हेतुम्** = जय-पराजयको कारण |
| **प्राणम्** = प्राण | **अज्ञाय एव** = नजान्नाले नै | **मन्यते** = मान्दछ |

**वाक्यार्थ–** उनै कालरूप परमात्मा नै मनुष्यका साहस, सामर्थ्य, बल, प्राण, जीवन एवं मृत्युको समेत कारण हुनुहुन्छ तर मानिसहरू उहाँलाई नबुझेर जड शरीरलाई नै जय-पराजयको कारण सम्झन्छन्।

**यथा दारुमयी नारी यथा यन्त्रमयो मृगः ।**

**एवं भूतानि मघवन्नीशतन्त्राणि विद्धि भोः ॥ १० ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **यथा** = जसरी | **भूतानि** = सम्पूर्ण प्राणीहरू पनि |
| **भोः मघवन्** = हे इन्द | **यन्त्रमयः** = यन्त्रको | **ईशतन्त्राणि** = भगवान्को |
| **यथा** = जसरी | (खेलौनाको) | अधीनमा छन् भनी |
| **दारुमयी** = काठको | **मृगः** = मृग (पराधीन हुन्छन्) | **विद्धि** = बुझ |
| **नारी** = पुतली र | **एवं** = ठीक त्यसै गरी | |

**वाक्यार्थ–** हे इन्द्र ! जसरी कठपुतली र यन्त्रमय मृग आदि खेलौना नचाउनेकै अधीनमा हुन्छन् ठीक त्यसै गरी सम्पूर्ण प्राणीहरू कालरूप भगवान्को अधीनमा छन् भन्ने बुझ।

**पुरुषः प्रकृतिर्व्यक्तमात्मा भूतेन्द्रियाशयाः।**
**शक्नुवन्त्यस्य सर्गादौ न विना यदनुग्रहात्॥ ११॥**

**पदार्थ—**
**पुरुषः** = सांख्यप्रतिपादित निर्गुण पुरुष
**प्रकृतिः** = त्रिगुणात्मिका प्रकृति
**व्यक्तम्** = महत्तत्व
**आत्मा** = अहङ्कार
**भूतेन्द्रियाशयाः** = पञ्चमहाभूत, ज्ञानेन्द्रिय, कर्मेन्द्रिय र मन पनि
**यदनुग्रहात् विना** = जुन परमात्माको अनुग्रह नपाई
**अस्य** = यस संसारको
**सर्गादौ** = सृष्टि, स्थिति र संहार गर्न
**न शक्नुवन्ति** = समर्थ हुँदैनन्

**वाक्यार्थ—** भगवान्‌को कृपा नभईकन पुरुष, प्रकृति, महत्तत्त्व, अहङ्कार, पञ्चभूत, इन्द्रिय र अन्तःकरण यी कुनै पनि संसारको सृष्टि, स्थिति र संहार गर्नमा समर्थ हुँदैनन्।

**अविद्वानेवमात्मानं मन्यतेऽनीशमीश्वरम्।**
**भूतैः सृजति भूतानि ग्रसते तानि तैः स्वयम्॥ १२॥**

**पदार्थ—**
**एवं** = यसप्रकार (परमात्मालाई)
**अविद्वान् एव** = नजानेर नै मनुष्यले
**अनीशम्** = केही गर्न नसक्ने
**आत्मानं** = आफूलाई
**ईश्वरम्** = सबै थोक गर्न सक्ने
**मन्यते** = मान्दछ
**स्वयम्** = साक्षात् भगवान् नै
**भूतैः** = पिता, माता आदि निमित्त बनेका प्राणीहरूद्वारा
**भूतानि** = अरू प्राणीहरूलाई
**सृजति** = जन्माउनुहुन्छ र
**तैः** = ती बाघ, भालु आदि निमित्त बनेका प्राणीहरूद्वारा नै
**तानि** = ती जीवात्माहरूलाई
**ग्रसते** = संहार गर्नुहुन्छ

**वाक्यार्थ—** सर्वनियन्ता भगवान् नै हुनुहुन्छ भन्ने नबुझेको जीवले मात्र आफैँलाई कर्ता, भोक्ता मान्दछ। वास्तवमा भगवान्‌ले नै पिता, माता आदिलाई निमित्त बनाएर अन्य प्राणीहरूको सृष्टि र बाघ, भालु आदिलाई निमित्त बनाएर उनीहरूको विनाश गराउनुहुन्छ।

**आयुः श्रीः कीर्तिरैश्वर्यमाशिषः पुरुषस्य याः।**
**भवन्त्येव हि तत्काले यथानिच्छोर्विपर्ययाः॥ १३॥**

**पदार्थ—**
**यथा** = जसरी
**अनिच्छोः** = प्राणीले नचाहे पनि
**विपर्ययाः** = मृत्यु, दुष्कीर्ति आदि समस्याहरू प्राप्त हुन्छन् त्यसै गरी
**पुरुषस्य** = प्राणीले
**आशिषः** = मरिमेटेर चाहने
**आयुः** = दीर्घजीवन
**श्रीः** = सम्पत्ति
**कीर्तिः** = यश
**ऐश्वर्यम्** = सम्पन्नता इत्यादि
**याः** = जति पनि अनुकूल पदार्थहरू छन्, ती पनि
**हि** = निश्चय नै
**तत्काले** = त्यो समय आइसकेपछि
**भवन्ति एव** = हुन्छन् नै

**वाक्यार्थ—** जसरी नचाहँदा-नचाहँदै मान्छेलाई मृत्यु, दुष्कीर्ति आदि समस्याहरू प्राप्त हुन्छन्,

त्यसै गरी समय अनुकूल भएमा उसलाई दीर्घजीवन, सम्पत्ति, यश, ऐश्वर्य आदि सफलता प्राप्त हुन्छन्।

**तस्मादकीर्तियशसोर्जयापजययोरपि।**

**समः स्यात् सुखदुःखाभ्यां मृत्युजीवितयोस्तथा ॥ १४ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **सुखदुःखाभ्यां** = सुखदुःख मिल्दा | मृत्युमा समेत बुद्धिमान्ले |
| **तस्मात्** = त्यसैले | **अपि** = पनि र | **समः** = समान भावले |
| **अकीर्तियशसोः** = यश-अपयशमा | **तथा** = त्यसै गरी | **स्यात्** = रहनुपर्दछ |
| **जयापजययोः** = जित-हार हुँदा र | **मृत्युजीवितयोः** = जीवन र | |

**वाक्यार्थ–** यसरी सबै कुरा ईश्वराधीन भएकाले यश-अपयश, जय-पराजय, सुख-दुःख, जीवन-मृत्यु यी कुरामा ध्यान नदिई हर्ष-शोकलाई त्यागेर सधैँ समान भावले रहनुपर्दछ।

**सत्त्वं रजस्तम इति प्रकृतेर्नात्मनो गुणाः।**

**तत्र साक्षिणमात्मानं यो वेद स न बध्यते ॥ १५ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **प्रकृतेः** = प्रकृतिका हुन् | **आत्मानं** = आत्मालाई |
| **सत्त्वं** = सत्त्व | **आत्मनः न** = आत्माका होइनन् | **वेद** = जान्दछ |
| **रजः** = रज र | **यः** = जसले | **सः** = त्यो बुद्धिमान् व्यक्ति |
| **तमः इति** = तमसमेत | **तत्र** = ती अवस्थामा | **न बध्यते** = बन्धनमा पर्दैन |
| **गुणाः** = यी तीन गुणहरू | **साक्षिणम्** = साक्षी भएर रहने | |

**वाक्यार्थ–** सत्त्व, रज र तम यी तीन गुण प्रकृतिका हुन्, आत्माका होइनन्। अतः जसले आत्मालाई यी तीन गुणको साक्षी भनी बुझ्दछ त्यो व्यक्ति बन्धनमा पर्दैन।

**विवरण–** यस उपदेश प्रसङ्गले वृत्र पूर्ण ज्ञानी भएको पुष्टि गर्दछ। युद्धको बीचमा युद्धभूमिमैँ रहँदा उसले जीवन र मृत्युलाई समान देखेको छ। सत्त्व, रज र तमोगुण अनुसार प्रकृतिका कार्यहरू परिवर्तन भइरहन्छन् तर तिनको परिवर्तनले साक्षी आत्मा आफूलाई छुन नसक्ने उसको अनुभव छ। अझ ऊ इन्द्रलाई यी सबै उपदेश सुनाउँदैछ। भगवान्मा पूर्ण निर्भर ज्ञानीहरूको जीवन र मृत्युमा हुने समान दृष्टि वृत्रमा स्पष्ट नै देख्न सकिन्छ।

**पश्य मां निर्जितं शक्र वृक्णायुधभुजं मृधे।**

**घटमानं यथाशक्ति तव प्राणजिहीर्षया ॥ १६ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **वृक्णायुधभुजं** = तँद्वारा अस्त्र र | तापनि |
| **शक्र** = हे इन्द्र | हातसमेत काटिएको | **तव** = तेरो |
| **मृधे** = युद्धभूमिमा | **निर्जितं** = हारिसकेको भए | **प्राणजिहीर्षया** = प्राण लिने |

इच्छाले
**यथाशक्ति** = आफ्नो बचेखुचेको
शक्ति लगाई
**घटमानं** = प्रयास गरिरहेको
**मां** = मलाई पनि त
**पश्य** = हेर्

**वाक्यार्थ–** हे इन्द्र ! युद्धभूमिमा तँद्वारा अस्त्र र हात काटिएर पराजित भइसकेको भए तापनि तेरो प्राण लिने इच्छाले सकेसम्मको प्रयास गरिरहेको मलाई नै हेर्।

**प्राणग्लहोऽयं समर इष्वक्षो वाहनासनः।**

**अत्र न ज्ञायतेऽमुष्य जयोऽमुष्य पराजयः॥ १७॥**

**पदार्थ–**
**अयं** = यो
**समरः** = युद्ध भन्ने कुरा
**प्राणग्लहः** = प्राणको बाजी थापेर खेलिने एकप्रकारको जुवा नै हो
**इष्वक्षः** = यहाँ बाणहरू पासा हुन्, अनि
**वाहनासनः** = आ-आफ्ना वाहनहरू नै पासा फिँजाइने कपडाजस्ता हुन्
**अत्र** = यहाँ
**अमुष्य** = यसको
**जयः** = जित हुन्छ र
**अमुष्य** = यसको
**पराजयः** = हार हुन्छ भन्ने
**न ज्ञायते** = जान्न सकिँदैन

**वाक्यार्थ–** यो युद्ध भन्ने कुरो प्राणको बाजी थापेर खेलिने एकप्रकारको जुवा नै हो। जुन खेलमा बाणहरू पासाका रूपमा र वाहनहरू पासा फिँजाउने कपडारूपमा रहेका छन्। यस खेलमा यसको जित हुन्छ र यसको हार हुन्छ भनेर भन्न सकिँदैन।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इन्द्रो वृत्रवचः श्रुत्वा गतालीकमपूजयत्।**

**गृहीतवज्रः प्रहसंस्तमाह गतविस्मयः॥ १८॥**

**पदार्थ–**
**इन्द्रः** = इन्द्रले
**गतालीकम्** = कपटरहित
**वृत्रवचः** = वृत्रासुरको वचनलाई
**श्रुत्वा** = सुनेर
**गृहीतवज्रः** = हातमा वज्र लिएर
**अपूजयत्** = आदर गरे
**गतविस्मयः** = आश्चर्य नमानी
**प्रहसन्** = हँसिलो अनुहारले
**तम्** = त्यस वृत्रासुरलाई
**आह** = भने

**वाक्यार्थ–** यसप्रकारको वृत्रासुरको कपटरहित कुरा सुनेर इन्द्रले उसको आदर गरे। त्यसपछि वृत्रासुरले युद्धमा देखाएको धैर्यमा कुनै आश्चर्य नमानी हातमा वज्र लिएर हाँसी-हाँसीकन यसो भन्न लागे।

**इन्द्र उवाच** (इन्द्रले भने)

**अहो दानव सिद्धोऽसि यस्य ते मतिरीदृशी।**

**भक्तः सर्वात्मनात्मानं सुहृदं जगदीश्वरम्॥ १९॥**

**पदार्थ–**
**अहो** = आश्चर्य छ
**दानव** = हे दानवराज (तिमी)

**सिद्धः असि** = कृतार्थ र धन्य छौ
**यस्य** = जुन
**ते** = तिम्रो
**ईदृशी** = यसप्रकारको विवेक, धैर्य र भक्तिले युक्त
**मतिः** = बुद्धि छ
**आत्मानं** = सम्पूर्ण प्राणीहरूको आत्मस्वरूप
**सुहृदं** = सबैका परममित्र
**जगदीश्वरम्** = जगदीश्वर प्रभुको
तिमीले
**सर्वात्मना** = सम्पूर्ण भावले
**भक्तः** = भजन गरेका छौ

**वाक्यार्थ–** हे दानवराज ! यसप्रकारको विवेक, धैर्य र भक्तिले युक्त बुद्धि भएका तिमी धन्य छौ। तिमीले सम्पूर्ण प्राणीहरूका आत्मस्वरूप जगदीश्वरको सर्वात्मभावले भजन गरेका छौ।

**भवानतार्षीन्मायां वै वैष्णवीं जनमोहिनीम्।**
**यद् विहायासुरं भावं महापुरुषतां गतः॥ २०॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**भवान्** = तिमीले
**जनमोहिनीम्** = सम्पूर्ण जीवलाई मोहित बनाउने
**वैष्णवीं** = भगवान् विष्णुको
**मायाम्** = मायालाई
**अतार्षीत्** = पक्कै पनि तऱ्यौ
**यत्** = किनभने
**आसुरं** = असुरहरूमा हुने
**भावं** = भावलाई
**विहाय** = चटक्कै छाडेर
**महापुरुषतां** = उदार हृदय भएका महापुरुषहरूको भावमा
**गतः** = पुगेका छौ

**वाक्यार्थ–** तिमीले सम्पूर्ण जीवलाई मोहित पार्ने भगवान्को मायालाई पक्कै जितिसकेका छौ किनभने तिमी आसुर भावलाई छाडेर महापुरुषको भावमा पुगेका छौ।

**खल्विदं महदाश्चर्यं यद्रजःप्रकृतेस्तव।**
**वासुदेवे भगवति सत्त्वात्मनि दृढा मतिः॥ २१॥**

**पदार्थ–**
**रजःप्रकृतेः** = रजोगुणी स्वभावका
**तव** = तिम्रो
**सत्त्वात्मनि** = विशुद्ध सत्त्वस्वरूप
**भगवति** = भगवान्
**वासुदेवे** = वासुदेवमा
**यत्** = जसरी
**दृढा** = अत्यन्त अडिग
**मतिः** = बुद्धि लागेको छ
**खलु** = निश्चय नै
**इदम्** = यो
**महद्** = ज्यादै
**आश्चर्यं** = आश्चर्यको कुरो हो

**वाक्यार्थ–** रजोगुणी भएर पनि सत्त्वगुणस्वरूप भगवान् वासुदेवमा तिम्रो बुद्धि यसरी दृढसँग लाग्नु निश्चय नै ठुलो आश्चर्यको कुरो हो।

**यस्य भक्तिर्भगवति हरौ निःश्रेयसेश्वरे।**
**विक्रीडतोऽमृताम्भोधौ किं क्षुद्रैः खातकोदकैः॥ २२॥**

**पदार्थ–**
**यस्य** = जुन सौभाग्यशालीको
**निःश्रेयसेश्वरे** = मोक्षका मालिक
**भगवति** = भगवान्
**हरौ** = श्रीहरिमा
**भक्तिः** = दृढ भक्ति लागेको छ,

त्यस्ता
**अमृताम्भोधौ** = मोक्षरूपी अमृतको सागरमा
**विक्रीडतः** = विहार गर्ने व्यक्तिका लागि
**क्षुद्रैः** = थोरै मात्र सुख दिने
**खातकोदकैः** = कुवाजस्ता स्वर्ग आदि लोकहरूको
**किं** = के प्रयोजन छ र

**वाक्यार्थ–** मोक्षका मालिक भगवान् श्रीहरिमा दृढ भक्ति लागेका भक्तहरू मोक्षरूपी आनन्दको अमृतसागरमा विहार गर्दछन्। उनीहरूलाई संसारको विषयभोगरूपी कुवाजस्ता स्वर्ग आदि लोकहरूको के आवश्यकता छ र ?

**विवरण–** यस प्रसङ्गमा आफूले भक्ति गर्न नसके तापनि भगवान्को र उहाँका भक्त वृत्रासुरको प्रशंसा गरी इन्द्रले आफ्नो सत्त्वगुणी देवस्वभाव प्रकट गरेका छन्। इन्द्र आदि देवताहरू विषयभोगमा असाध्यै आसक्त हुन्छन्। सम्पूर्ण वेदको अर्थसहित ज्ञान उनीहरूलाई जन्मजात नै हुन्छ तैपनि वेदप्रतिपाद्य परम पुरुष परमात्मातिर उनीहरूको दृष्टि जाँदैन। तैपनि भगवान्को भक्त हुनु र आत्मज्ञानी हुनु साह्रै राम्रो हो भन्ने उनीहरूलाई थाहा छ। अन्य व्यक्तिहरू ज्ञानी भएको देवताहरू मन पराउँदैनन्। मुक्त भयो भने आफूभन्दा माथि जान्छ भन्ने सोचेर उनीहरू अरूलाई मुक्त हुन दिन चाहँदैनन्। यसको अर्को कारण के हो भने आस्तिक मनुष्य जो आफूलाई यज्ञ, पूजा आदिद्वारा सन्तुष्ट र बलियो बनाउँछ ऊ मुक्त भयो भने आफ्नो सेवकको संख्या घट्दछ। जसरी मानिसहरू आफ्ना पशु हराए भने दुःखी हुन्छन् त्यसै गरी देवताहरू पनि आफ्ना सेवकहरू मुक्त हुन खोज्दा त्यसमा विघ्न गर्दछन् (बृहदारण्यकोपनिषद्, १/४/१०)। ध्यान र उपासनामा बस्दा अनेक चिन्तनले मन बिथोलिदिनु, योगीहरूलाई पनि योगभ्रष्ट गराइदिनु यसका उदाहरण हुन्। यति हुँदाहुँदै पनि मुक्त भइसकेका व्यक्तिप्रति भने उनीहरू आदर भावना नै राख्दछन्। यो आदरभाव उनीहरूको सत्त्वगुणको परिचय हो।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति ब्रुवाणावन्योन्यं धर्मजिज्ञासया नृप।**
**युयुधाते महावीर्याविन्द्रवृत्रौ युधाम्पती॥ २३॥**

**पदार्थ–**
**नृप** = हे राजा
**इति** = यसप्रकार
**धर्मजिज्ञासया** = धर्मको रहस्य जान्ने इच्छाले
**अन्योन्यं** = आपसमा
**ब्रुवाणौ** = बातचित गरिरहेका
**महावीर्यौ** = अत्यन्त पराक्रमी
**युधाम्पती** = सेनाका नायक
**इन्द्रवृत्रौ** = इन्द्र र वृत्रासुरले
**युयुधाते** = युद्ध गर्न लागे

**वाक्यार्थ–** हे राजा ! यसप्रकार धर्मको रहस्य जान्ने इच्छाले आपसमा वार्तालाप गरिरहेका पराक्रमी सेनानायक इन्द्र र वृत्रासुरले फेरि भयङ्कर युद्ध गर्न लागे।

**आविध्य परिघं वृत्रः कार्ष्णायसमरिन्दमः।**
**इन्द्राय प्राहिणोद् घोरं वामहस्तेन मारिष॥ २४॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **कार्ष्णायसम्** = फलामले बनेको | **वामहस्तेन** = देब्रे हातले |
| **मारिष** = हे राजा | **घोरं** = अत्यन्त डरलाग्दो | **आविध्य** = फनफनी घुमाउँदै |
| **अरिन्दमः** = शत्रुलाई नाश गर्ने | **परिघं** = परिघ (फलामे | **इन्द्राय** = इन्द्रमाथि |
| **वृत्रः** = वृत्रासुरले | लौरो)लाई | **प्राहिणोत्** = प्रहार गर्‍यो |

**वाक्यार्थ–** युद्धमा शत्रुको नाश गर्न चाहने वृत्रासुरले फलामले बनेको अत्यन्त डरलाग्दो परिघलाई देब्रे हातले उचालेर फनफनी घुमाउँदै इन्द्रमाथि प्रहार गर्‍यो।

**स तु वृत्रस्य परिघं करं च करभोपमम्।**
**चिच्छेद युगपद् देवो वज्रेण शतपर्वणा॥ २५॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **वज्रेण** = आफ्नो वज्रले | **करं च** = बाँकी रहेको अर्को |
| **सः** = ती | **वृत्रस्य** = वृत्रासुरको | हातलाई समेत |
| **देवः तु** = देवराज इन्द्रले चाहिँ | **परिघं** = परिघलाई र | **युगपत्** = एकैचोटिमा |
| **शतपर्वणा** = सय आँख्ला भएको | **करभोपमम्** = हात्तीको सुँडजस्तो | **चिच्छेद** = छिनालिदिए |

**वाक्यार्थ–** देवराज इन्द्रले पनि वृत्रासुरको त्यो परिघ तथा हात्तीको सुँडजस्तो लामो उसको हातलाई सय आँख्ला भएको आफ्नो वज्रले एकै पटकमा छिनालिदिए।

**दोर्भ्यामुत्कृत्तमूलाभ्यां बभौ रक्तस्रवोऽसुरः।**
**छिन्नपक्षो यथा गोत्रः खाद् भ्रष्टो वज्रिणा हतः॥ २६॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **असुरः** = वृत्रासुर | **भ्रष्टः** = खसिरहेको |
| **दोर्भ्याम्** = दुबै हातका | **वज्रिणा** = इन्द्रद्वारा (वज्रले) | **गोत्रः यथा** = पर्वत झैँ |
| **उत्कृत्तमूलाभ्यां** = काँधैसम्मको | **हतः** = हानिएपछि | **बभौ** = देखियो |
| भाग काटिइसकेपछि | **छिन्नपक्षः** = पखेटा काटिएकाले | |
| **रक्तस्रवः** = रगत बगाउँदै गरेको | **खात्** = आकाशबाट | |

**वाक्यार्थ–** दुबै हातको काँधैदेखिको भाग काटिइसकेपछि वृत्रासुरको दुबै हातको फेदबाट रगतको धारा बग्न लाग्यो। त्यस वेला वृत्र यस्तो देखियो कि मानौँ इन्द्रको वज्रको प्रहारले पखेटा काटिएपछि कुनै पर्वत नै आकाशबाट खसिरहेको छ।

**कृत्वाधरां हनुं भूमौ दैत्यो दिव्युत्तरां हनुम्।**
**नभोगम्भीरवक्त्रेण लेलिहोल्बणजिह्वया॥ २७॥**
**दंष्ट्राभिः कालकल्पाभिर्ग्रसन्निव जगत्त्रयम्।**
**अतिमात्रमहाकाय आक्षिपंस्तरसा गिरीन्॥ २८॥**

**गिरिराट् पादचारीव पद्भ्यां निर्जरयन् महीम् ।**
**जग्रास स समासाद्य वज्रिणं सहवाहनम् ॥ २९ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **दिवि** = स्वर्गमा | **महीम्** = पृथिवीलाई (कुल्चेर) |
| **पादचारी** = पैदल हिँड्दै गरेको | **कृत्वा** = बनाएर | **निर्जरयन्** = छियाछिया बनाएर र |
| **गिरिराट् इव** = पर्वतजस्तै | **नभोगम्भीरवक्त्रेण** = आकाश जस्तै गहिरो मुख | **तरसा** = प्रबल वेगले |
| **अतिमात्रमहाकायः** = साह्रै ठुलो र भयानक शरीर भएको | **लेलिहोल्बणजिह्वया** = लपलपाउँदो लामो जिब्रो र | **गिरीन्** = पर्वतहरूलाई |
| **सः** = त्यो | **कालकल्पाभिः** = मृत्युको समान | **आक्षिपन्** = उलटपुलट पार्दै |
| **दैत्यः** = दानव वृत्रासुरले | **दंष्ट्राभिः** = दाह्राहरूले | **वज्रिणं** = इन्द्र भएको ठाउँमा |
| **अधरां** = तल्लो | **जगत्त्रयम्** = तीनै लोकलाई | **समासाद्य** = पुगी |
| **हनुं** = चिउँडो (च्यापु)लाई | **ग्रसन् इव** = निलुँला जस्तै गर्दै | **सहवाहनम्** = ऐरावत हात्तीसहित इन्द्रलाई |
| **भूमौ** = भुइँमा र | **पद्भ्यां** = आफ्ना दुबै गोडाहरूद्वारा | **जग्रास** = निलिदियो |
| **उत्तरां** = माथिल्लो | | |
| **हनुम्** = च्यापुलाई | | |

**वाक्यार्थ–** मानौँ पैदल हिँडडुल गरिरहेको पर्वत हो कि जस्तो अति ठुलो र भयानक शरीर भएको दानव वृत्रासुरले तल्लो च्यापुलाई भुइँमा अड्याएर र माथिल्लो च्यापुलाई स्वर्गतिर फैलाएर आकाश जस्तै गहिरो मुख, लपलपाउँदो लामो जिब्रो र मृत्युसमानका तीखा दाह्राले तीनै लोकलाई निलुँला जस्तै गर्न लाग्यो। यसक्रममा आफ्ना गोडाले पृथिवीलाई हिर्काएर छियाछिया पार्दै प्रबल वेगले पहाडहरूलाई उलटपुलट पार्दै इन्द्रको नजिकमा पुगी उसले ऐरावत हात्तीसहित इन्द्रलाई निलिदियो।

**महाप्राणो महावीर्यो महासर्प इव द्विपम् ।**
**वृत्रग्रस्तं तमालक्ष्य सप्रजापतयः सुराः ।**
**हा कष्टमिति निर्विण्णाश्चुक्रुशुः समहर्षयः ॥ ३० ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **तम्** = ती इन्द्रलाई (वाहनसहित) | **निर्विण्णाः** = अत्यन्त दुःखी भई |
| **महाप्राणः** = ज्यादै शक्तिशाली र | **वृत्रग्रस्तं** = वृत्रासुरले निलेको | **हा** = अहो |
| **महावीर्यः** = प्रबल पराक्रम गर्ने | **आलक्ष्य** = देखेर | **कष्टम् इति** = अनर्थ भयो भनी |
| **महासर्पः** = ठुलो अजिङ्गरले | **सप्रजापतयः** = प्रजापतिहरू र | **चुक्रुशुः** = चिच्याउन थाले |
| **द्विपम् इव** = सिङ्गै हात्तीलाई निले जस्तै | **समहर्षयः** = महर्षिहरू सहितका | |
| | **सुराः** = देवताहरू | |

**वाक्यार्थ–** ठुलो अजिङ्गरले सिङ्गो हात्तीलाई सुलुत्त निले जस्तै पराक्रमी वृत्रासुरले हात्तीसहित

इन्द्रलाई निलेको देखेर आत्तिएका प्रजापति र महर्षिहरू सहित सम्पूर्ण देवताहरू "ठुलो अनर्थ भयो" भन्दै चिच्याउन थाले।

**निगीर्णोऽप्यसुरेन्द्रेण न ममारोदरं गतः।**

**महापुरुषसन्नद्धो योगमायाबलेन च ॥ ३१ ॥**

**पदार्थ—**
**असुरेन्द्रेण** = दानवराज वृत्रासुरद्वारा
**निगीर्णः** = निलिएका र
**उदरं गतः अपि** = पेटमैं पुगिसकेका भए पनि इन्द्र
**महापुरुषसन्नद्धः** = नारायणकवचद्वारा सबैतिरबाट ढाकिएकाले एवं
**योगमायाबलेन च** = योगबल र मायाबलबाट समेत रक्षित भएकाले
**न ममार** = मरेनन्

**वाक्यार्थ—** वृत्रासुरले निलेर उसको पेटमा पुगे तापनि नारायणकवच तथा योगबल र मायाबलद्वारा सुरक्षित रहेकाले इन्द्र मरेनन्।

**भित्त्वा वज्रेण तत्कुक्षिं निष्क्रम्य बलभिद् विभुः।**

**उच्चकर्त शिरः शत्रोर्गिरिशृङ्गमिवौजसा ॥ ३२ ॥**

**पदार्थ—**
**विभुः** = शक्तिशाली भएका
**बलभित्** = इन्द्रले
**वज्रेण** = आफ्नो वज्रद्वारा
**तत्कुक्षिं** = वृत्रासुरको पेटलाई
**भित्त्वा** = चिरेर
**निष्क्रम्य** = बाहिर निस्की
**ओजसा** = पूरै तागत लगाएर
**गिरेः** = पर्वतको
**शृङ्गम् इव** = चुचुरोसमान
**शत्रोः** = वृत्रासुरको
**शिरः** = शिरलाई
**उच्चकर्त** = छिनालिदिए

**वाक्यार्थ—** शक्तिशाली इन्द्रले वृत्रासुरको पेटमा पुगे पनि आफ्नो वज्रद्वारा उसको पेटलाई चिरेर बाहिर निस्की सम्पूर्ण शक्ति लगाएर त्यस शत्रु वृत्रासुरको टाउको काटिदिए।

**वज्रस्तु तत्कन्धरमाशुवेगः कृन्तन् समन्तात् परिवर्तमानः।**

**न्यपातयत् तावदहर्गणेन यो ज्योतिषामयने वार्त्रहत्ये ॥ ३३ ॥**

**पदार्थ—**
**तत्कन्धरम्** = त्यस वृत्रासुरको गर्धनलाई
**कृन्तन्** = काट्दै
**समन्तात्** = चारैतिर
**परिवर्तमानः** = घुमिरहेको
**आशुवेगः** = अत्यन्त वेगवान्
**वज्रः तु** = वज्रले समेत
**ज्योतिषाम्** = सूर्य आदि ग्रहको
**अयने** = उत्तरायण र दक्षिणायनको
**यः** = जति समय लाग्दछ
**तावत्** = त्यति नै
**अहर्गणेन** = दिन लगाई
**वार्त्रहत्ये** = वृत्रासुरको हत्याको समय आएपछि मात्र बल्लबल्ल
**न्यपातयत्** = भुईंमा खसाल्यो

**वाक्यार्थ—** त्यस वृत्रासुरको गर्धनलाई काट्दै चारैतिर घुमिरहेको इन्द्रको त्यस अत्यन्त वेगवान्

वज्रले समेत सूर्य आदि ग्रहहरूलाई उत्तरायण, दक्षिणायन मार्गमा घुम्न जति समय लाग्छ, त्यत्ति नै समय (३६५ दिन) लगाएर वृत्रासुरको मृत्युको योग आएपछि मात्र उसको शिर काटेर भुइँमा खसाल्यो।

**तदा च खे दुन्दुभयो विनेदुर्गन्धर्वसिद्धाः समहर्षिसङ्घाः।**

**वार्त्रघ्नलिङ्गैस्तमभिष्टुवाना मन्त्रैर्मुदा कुसुमैरभ्यवर्षन्॥ ३४॥**

**पदार्थ–**
**तदा च** = त्यस समयमा
**खे** = आकाशमा
**दुन्दुभयः** = दुन्दुभि (दमाहा)हरू
**विनेदुः** = बज्न थाले
**समहर्षिसङ्घाः** = महर्षिहरू सहित
**गन्धर्वसिद्धाः** = गन्धर्व र सिद्धहरू
**वार्त्रघ्नलिङ्गैः** = वृत्रासुर मार्ने इन्द्रका पराक्रमलाई सूचित गर्ने
**मन्त्रैः** = मन्त्रहरूद्वारा
**तम्** = ती इन्द्रलाई
**अभिष्टुवानाः** = स्तुति गर्दै
**मुदा** = प्रसन्नताले गर्दा
**कुसुमैः** = फूलहरूले
**अभ्यवर्षन्** = वर्षा गरे

**वाक्यार्थ–** त्यस समयमा आकाशमा दुन्दुभि बाजा बज्न लागे। महर्षिहरूले सहित गन्धर्व र सिद्धहरूले वृत्रासुर मार्ने इन्द्रको पराक्रमलाई सूचित गर्ने मन्त्रहरूद्वारा इन्द्रको स्तुति गर्दै प्रसन्न भएर पुष्पवर्षा गर्न लागे।

**वृत्रस्य देहान्निष्क्रान्तमात्मज्योतिररिन्दम।**

**पश्यतां सर्वलोकानामलोकं समपद्यत॥ ३५॥**

**पदार्थ–**
**अरिन्दम** = हे शत्रुनाशक परीक्षित्
**वृत्रस्य** = वृत्रासुरको
**देहात्** = शरीरबाट
**निष्क्रान्तम्** = निस्किएको
**आत्मज्योतिः** = आत्मारूपी तेज
**सर्वलोकानाम्** = देवता, मनुष्य, सिद्ध आदि सबैले
**पश्यतां** = हेर्दाहेर्दै
**अलोकं** = सम्पूर्ण लोकहरूभन्दा पर भगवान्को यथार्थ स्वरूपमा
**समपद्यत** = लीन भयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! त्यसै समयमा वृत्रासुरको शरीरबाट बाहिर निस्केको आत्मज्योति देवता, मनुष्य, सिद्ध आदिले हेर्दाहेर्दै सम्पूर्ण लोकहरूभन्दा पर रहेको भगवान्को यथार्थ स्वरूपमा लीन हुनपुग्यो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां षष्ठस्कन्धे**

**वृत्रवधो नाम द्वादशोऽध्यायः॥ १२॥**

# अथ त्रयोदशोऽध्यायः

## इन्द्रमाथि ब्रह्महत्याको आक्रमण

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**वृत्रे हते त्रयो लोका विना शक्रेण भूरिद ।**
**सपाला ह्यभवन् सद्यो विज्वरा निर्वृतेन्द्रियाः ॥ १ ॥**

**पदार्थ–**
**भूरिद** = हे महादानी परीक्षित्
**वृत्रे** = वृत्रासुर
**हते** = मारिएपछि
**सद्यः** = तत्काल नै
**शक्रेण विना** = इन्द्रलाई छाडेर
**सपालाः** = लोकपालहरूले सहित
**त्रयः लोकाः** = तीनै लोक
**हि** = निश्चय नै
**विज्वराः** = चिन्तारहित र
**निर्वृतेन्द्रियाः** = अत्यन्त खुसी
**अभवन्** = भए

**वाक्यार्थ–** हे परीक्षित् ! वृत्रासुर मारिएपछि लोकपालहरूले सहित तीनै लोक प्रसन्न र चिन्तारहित भए तर इन्द्र भने प्रसन्न भएनन्।

**देवर्षिपितृभूतानि दैत्या देवानुगाः स्वयम् ।**
**प्रतिजग्मुः स्वधिष्ण्यानि ब्रह्मेशेन्द्रादयस्ततः ॥ २ ॥**

**पदार्थ–**
**देवर्षिपितृभूतानि** = देवता, ऋषि, पितृ, भूतहरू
**दैत्याः** = दैत्यहरू र
**देवानुगाः** = देवताका सेवकहरू र गन्धर्व आदि समेत
**स्वयम्** = दुःखी भएका इन्द्रसँग नसोधीकन नै
**स्वधिष्ण्यानि** = आफ्नो वासस्थानतिर
**प्रतिजग्मुः** = फर्किए
**ततः** = त्यसपछि
**ब्रह्मेशेन्द्रादयः** = ब्रह्मा, भगवान् शङ्कर र इन्द्र आदि पनि आफ्नो ठाउँतिर लागे

**वाक्यार्थ–** इन्द्र मनमनै दुःखी थिए। त्यही बीचमा नै देवता, ऋषि, पितृ, दैत्य र गन्धर्वहरू समेत सबै उनलाई नसोधीकन नै आ-आफ्नो लोकतिर गए। केही समयपछि ब्रह्मा, भगवान् शङ्कर र इन्द्र पनि आ-आफ्नो ठाउँतिर लागे।

**टिप्पणी–** वृत्रासुरलाई मारेपछि इन्द्र ब्रह्महत्याबाट डराई मानस सरोवरभित्र लुक्न गएका थिए। उनी स्वर्ग गएका थिएनन्। ब्रह्मा आदि देबतासँगै इन्द्र पनि आफ्नो ठाउँमा गए भनी यहाँ बताउनु गमन क्रियाको समताले हो। वृत्र मरेपछि ब्रह्मा आदि देवताहरू आ-आफ्नो लोकमा गए तर इन्द्र चाहिँ मानस सरोवरमा एक हजार वर्षसम्म लुकेर पछि मात्र स्वर्ग गए।

**राजोवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**इन्द्रस्यानिर्वृतेर्हेतुं श्रोतुमिच्छामि भो मुने ।**
**येनासन् सुखिनो देवा हरेर्दुःखं कुतोऽभवत् ॥ ३ ॥**

**पदार्थ–**
**भो मुने** = हे शुकदेव मुनि
**इन्द्रस्य** = इन्द्रको
**अनिर्वृतेः** = अप्रसन्नताको
**हेतुं** = कारण
**श्रोतुम्** = सुन्न
**इच्छामि** = चाहन्छु
**येन** = जुन कारणले
**देवाः** = देवताहरू
**सुखिनः** = अत्यन्त सुखी
**आसन्** = भएका थिए भने
**हरेः** = इन्द्रको मनमा
**दुःखं** = दुःख
**कुतः** = कसरी
**अभवत्** = भयो

**वाक्यार्थ–** हे शुकदेव मुनि ! वृत्रासुरलाई मारेपछि अरू सम्पूर्ण देवताहरू चाहिँ अत्यन्त सुखी भए तर इन्द्र चाहिँ किन दुःखी भए ? म इन्द्रको अप्रसन्नताको कारण सुन्न चाहन्छु।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**वृत्रविक्रमसंविग्नाः सर्वे देवाः सहर्षिभिः ।**
**तद्वधायार्थयन्निन्द्रं नैच्छद् भीतो बृहद्वधात् ॥ ४ ॥**

**पदार्थ–**
**ऋषिभिः सह** = ऋषिहरूले सहित
**वृत्रविक्रमसंविग्नाः** = वृत्रासुरको पराक्रमबाट भयभीत भएका
**सर्वे** = सबै
**देवाः** = देवताहरू
**तद्वधाय** = त्यस वृत्रासुरको वध गर्नको लागि
**इन्द्रं** = इन्द्रलाई
**आर्थयन्** = प्रार्थना गरेका थिए तर
**बृहद्वधात्** = ब्रह्महत्याबाट
**भीतः** = असाध्यै डराउने इन्द्रले
**न ऐच्छत्** = त्यसो गर्न चाहेका थिएनन्

**वाक्यार्थ–** वृत्रासुरको प्रबल पराक्रमबाट आत्तिएका सबै देवताहरूले ऋषिहरू सहित भई वृत्रासुरलाई मार्न इन्द्रसँग प्रार्थना गरेका थिए तर उनले ब्रह्महत्याको डरले वृत्रलाई मार्न चाहेका थिएनन्।

**इन्द्र उवाच** (इन्द्रले भने)

**स्त्रीभूजलद्रुमैरेनो विश्वरूपवधोद्भवम् ।**
**विभक्तमनुगृह्णद्भिर्वृत्रहत्यां क्व माज्र्म्यहम् ॥ ५ ॥**

**पदार्थ–**
**विश्वरूपवधोद्भवम्** = विश्वरूपलाई मारेर लागेको
**एनः** = ब्रह्महत्याको पाप त
**अनुगृह्णद्भिः** = ममाथि अनुग्रह गर्ने
**स्त्रीभूजलद्रुमैः** = स्त्रीजाति, पृथिवी, जल र रुखले
**विभक्तम्** = बाँडेर लिएका थिए तर
**अहम्** = मैले
**वृत्रहत्यां** = वृत्रासुरलाई मारेर पैदा हुने ब्रह्महत्या पापलाई
**क्व** = कहाँ
**मार्ज्मि** = पखाल्न सक्छु र

**वाक्यार्थ–** विश्वरूपलाई मार्दा लागेको ब्रह्महत्याको पापलाई त ममाथि अनुग्रह गर्ने दयामय स्त्रीजाति, पृथिवी, जल र रुखहरूले चारभाग लगाई बाँडेर लिइदिएका थिए, तर अब ब्राह्मणपुत्र वृत्रासुरलाई मारेर पैदा हुने ब्रह्महत्या पापलाई म कहाँ पखाल्न सकुँला र ?

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**ऋषयस्तदुपाकर्ण्य महेन्द्रमिदमब्रुवन्।**
**याजयिष्याम भद्रं ते हयमेधेन मा स्म भैः॥ ६॥**

**पदार्थ–**
**तत्** = त्यो देवराज इन्द्रको कुरा
**उपाकर्ण्य** = सुनेर
**ऋषयः** = ऋषिहरूले
**महेन्द्रम्** = इन्द्रलाई
**इदम्** = यस्तो
**अब्रुवन्** = भने
**ते** = (हे इन्द्र) तिम्रो
**भद्रं** = कल्याण होस्
**हयमेधेन** = अश्वमेधको विधानले
**याजयिष्यामः** = तिमीलाई यज्ञ गराउनेछौँ, त्यसैले
**मा स्म भैः** = कत्ति नडराऊ

**वाक्यार्थ–** इन्द्रको त्यस्तो वचन सुनेर ऋषिहरूले उनलाई भने– 'हे इन्द्र तिम्रो कल्याण हुनेछ, तिमी नडराऊ किनभने हामीहरू तिमीलाई अश्वमेध यज्ञ गराउनेछौँ।'

**हयमेधेन पुरुषं परमात्मानमीश्वरम्।**
**इष्ट्वा नारायणं देवं मोक्ष्यसेऽपि जगद्वधात्॥ ७॥**

**पदार्थ–**
**हयमेधेन** = अश्वमेध यज्ञद्वारा
**पुरुषं** = पुराण पुरुष
**ईश्वरम्** = सबै जगत्का नियन्ता
**परमात्मानम्** = परमात्मा
**देवं** = भगवान्
**नारायणं** = श्रीहरिलाई
**इष्ट्वा** = आराधना गरेर
**जगद्वधात् अपि** = संसारैलाई मारेको पापबाट पनि
**मोक्ष्यसे** = मुक्त हुनेछौ

**वाक्यार्थ–** पुराणपुरुष भगवान् नारायण सबै जगत्का नियन्ता हुनुहुन्छ। उहाँलाई अश्वमेध यज्ञद्वारा आराधना गऱ्यौ भने संसारलाई मारेको पापबाट पनि तिमी छुट्नेछौ।

**ब्रह्महा पितृहा गोघ्नो मातृहाचार्यहाघवान्।**
**श्वादः पुल्कसको वापि शुद्ध्येरन् यस्य कीर्तनात्॥ ८॥**

**पदार्थ–**
**यस्य** = जुन भगवान्को
**कीर्तनात्** = नाम जप्नाले
**ब्रह्महा** = वेदपाठी ब्राह्मणलाई मार्ने
**पितृहा** = पितालाई मार्ने
**गोघ्नः** = गाईको हत्या गर्ने
**मातृहा** = आमालाई मार्ने
**आचार्यहा** = गुरुलाई मार्ने आदि
**अघवान्** = भयङ्कर पापीहरू र
**श्वादः** = कुकुरको मासु खाने
**पुल्कसकः** = मासुको कारोवार गर्ने व्यक्ति
**वा अपि** = भए पनि
**शुद्ध्येरन्** = पवित्र हुन्छन्

**वाक्यार्थ–** भगवान्को नाम जप्नाले वेदपाठी ब्राह्मणलाई मार्ने, मातापितालाई मार्ने, आफ्ना गुरुलाई मार्ने र गाईको हत्या गर्ने महापापीहरू पनि शुद्ध हुन्छन् त्यसै गरी कुकुरको मासु खानेहरू र प्राणीलाई मारेर मासु बेच्नेहरू पनि पवित्र बन्दछन्।

यसप्रकार हुन्छ— **भज्यते अनेन इति भक्तिः** अर्थात् जसद्वारा सेवा गरिन्छ त्यो भक्ति हो। यसरी करणव्युत्पत्तिअनुसार भक्ति शब्दबाट इन्द्रिय र तिनका व्यापार भन्ने अर्थ बुझिन्छ। भगवान्‌का गुणहरूको श्रवण, कीर्तन र स्मरण, उहाँको पादसेवन, वन्दन, दास्य, सख्य र आत्मनिवेदन यी नौ प्रकारका भक्तिहरू यही साधनभक्तिअन्तर्गत पर्दछन्। त्यसैले **हृषीकेण हृषीकेशसेवनं भक्तिरुत्तमा** अर्थात् हृषीक (इन्द्रिय)द्वारा हृषीकेश भगवान्‌को सेवा गर्नु नै उत्तम भक्ति हो भनिएको छ।

भक्ति शब्दको भाव व्युत्पत्ति यसप्रकार छ— **भजनं भक्तिः** अर्थात् सेवा नै भक्ति हो। यस्तो भावव्युत्पत्ति गर्दा साध्यभक्तिको बोध हुन्छ। यस्तो भक्तिलाई भक्तिशास्त्रले प्रेमा भक्तिको रूपमा प्रतिपादन गरेको छ। अतः भावव्युत्पत्तिअनुसार बनेको भक्तिशब्दले भगवान्‌का गुणहरूको श्रवण आदिद्वारा भगवान्‌को आकारमा आकारित अन्तःकरणको वृत्तिलाई बुझाउँछ। अन्तःकरण कुनै आकारमा आकारित नभई बस्न सक्दैन किनभने कुनै पनि विषयमा आकारित भएर रहनु यसको स्वभाव हो। अन्तःकरण विषयको आकारमा आकारित हुँदा विषयका संस्कार त्यसमा एकत्रित भए झैं श्रवण, कीर्तन आदिद्वारा भगवान्‌को आकारमा आकारित भयो भने त्यसमा भगवद्‌विषयक संस्कारहरू रहन्छन्। अन्तःकरणको यो अवस्था नै भक्ति हो। मधुसूदन सरस्वतीले भक्तिको लक्षण गर्दै भन्नुभएको छ—

**द्रुतस्य भगवद्धर्माद् धारावाहिकतां गता।**
**सर्वेशे मनसो वृत्तिर्भक्तिरित्यभिधीयते।।**

अर्थात्, भगवान्‌का लीलाचरित्रहरूको श्रवण आदिद्वारा अन्तःकरणको वृत्ति विषयबाट हटी निरन्तर भगवान्‌मैं लागिरहनु भक्ति हो।

भक्तिमा मुख्यतः तीन ओटा पक्षहरू हुन्छन्— भगवान्, भक्त र ती दुईको सम्बन्ध। भक्ति भक्तमा आश्रित रहेर भगवान्‌लाई विषय गर्ने त्यस्तो सम्बन्ध हो जसले भक्त र भगवान्‌लाई अभिन्न बनाउँछ। मधुसूदन सरस्वतीले भगवद्धर्म भनेर श्रवण आदि साधन भक्ति तथा **सर्वेशे मनसो वृत्तिः** भनेर साध्यभक्तिलाई सङ्केत गर्नुभएको छ। साधनभक्तिद्वारा साध्यभक्तिको प्राप्ति भएपछि भक्त कृतकृत्य हुन्छ र उसका लागि कुनै पनि वस्तु प्राप्तव्य रहँदैन। आमा देवहूतिलाई उपदेश गर्ने क्रममा कपिलदेवले भन्नुभएको छ— जसरी गङ्गाको प्रवाह अटुटरूपले समुद्रतिर बढ्दछ र त्यहीँ पुगी शान्त हुन्छ, त्यसै गरी भगवान्‌का गुणहरूको श्रवणादिद्वारा पग्लेको चित्त पनि तैलधारावत् भगवान्‌कै आकारमा आकारित भई स्थिर बन्दछ। यही अवस्था नै भक्ति हो (भागवत, ३/२९/११-१२)। नारदजीले **सा त्वस्मिन् परमप्रेमरूपा** र शाण्डिल्यले **सा परानुरक्तिरीश्वरे** भनेर भक्तिमा भगवान्‌प्रति दृढ अनुराग हुनुपर्ने बताउनुभएको छ। भक्तिशास्त्रहरूमा **भागो भक्तिः**, **भजनं भक्तिः** र **भञ्जनं भक्तिः** भनी प्रकारान्तरले भक्तिको व्यापक विश्लेषण गरिएको छ। आफूलाई भगवान्‌को नाममा भाग लगाइदिनु तथा आफूलगायत आफ्ना सम्पूर्ण कर्म र त्यसका फलहरूलाई समेत भगवान्‌मैं अर्पण गरिदिनु **भागो भक्तिः**को रहस्य हो। भजन भनेको के हो ? भन्ने सन्दर्भमा भनिएको छ— **भजनं नाम रसनम्** अर्थात् भगवान्‌का लीलाचरित्रहरूको श्रवणादि गर्दा शरीर रोमाञ्चित हुनु, अलौकिक आनन्दको अनुभूति हुनु, हर्षाश्रु आउनु भक्ति हो। **भञ्जन** भनेको भगवान्‌मा दृढ अनुराग गरी काम, क्रोध आदि आसुरी सम्पत्तिहरूलाई नष्ट गरिदिनु हो।

यी सबै भक्तिहरू भगवत्तत्त्वसाक्षात्कारका लागि आवश्यक छन्।

असली भक्त भगवान्को भक्तिविना बस्न सक्दैन अनि भगवान् पनि भक्तको भावनालाई हेर्नुहुन्छ, उसले चढाउने वस्तुलाई होइन। एक क्षण पनि भक्तिरहित भएर बस्नु पर्दा भक्त अत्यन्त व्याकुल बन्दछ। नारदजी भन्नुहुन्छ— **तदर्पिताखिलाचारिता तद्विस्मरणे परमव्याकुलता चेति**। अर्थात् इन्द्रिय र तिनका व्यापारहरूलाई भगवान्मा अर्पण गरिदिनु र भगवान्लाई बिर्सदा पानी बाहिरको माछो झैँ छटपटाउनु भक्ति हो।

वेदमा कर्म, उपासना र ज्ञान गरी तीन ओटा काण्डहरू रहेका छन्। तिनीहरूमध्ये कर्मकाण्डले अन्तःकरणमा रहेको मलदोष, उपासनाले विक्षेपदोष र ज्ञानले आवरणदोषको निवृत्ति गर्दछ। मोक्षको लागि यी तीन ओटै दोषहरूको निवृत्ति आवश्यक छ। जसरी ऐनामा मुखको प्रतिबिम्ब देखिनका लागि ऐना निर्मल र निश्चल हुनुपर्दछ त्यसै गरी आत्मज्ञानका लागि पनि मन स्वच्छ र निश्चल हुनुपर्दछ। कर्मद्वारा स्वच्छता र भक्तिद्वारा निश्चलताको आविर्भाव हुन्छ। भक्तिले मनको चाञ्चल्यलाई कसरी हटाउछ ? यसको उत्तर के हो भने अनन्त जन्मका भोगवासनाहरू अन्तःकरणमा एकत्रित हुन्छन्। यसैले मन चञ्चल र अस्थिर हुन्छ। भगवान्मा दृढ अनुराग भएपछि मनले भोगवासनाको परित्याग गर्दछ र यसको चञ्चलता नष्ट हुन्छ। यसरी हेर्दा भोगवासनाको परित्याग, वैराग्यप्राप्ति र विक्षेपदोषको निवारणका लागि भक्तिको सर्वोपरि भूमिका रहेको देखिन्छ। वेदान्तसिद्धान्तअनुसार ब्रह्म निर्गुण र निराकार भएकाले यो मन र वाणीको विषय हुन सक्दैन अनि मन्दमति भएका मुमुक्षुहरूले त्यस्तो मन र वाणीको विषय हुन नसक्ने परमात्माको साक्षात्कार गर्न पनि सक्दैनन्। अतः तिनीहरूलाई अनुग्रह गरी भगवत्तत्त्वसाक्षात्कार गराउनका निम्ति वेदमा सगुण साकार परमात्माको स्वरूप प्रतिपादन गरिएको हो। वेदमा **हिरण्यश्मश्रुः हिरण्यकेशाः** अर्थात् सुनको दाह्री र कपाल भएको परमात्माको सगुणरूपको निरूपण गरिएको पाइन्छ। अनन्त जन्मदेखि भौतिक पदार्थहरूको चिन्तनमा अभ्यस्त आफ्ना चञ्चल इन्द्रियहरूलाई त्यताबाट खिचेर भगवान्को नाम र रूपको चिन्तनमा लगाउनुपर्दछ। त्यसैले नलकूवर र मणिग्रीवले आफ्ना सम्पूर्ण इन्द्रियहरू भगवान्को चिन्तन, स्मरण र उहाँको सेवामा स्थित रहून् भनी प्रार्थना गरेका छन् (भागवत, १०/१०/३८)। राजा परीक्षित्ले जीव मात्रको परम कर्तव्य के हो ? भनी गरेको प्रश्नमा शुकदेवजीले परमात्माको गुणश्रवण, कीर्तन र स्मरण गर्नुपर्दछ भनी बताउनुभएको छ। धेरै कालसम्म भगवान्को कथाश्रवण गरेपछि साधक अनात्मपदार्थका संस्कारहरूबाट मुक्त हुन्छ अनि त्यही अन्तःकरणमा परमात्मा प्रकट हुनुहुन्छ। यसरी ब्रह्मतत्त्वसाक्षात्कारका लागि भक्तिको महत्त्वपूर्ण भूमिका रहन्छ। त्यसैले भनिएको छ– **मोक्षकारणसामग्र्यां भक्तिरेव गरीयसी** अर्थात् मोक्ष प्राप्त गर्ने साधनहरूमध्ये भक्ति नै सर्वोत्कृष्ट साधन हो।

भक्तिबाट संसारका सबै मानिसहरूलाई प्रसन्नताको अनुभूति हुन्छ। संसारमा संसारी, मुमुक्षु र मुक्त गरी तीन प्रकारका मानिसहरू हुन्छन्। भगवान्को कथाश्रवण र दर्शन गर्दा संसारी मनुष्य पनि प्रसन्न हुन्छन् किनभने त्यसबाट कान र आँखालाई आनन्द प्राप्त हुन्छ (भागवत, १०/१/४)। मुमुक्षुहरूको लागि त भक्ति सर्वस्व नै हो। श्रवणादि नगरी उनीहरू बस्नै सक्दैनन्। मुक्त पुरुषहरू

कृतकृत्य भइसकेका हुनाले उनीहरूका लागि कुनै सांसारिक कर्तव्यहरू बाँकी हुँदैनन्। त्यसैले उनीहरूको एक मात्र काम भनेको भगवान्को भक्ति गर्नु नै हो। विदेहमुक्त महापुरुषहरू पनि मायामय शरीर धारण गरी भक्ति गर्दछन् भनी बताइएको छ। **पिबत भागवतं रसमालयम्** यहाँ **आलय**पदको अर्थ गर्दा श्रीधर स्वामीले तत्त्वसाक्षात्कार नहुन्जेलसम्म भन्ने नगरी त्यसपछि पनि भक्ति गरिरहनुपर्दछ भन्ने अभिविधि अर्थ बताउनुभएको छ। पदार्थप्राप्तिको इच्छा भक्तिको बाधक हो। यसैले प्रह्लादले नृसिंह भगवान्सँग मेरो मनमा कुनै पनि प्रकारको कामना उत्पन्न नहोस् भनी वर मागेका छन् (श्रीमद्भागवत, ७/१०/७)।

मोक्षका अन्य मार्गहरूमध्ये भक्ति सहज र सुलभ साधन हो। ज्ञानप्राप्तिको राजमार्ग मानिने भक्तिमा कुनै पनि प्रकारको पतन एवं विघ्नभय हुँदैन। ज्ञानमार्गमा पहिले संसारबाट वैराग्य अनि आत्मामा प्रेम गरिन्छ भने भक्तिमार्गमा सर्वप्रथम परमात्मामा प्रेम गरिन्छ अनि वैराग्यादि क्रमशः हुँदै जान्छन्। भक्तिमा शरणागतिको विशिष्ट महत्त्व छ किनभने यसद्वारा भक्ति, वैराग्य र ज्ञानको क्रमशः प्राप्ति हुँदै जान्छ (श्रीमद्भागवत, ११/२/२४)। भक्तिको अर्को विशेषता के हो भने इन्द्रियवान् हरेक प्राणीहरू यसका अधिकारी हुन्। व्रजका गोपीहरू, यमलार्जुन वृक्ष, गाई, कालिय नाग, गजेन्द्र आदि प्राणीहरूले आफ्ना इन्द्रियहरू भगवान्मा समर्पण गरेकै कारण भगवद्धाम प्राप्त गरे। भक्तिका नौ ओटा भूमिकाहरूको चर्चा श्रीधर स्वामीले गर्नुभएको छ— १) महत्सेवा, २) तत्कृपा, ३) तद्धर्मश्रद्धा, ४) भगवत्कथाश्रवण, ५) भगवान्मा रति, ६) देहद्वयविवेकात्मज्ञान, ७) दृढ भक्ति, ८) भगवत्तत्त्वसाक्षात्कार र ९) भगवद्गुणाविर्भाव।

भगवान् र उहाँका भक्तहरूको सेवालाई महत्सेवा भनिन्छ। भगवान्को परिचय उहाँका भक्तहरूले नै गराउँछन्। त्यसैले उनीहरू सेवनीय हुन्। सर्वगुणसम्पन्न परमात्मा त यसै पनि सेव्य हुनुहुन्छ। भक्त र भगवान्को सेवाबाट मनुष्यलाई उहाँहरूको कृपा प्राप्त हुन्छ। **महत्सङ्गो दुरन्वयः लभ्यतेऽपि तत्कृपयैव** (नारदभक्तिसूत्र) अर्थात् महापुरुषको सङ्गत दुर्लभ भएकाले भगवान्को कृपाद्वारा मात्र त्यो प्राप्त हुन्छ। भगवत्कृपा प्राप्त भएपछि मनुष्यमा सात्त्विक आचरण र श्रद्धाको विकास हुँदै जान्छ अनि भगवत्कथा श्रवणमा पनि प्रवृत्ति बढेर जान्छ। यसबाट सांसारिक पदार्थहरूबाट उसको अनुराग हटी ऊ भगवान्मा नै रमाउन थाल्दछ। यसरी बिस्तारै भगवान्को मार्गमा अग्रसर बनिरहेको भक्त स्थूल र सूक्ष्म शरीरदेखि आफूलाई भिन्नरूपमा बुझ्दछ। यस अवस्थामा आइपुग्दा उसको भक्ति दृढ भइसकेको हुन्छ। दृढ भक्ति नै भगवत्तत्त्वसाक्षात्कारको प्रमुख साधन हो। वास्तवमा दृढ भक्ति नै तत्त्वसाक्षात्कारको रूपमा परिणत हुन्छ। तत्त्वसाक्षात्कार भएपछि भक्त भगवान्सँग अभिन्न हुन्छ र उसमा दया, शान्ति जस्ता भगवान्कै दिव्य गुणहरू प्रकट हुन थाल्दछन्।

प्रस्तुत पद्यमा आएका श्रवण आदि नवधा भक्तिहरू साधन भक्ति हुन् र यसको परिपाकबाट साध्य भक्ति उत्पन्न हुन्छ। राजर्षि निमिलाई उपदेश गर्ने क्रममा योगेश्वर प्रबुद्धले भन्नु भएको छ— **भक्त्या सञ्जातया भक्त्या बिभ्रत्युत्पुलकां तनुम्** (भागवत, ११/३/३१)। अर्थात् भक्तिबाट उत्पन्न भएको भक्तिले शरीर आनन्दले रोमाञ्चित हुन्छ। यहाँ पहिलो भक्ति पदले साधनभक्ति र दोस्रो भक्तिपदले साध्यभक्तिलाई सङ्केत गरेको हो। वैष्णवाचार्यहरूले भक्तिलाई

पाँचौं पुरुषार्थको रूपमा व्याख्या गरेका छन् तर अद्वैत वेदान्तसिद्धान्तअनुसार यसले ज्ञानको साधनका रूपमा महत्त्व पाएको छ। शङ्कराचार्यले आफ्नो असली स्वरूप ब्रह्मरूपताको चिन्तन गर्नुलाई भक्ति भन्नुभएको छ— **स्वस्वरूपानुसन्धानं भक्तिरित्यभिधीयते** (विवेकचूडामणि ३२)।

यहाँ भनिएका नवधा भक्तिमध्ये एउटालाई मात्र अवलम्बन गरेर पनि मुमुक्षु मुक्त हुन सक्दछ—

**श्रीविष्णोः श्रवणे परीक्षिदभवद् वैयासकिः कीर्तने**
**प्रह्लादः स्मरणे तदङ्घ्रिभजने लक्ष्मीः पृथुः पूजने।**
**अक्रूरस्त्वभिवन्दने कपिपतिर्दास्येऽथ सख्येऽर्जुनः**
**सर्वस्वात्मनिवेदने बलिरभूत् पर्याप्तिरेषा परा।।**

श्रवणद्वारा परीक्षित्, कीर्तनद्वारा शुकदेव, स्मरणद्वारा प्रह्लाद, पादसेवनद्वारा लक्ष्मी, पूजनद्वारा पृथु, वन्दनद्वारा अक्रूर, सेवाद्वारा हनुमान्, मित्रताद्वारा अर्जुन र आत्मनिवेदनद्वारा बलि गरी यी सबैले भगवान्लाई प्राप्त गरे। यसर्थ मानजीवनको परम पुरुषार्थरूप मोक्ष प्राप्तिका लागि भक्ति नै सहज र सुलभ साधन हो भन्ने स्पष्ट हुन्छ।

**निशम्यैतत् सुतवचो हिरण्यकशिपुस्तदा।**
**गुरुपुत्रमुवाचेदं रुषा प्रस्फुरिताधरः॥ २५॥**

**पदार्थ—**
**तदा** = त्यस वेला
**हिरण्यकशिपुः** = दैत्यराज हिरण्यकशिपुले
**एतत्** = यो
**सुतवचः** = छोराको कुरा
**निशम्य** = सुनेर
**रुषा** = रिसले
**प्रस्फुरिताधरः** = ओठ कमाउँदै
**गुरुपुत्रम्** = गुरुका छोरालाई
**इदं** = यस्तो
**उवाच** = भन्यो

**वाक्यार्थ—** आफ्नो छोरो प्रह्लादको यस्तो कुरा सुनेर दैत्यराज हिरण्यकशिपुले त्यो सुन्ने बित्तिकै क्रोधले थरथर ओठ कपाउँदै गुरुपुत्र शण्ड र अमर्कलाई यस्तो भन्न थाल्यो।

**ब्रह्मबन्धो किमेतत् ते विपक्षं श्रयतासता।**
**असारं ग्राहितो बालो मामनादृत्य दुर्मते॥ २६॥**

**पदार्थ—**
**दुर्मते** = हे बुद्धि नभएका
**ब्रह्मबन्धो** = अधम ब्राह्मण
**विपक्षं** = देवपक्षलाई
**श्रयता** = आश्रय लिने
**असता** = दुष्ट
**ते** = तिमीहरूद्वारा
**माम्** = मलाई
**अनादृत्य** = तिरस्कार गरेर
**बालः** = यो बालकलाई
**असारं** = बेकारका कुराहरू
**ग्राहितः** = पढाइयो
**एतत्** = यो
**किम्** = के गरेको

**वाक्यार्थ—** हे खराब बुद्धि भएका अधम ब्राह्मणहरू! तिमीहरू हाम्रा शत्रु देवताको पक्ष लिन्छौ। त्यसैले तिमीहरूले मेरो तिरस्कार गरिरहेका छौ र यो बालकलाई विष्णुभजन आदि बेकारका कुराहरू सिकाइरहेका छौ। तिमीहरूले यो के गरेको ?

**सन्ति ह्यसाधवो लोके दुर्मैत्राश्छद्मवेषिणः ।**

**तेषामुदेत्यघं काले रोगः पातकिनामिव ॥ २७ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **असाधवः** = दुराचारीहरू | व्यक्तिहरूको (पाप नै पछि गएर) |
| **हि** = निश्चय नै | **सन्ति** = छन् | **रोगः इव** = कुष्ठादि रोगको |
| **लोके** = लोकमा | **तेषाम्** = तिनीहरूको | रूपमा प्रकट भए झैं |
| **दुर्मैत्राः** = खराब मित्रको रूपमा | **अघं** = पाप | **काले** = कालान्तरमा |
| **छद्मवेषिणः** = कपट वेषवाला | **पातकिनाम्** = पाप गर्ने | **उदेति** = निस्कनेछ |

**वाक्यार्थ–** यो लोकमा त्यस्ता दुष्टहरू धेरै हुन्छन् जो मित्रको वेषमा रहन्छन् र कपटपूर्ण व्यवहार गर्दछन्। ती अपराधी हुन्। त्यस्ता पाप गर्ने व्यक्तिहरूको पाप नै पछि गएर कुष्ठादि रोगको रूपमा प्रकट भए झैं समय आएपछि पक्कै पनि निस्कनेछ।

**गुरुपुत्र उवाच** (गुरुपुत्रले भने)

**न मत्प्रणीतं न परप्रणीतं सुतो वदत्येष तवेन्द्रशत्रो ।**

**नैसर्गिकीयं मतिरस्य राजन् नियच्छ मन्युं कददाः स्म मा नः ॥ २८ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **न वदति** = भन्दैन र | **नैसर्गिकी** = स्वाभाविक नै हो |
| **इन्द्रशत्रो** = इन्द्रका शत्रु हे | **परप्रणीतं** = अरू कसैले | **मन्युं** = क्रोधलाई |
| हिरण्यकशिपु | पढाएको कुरो पनि | **नियच्छ** = शान्त गर्नुहोस् र |
| **एषः** = यो | **न** = भन्दैन | **नः** = हामीहरूलाई |
| **तव** = हजुरको | **राजन्** = हे महाराज | **तत् कद्** = त्यो दोषारोपण |
| **सुतः** = छोरो | **अस्य** = यो हजुरको छोराको | **मा स्म अदाः** = नदिनुहोस् |
| **मत्प्रणीतं** = मैले सिकाएको कुरो | **इयं मतिः** = यो बुद्धि | |

**वाक्यार्थ–** हे महाराज हिरण्यकशिपु ! हजुरको यो छोराले हामीहरूले सिकाएको कुरो भनेको पनि होइन र अरू कसैले पढाएको कुरो पनि भनेको होइन। हे महाराज ! हजुरको यस छोराले आफ्नै स्वाभाविक बुद्धिका कारण यी कुराहरू गरिरहेको छ त्यसैले हजुरले आफ्नो क्रोधलाई शान्त पार्नुहोस् र हामीलाई दोष पनि नलगाउनुहोस्।

**नारद उवाच** (नारदजीले भन्नुभयो)

**गुरुणैवं प्रतिप्रोक्तो भूय आहासुरः सुतम् ।**

**न चेद् गुरुमुखीयं ते कुतोऽभद्रासती मतिः ॥ २९ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | अमर्कले | **प्रतिप्रोक्तः** = प्रत्युत्तर दिएपछि |
| **गुरुणा** = गुरुपुत्र शण्ड र | **एवं** = यसरी | **असुरः** = असुर हिरण्यकशिपुले |

| | | |
|---|---|---|
| **सुतम्** = छोरालाई | **इयं** = यो | **न चेत्** = होइन भने |
| **भूयः** = फेरि पनि | **असती** = विपरीत | **ते** = तँलाई |
| **आह** = भन्यो | **मतिः** = बुद्धि | **कुतः** = कहाँबाट आयो |
| **अभद्र** = हे दुष्ट | **गुरुमुखी** = गुरुमुखबाट प्राप्त | |

**वाक्यार्थ–** गुरुपुत्र शण्ड र अमर्कले यसरी उत्तर दिइसकेपछि हिरण्यकशिपुले आफ्नो छोरो प्रह्लादलाई हप्काउँदै फेरि भन्यो– हे दुष्ट ! यदि तँलाई गुरुहरूले यस्तो कुरा पढाएका होइनन् भने तँ दुष्टले यस्ता कुरा कहाँबाट सिकिस् त ? भन् !

**प्रह्लाद उवाच** (प्रह्लादले भने)

**मतिर्न कृष्णे परतः स्वतो वा मिथोऽभिपद्येत गृहव्रतानाम् ।**
**अदान्तगोभिर्विशतां तमिस्रं पुनः पुनश्चर्वितचर्वणानाम् ॥ ३० ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **चर्वितचर्वणानाम्** = चपाइसकेका | **स्वतः** = आफूबाटै अथवा |
| **अदान्तगोभिः** = इन्द्रिय वशमा | कुरालाई फेरि चपाउने | **मिथः वा** = कोही अन्य |
| नभएको हुनाले | **गृहव्रतानाम्** = गृहासक्त | व्यक्तिबाट पनि |
| **तमिस्रं** = अन्धकारमय संसारमा | व्यक्तिहरूको | **कृष्णे** = भगवान्मा |
| **विशतां** = परिरहेका | **मतिः** = बुद्धि | **न अभिपद्येत** = लाग्दैन |
| **पुनः पुनः** = बारम्बार | **परतः** = अरू कोहीबाट | |

**वाक्यार्थ–** हे पिताजी ! अन्धकारमय संसारमा रुमल्लिएका कारण आफ्नो इन्द्रियलाई वशमा राख्न नसकेका यी गृहासक्त संसारी व्यक्तिहरू बारम्बार भोगेकै विषयहरूलाई भोगिरहन्छन्। यिनीहरूको बुद्धि स्वाभाविक रूपमा आफैँ वा कसैले भनेर अथवा कसैको सङ्गतबाट पनि कहिल्यै भगवान्मा लाग्दैन।

**विवरण–** 'गुरुले नसिकाएको भए तँलाई यस्तो दुष्टबुद्धि कताबाट आयो ?' भन्ने हिरण्यकशिपुको प्रश्नको उत्तर दिँदै प्रह्लाद भन्दछन्– 'संसारमा आसक्त भएका सामान्य मान्छेहरूको बुद्धि त आफैँ अथवा अर्काले उपदेश दिँदा पनि भगवान्मा लाग्दैन।' **गृहव्रत** अर्थात् जसको संसारका पदार्थहरूको प्राप्ति नै एक मात्र नियम, सङ्कल्प वा लक्ष्य छ त्यस्ता व्यक्तिहरू न गुरुले भनेर, न आफैँ न त एक-आपसको विचारबाट नै भगवान्मा प्रवृत्त हुन्छन्। संसारीहरू के सोच्छन् भने– उनीहरूले गरिरहेको व्यवहार उनीहरूको लागि सबैभन्दा महत्त्वपूर्ण कुरा हो। आफ्नो जाल-झेल, कपटपूर्ण व्यवहार र आसक्तिलाई बचाइराख्न उनीहरू त्यसलाई कर्तव्यको नाम दिन्छन्। तर यो सबै व्यवहार चपाइसकेको भोजनलाई बारम्बार चपाइरहनु झैं अर्थहीन छ। आफ्ना इन्द्रियहरूलाई ठिक ठाउँमा नियन्त्रित गर्न नसकी अज्ञानको खाडलमा जाकिने र त्यही इष्टमित्र, पुत्रपरिवारका पुराना घटनाक्रमलाई चपाइरहने मान्छेहरू कुनै पनि उपायले भगवान्तिर लाग्न सक्दैनन्।

**न ते विदुः स्वार्थगतिं हि विष्णुं दुराशया ये बहिरर्थमानिनः ।**
**अन्धा यथान्धैरुपनीयमाना वाचीशतन्त्यामुरुदाम्नि बद्धाः ॥ ३१ ॥**

**पदार्थ–**
**ये** = जो
**बहिः** = बाहिरी विषयप्राप्तिलाई
**अर्थमानिनः** = पुरुषार्थ ठान्ने
**दुराशयाः** = दूषित अन्तःकरण भएका व्यक्तिहरू छन्
**ते** = तिनीहरू
**ईशतन्त्याम् वाचि** = भगवान्को वेदवाणीरूप
**उरुदाम्नि** = काम्यकर्म आदिको बन्धनमा
**बद्धाः** = बाँधिएका छन्
**हि** = निश्चय नै
**ते** = तिनीहरू
**अन्धैः** = अन्धाहरूले
**उपनीयमानाः** = डोऱ्याएका
**अन्धाः यथा** = अन्धा व्यक्तिहरू झैँ
**स्वार्थगतिं** = आफ्नो पारमार्थिक गतिको रूपमा रहनुभएका
**अपि** = भए पनि
**विष्णुं** = व्यापक परमात्मालाई
**न विदुः** = जान्दैनन्

**वाक्यार्थ–** जुन मानिसहरूको अन्तःकरण दूषित भएको छ त्यस्ता मानिसहरू संसारका बाह्य विषयहरूप्रति आसक्त भइरहन्छन् किनभने उनीहरूले विषयभोगलाई नै परमपुरुषार्थ ठानेका हुन्छन्। वेदको तात्पर्यलाई नबुझ्ने केवल अर्थवाद वाक्यबाट लोभिएका र स्वर्गादिको कामना गरिरहने यी अज्ञानीहरूले कहिल्यै व्यापक परमात्मालाई बुझ्न सक्दैनन्। जसरी अन्धाले डोऱ्याएका अन्धाहरू खाडलमा पर्छन् त्यसै गरी वेदोक्त काम्यकर्ममा आसक्त यिनीहरू संसाररूपी अँध्यारो खाडलमा नै परिरहन्छन्।

**नैषां मतिस्तावदुरुक्रमाङ्घ्रिं स्पृशत्यनर्थापगमो यदर्थः ।**
**महीयसां पादरजोऽभिषेकं निष्किञ्चनानां न वृणीत यावत् ॥ ३२ ॥**

**पदार्थ–**
**यावत्** = जहिलेसम्म
**निष्किञ्चनानां** = अकिञ्चन
**महीयसां** = भगवान्का भक्तहरूको
**पादरजोऽभिषेकं** = चरणधुलीको अभिषेक
**न वृणीत** = गर्दैन
**तावत्** = त्यहाँसम्म
**एषां** = यिनीहरूको
**मतिः** = बुद्धिले
**उरुक्रमाङ्घ्रिं** = भगवान्को चरणको
**न स्पृशति** = स्पर्श गर्दैन
**यदर्थः** = जुन चरणस्पर्शको प्रयोजन
**अनर्थापगमः** = अनर्थ नष्ट हुनु हो

**वाक्यार्थ–** जबसम्म यी अज्ञानी मानिसहरूले भगवान्का भक्तहरूको चरणको धूलोलाई शिरमा धारण गर्दैनन् तबसम्म यिनीहरूको बुद्धिले जन्ममृत्युरूप अनर्थलाई नष्ट गर्ने भगवान्को चरणलाई स्पर्श गर्न सक्दैन। (भगवान्का भक्तको कृपाविना भगवान्का चरणको साक्षात्कार हुनै सक्दैन।)

**विवरण–** ज्ञानीपुरुषहरूको सङ्गतविना केवल शास्त्रको अध्ययनले मात्र मानिसहरू कर्मको जन्जालबाट मुक्त हुन सक्दैनन्। परमात्माको वेदरूपी वाणी अत्यन्त गहन र विशाल छ। अनेक मन्त्र, ब्राह्मण र स्मृतिग्रन्थहरूले कर्म र त्यसबाट प्राप्त हुने फललाई देखाएर जीवलाई जन्ममृत्युको जन्जालमा बाँधिदिन्छन्। मानिसहरू बाहिरी पदार्थहरूको प्राप्ति नै आफ्नो उद्देश्य हो भन्ने मान्छन्।

उनीहरू लाखौं पैसा खर्च गरेर पनि विषयहरूबाट आउने आनन्दमा भर पर्न चाहन्छन्, शान्ति र एकान्तको भित्री आनन्द उनीहरू कहिल्यै बुझ्न सक्दैनन्। केवल कर्म मात्रको उपदेश गर्ने व्यक्तिहरू अन्धा हुन् र उनीहरूका पछि लाग्नेहरू झन् महाअन्ध हुन्। मुण्डकोपनिषद् (१/२)मा सकाम कर्म गर्नेहरू अलिकति मात्र विधिको त्रुटि हुँदा पनि घोर दण्ड र दुःख पाउँछन् र उनीहरूका सातै लोकहरू नष्ट हुन्छन् भनिएको छ। शास्त्रमा कर्महरूको उपदेश चाहिँ दुष्कर्ममा प्रवृत्त हुन नदिनका लागि गरिएको हो तर परमात्मचिन्तनविनाका यी कर्महरूले संसाररूप अनर्थलाई नष्ट गर्न सक्दैनन्। महापुरुषहरूको सङ्गतपछि मात्र कर्मको जन्जालबाट मुक्त भई परमात्मामा बुद्धि लाग्न सक्छ।

**इत्युक्त्वोपरतं पुत्रं हिरण्यकशिपू रुषा।**
**अन्धीकृतात्मा स्वोत्सङ्गान्निरस्यत महीतले॥ ३३॥**

**पदार्थ–**
**रुषा** = रिसले
**अन्धीकृतात्मा** = अन्धो भएको
**हिरण्यकशिपुः** = हिरण्यकशिपुले
**इति** = यो कुरा
**उक्त्वा** = भनेर
**उपरतं** = चुप लागेका
**पुत्रं** = छोरा प्रह्लादलाई
**स्वोत्सङ्गात्** = आफ्नो काखबाट
**महीतले** = भुइँमा
**निरस्यत** = फ्याँकिदियो

**वाक्यार्थ–** यति कुरा गरेर प्रह्लाद चुप लागेपछि रिसले अन्धो भएको हिरण्यकशिपुले आफ्नो काखमा रहेको छोरो प्रह्लादलाई आफ्नो काखबाट उचालेर तुरुन्तै भुइँमा फ्याँकिदियो।

**आहामर्षरुषाविष्टः कषायीभूतलोचनः।**
**वध्यतामाश्वयं वध्यो निःसारयत नैर्ऋताः॥ ३४॥**

**पदार्थ–**
**अमर्षरुषा आविष्टः** = अतिशय रिसले युक्त भएको
**कषायीभूतलोचनः** = राता-राता आँखा भएको हिरण्यकशिपुले
**आह** = भन्यो
**नैर्ऋताः** = हे राक्षसहरू
**निःसारयत** = यसलाई चाँडो निकाल
**वध्यः** = मार्न लायक भएको
**अयं** = यस प्रह्लादलाई
**आशु** = चाँडै
**वध्यताम्** = मारिहाल

**वाक्यार्थ–** रिसको आवेगले राता-राता आँखा भएको हिरण्यकशिपुले दैत्यहरूलाई सम्बोधन गर्दै भन्न लाग्यो– हे राक्षसहरू! यस प्रह्लादलाई यहाँबाट निकालिहाल। यो दुष्ट मार्न लायक छ। त्यसैले यसलाई चाँडै मारिहाल।

**अयं मे भ्रातृहा सोऽयं हित्वा स्वान् सुहृदोऽधमः।**
**पितृव्यहन्तुर्यः पादौ विष्णोर्दासवदर्चति॥ ३५॥**

**पदार्थ–**
**सः** = त्यो
**मे** = मेरो

| | | |
|---|---|---|
| **भ्रातृहा** = भाइलाई मार्ने विष्णु | **स्वान्** = आफ्ना | **पादौ** = चरणलाई |
| **अयं** = यही नै हो | **सुहृदः** = बन्धुहरूलाई | **दासवत्** = दासले झैं |
| **यः** = जुन | **हित्वा** = त्यागेर | **अर्चति** = पूजा गर्दछ |
| **अयं** = यो | **पितृव्यहन्तुः** = काकालाई मार्ने | |
| **अधमः** = दुष्ट प्रह्लाद | **विष्णोः** = विष्णुको | |

**वाक्यार्थ–** त्यो मेरो भाइ हिरण्याक्षलाई मार्ने विष्णु यही नै हो। आज यो दुष्टले आफ्ना सारा बन्धुलाई त्यागेर काकालाई मार्ने विष्णुको चरणलाई दासले झैं पूजा गरिरहेको छ।

**विष्णोर्वा साध्वसौ किं नु करिष्यत्यसमञ्जसः।**

**सौहृदं दुस्त्यजं पित्रोरहाद् यः पञ्चहायनः॥ ३६॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **साधु** = राम्रो | **दुस्त्यजं** = त्याग्न नसकिने |
| **असौ** = यो | **करिष्यति** = गर्ला र | **पित्रोः** = आमा-बुबाको |
| **असमञ्जसः** = कृतघ्नले | **यः** = जुन कृतघ्नले | **सौहृदं** = स्नेहलाई |
| **विष्णोः वा** = विष्णुको पनि | **पञ्चहायनः** = पाँच वर्षको उमेरमैं | **अहात्** = त्याग्यो |
| **किं नु** = के चाहिँ | | |

**वाक्यार्थ–** यस्तो कृतघ्न व्यक्तिले त्यो विष्णुको पनि के चाहिँ राम्रो गर्ला र? जसले पाँच वर्षको सानो उमेरमा नै छाड्नै नसकिने आमा-बुबाको स्नेहलाई पनि पनि त्यागिदियो।

**परोऽप्यपत्यं हितकृद् यथौषधं स्वदेहजोऽप्यामयवत् सुतोऽहितः।**

**छिन्द्यात् तदङ्गं यदुतात्मनोऽहितं शेषं सुखं जीवति यद्विवर्जनात्॥ ३७॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **सुतः अपि** = छोरा नै भए पनि | **छिन्द्यात्** = काटेर फ्याँकोस् |
| **यथा** = जसरी | **अहितः** = अहितकर छ भने | **अथ** = किनभने |
| **औषधं** = औषधि हितकारक हुन्छ त्यसै गरी | **आमयवत्** = रोग झैं | **यद्विवर्जनात्** = जसलाई त्याग्नाले |
| **परः अपि** = शत्रु नै भए पनि | **यत्** = जुन | **शेषं** = बाँकी रहेको अङ्ग वा बाँकी व्यक्तिहरू |
| **हितकृत्** = हित गर्नेवाला छ भने | **अहितं** = शरीरलाई अहित गर्ने | **सुखं** = सुखसँग |
| **अपत्यं** = पुत्रबराबर प्रिय हुन्छ | **आत्मनः** = आफ्नो शरीरको | **जीवति** = बाँच्दछन् |
| **स्वदेहजः** = आफ्नै शरीरबाट उत्पन्न भएको | **अङ्गं** = अङ्ग छ भने | |
| | **तत्** = त्यसलाई पनि | |
| | **उत** = निश्चय नै | |

**वाक्यार्थ–** जसरी औषधि नमिठो भए पनि हितकारक हुन्छ त्यसै गरी शत्रु नै भए पनि यदि हितकारक छ भने त्यो पुत्रबराबर हुन्छ। तर आफ्नै शरीरबाट उत्पन्न भएको छोरो भए पनि आफ्नो अहित गर्छ भने त्यो रोग लागेको शरीरको अङ्गजस्तै हो। यसैले त्यसलाई तुरुन्त काटेर

फालिहाल्नुपर्छ। जसरी प्यारै भए पनि रोग लागेको अङ्गलाई काटेर फ्याँकेपछि मात्र बाँकी शरीर सुखसँग बाँच्न पाउँछ त्यसरी नै जतिसुकै प्यारो भए पनि आफ्नो अहित गर्ने व्यक्ति छ भने पनि त्यसलाई हटाइहाल्नु पर्छ अनि मात्र बाँकी व्यक्तिहरू सुखसँग बाँच्न पाउँदछन्।

**सर्वैरुपायैर्हन्तव्यः सम्भोजशयनासनैः।**

**सुहृल्लिङ्गधरः शत्रुर्मुनेर्दुष्टमिवेन्द्रियम्॥ ३८॥**

**पदार्थ–**
**मुनेः** = योगाभ्यास गर्ने मुनिको
**दुष्टम्** = चञ्चल
**इन्द्रियम् इव** = इन्द्रियलाई झैँ
**सुहृल्लिङ्गधरः** = आफन्तको वेष धारण गर्ने
**शत्रुः** = यो शत्रुलाई
**सम्भोजशयनासनैः** = खाँदा, सुत्दा, बस्दा
**सर्वैः**= सम्पूर्ण
**उपायैः** = उपायहरूद्वारा
**हन्तव्यः** = मार्नुपर्छ

**वाक्यार्थ–** जसरी योगाभ्यासरत मुनिले आफ्नो चञ्चल चित्तलाई ठीक पार्न विविध उपायहरू अपनाउँछ त्यसै गरी बन्धुको वेषमा आएको यस शत्रुलाई खाँदा, सुत्दा वा बस्दा जुनसुकै समयमा जुनसुकै उपायले पनि मार्नुपर्छ।

**नैर्ऋतास्ते समादिष्टा भर्त्रा वै शूलपाणयः।**

**तिग्मदंष्ट्रकरालास्यास्ताम्रश्मश्रुशिरोरुहाः॥ ३९॥**

**नदन्तो भैरवान् नादाँश्छिन्धि भिन्धीति वादिनः।**

**आसीनं चाहनन् शूलैः प्रह्लादं सर्वमर्मसु॥ ४०॥**

**पदार्थ–**
**भर्त्रा** = मालिक हिरण्यकशिपुले
**समादिष्टाः** = आदेश दिइएका
**तिग्मदंष्ट्रकरालास्याः** = तिखा दाह्रा र डरलाग्दा मुख भएका
**ताम्रश्मश्रुशिरोरुहाः** = राता-राता दारीजुँगा र कपाल भएका
**शूलपाणयः** = हातमा त्रिशूल लिएका
**भैरवान्** = भयङ्कर
**नादान्** = शब्दहरू
**नदन्तः** = गर्दै (कराउँदै)
**छिन्धि भिन्धि इति वादिनः** = काट्-काट् र मार्-मार् भनी हल्ला गर्ने
**ते** = ती
**नैर्ऋताः च** = राक्षसहरूले पनि
**आसीनं** = शान्तसँग बसिरहेका
**प्रह्लादं** = बालक प्रह्लादलाई
**वै** = निश्चय नै
**सर्वमर्मसु** = शरीरका सम्पूर्ण मर्म स्थानहरूमा
**शूलैः** = त्रिशूलले
**अहनन्** = हाने

**वाक्यार्थ–** जब यसरी मालिक हिरण्यकशिपुले राक्षसहरूलाई आदेश दियो त्यसपछि ती तिखा दारा र डरलाग्दा मुख भएका तथा राता-राता कपाल र दारीजुँगा भएका राक्षसहरूले हातमा त्रिशूल लिएर भयङ्कर शब्दमा काट्-काट् र मार्-मार् भन्दै शान्तसँग बसेका प्रह्लादलाई सम्पूर्ण मर्मस्थानहरूमा प्रहार गर्न थाले।

**परे ब्रह्मण्यनिर्देश्ये भगवत्यखिलात्मनि ।**

**युक्तात्मन्यफला आसन्नपुण्यस्येव सत्क्रियाः ॥ ४१ ॥**

**पदार्थ—**
**अखिलात्मनि** = सबैका आत्मस्वरूप
**अनिर्देश्ये** = वाणी र मनको विषय नभएका
**भगवति** = भगवान्
**परे ब्रह्मणि** = परब्रह्ममा
**युक्तात्मनि** = आफ्नो मनलाई स्थिर गराएका ती प्रह्लादमा
**अपुण्यस्य** = भाग्यरहित व्यक्तिले गरेका
**सत्क्रियाः इव** = लौकिक कर्महरू झैं (ती प्रहारहरू)
**अफलाः** = निष्फल भएका
**आसन्** = थिए

**वाक्यार्थ—** त्यस समयमा भक्त प्रह्लादले आफ्नो मनलाई सर्वाधिष्ठानस्वरूप परमात्मामा स्थित गराएका थिए। जुन परमात्मा मन र वाणीको विषय हुँदैन त्यस्ता परमात्मामा अवस्थित ती प्रह्लादमाथि राक्षसहरूका प्रहारहरू भाग्यहीन व्यक्तिले गरेको लौकिक कर्म निष्फल भए झैं निष्फल भएका थिए।

**प्रयासेऽपहते तस्मिन् दैत्येन्द्रः परिशङ्कितः ।**

**चकार तद्वधोपायान्निर्बन्धेन युधिष्ठिर ॥ ४२ ॥**

**पदार्थ—**
**युधिष्ठिर** = हे युधिष्ठिर
**तस्मिन्** = ती प्रह्लादलाई मार्ने क्रममा (अपनाइएका)
**प्रयासे** = प्रयासहरू
**अपहते** = विफल भएपछि
**परिशङ्कितः** = आफ्नै मृत्युको शङ्का गर्दै
**दैत्येन्द्रः** = हिरण्यकशिपुले
**निर्बन्धेन** = कस्सिएर
**तद्वधोपायान्** = प्रह्लादलाई मार्ने उपायहरू
**चकार** = गर्न थाल्यो

**वाक्यार्थ—** हे युधिष्ठिर ! जब यसरी अनेक उपाय गर्दा पनि प्रह्लादलाई मार्ने प्रयत्नहरू असफल भएपछि दैत्यराज हिरण्यकशिपु निकै सशङ्कित भयो। कतै आफ्नै मृत्यु त हुने होइन भन्ने चिन्ताले उसले अब प्रह्लादलाई मार्न कठोरभन्दा कठोर विभिन्न उपायहरू अपनाउन थाल्यो।

**दिग्गजैर्दन्दशूकैश्च अभिचारावपातनैः ।**

**मायाभिः सन्निरोधैश्च गरदानैरभोजनैः ॥ ४३ ॥**

**हिमवाय्वग्निसलिलैः पर्वताक्रमणैरपि ।**

**न शशाक यदा हन्तुमपापमसुरः सुतम् ॥**

**चिन्तां दीर्घतमां प्राप्तस्तत्कर्तुं नाभ्यपद्यत ॥ ४४ ॥**

**पदार्थ—**
**यदा** = जब
**असुरः** = हिरण्यकशिपुले
**अपापम्** = निर्दोष
**सुतम्** = छोरालाई
**दिग्गजैः** = हात्तीद्वारा कुल्चाएर

| | | |
|---|---|---|
| **दन्दशूकैः** = सर्पहरूद्वारा डसाएर | **अभोजनैः** = खान नदिएर | **न शशाक** = सकेन (त्यसपछि) |
| **अभिचारावपातनैः** = व्यभिचार कर्म र उचाल्ने पछार्ने आदि गरेर | **हिमवाय्वग्निसलिलैः च** = चिसोमा, तातोमा र आँधीबेरीमा छाडेर र | **दीर्घतमां** = अत्यन्त ठुलो |
| **मायाभिः** = राक्षसी मायाहरूद्वारा | **पर्वताक्रमणैः अपि** = अग्ला-अग्ला पर्वतहरूबाट लडाएर पनि | **चिन्तां** = चिन्तामा |
| **सन्निरोधैः** = अँध्यारो कोठामा थुनेर | **हन्तुम्** = मार्न | **प्राप्तः** = प्राप्त भयो (तैपनि) |
| **गरदानैः** = विष खुवाएर | | **तत्कर्तुं** = उसलाई मार्ने कुनै पनि उपाय |
| | | **न अभ्यपद्यत** = सुझेन |

**वाक्यार्थ–** प्रह्लादलाई मार्न ठुला-ठुला हात्तीहरूद्वारा कुल्चाइयो, सर्पद्वारा टोकाइयो, राक्षसी माया उत्पन्न गरेर मार्न लगाइयो, उचाल्ने पछार्ने गरियो, अँध्यारा कोठाहरूमा थुनियो, विष खुवाइयो, धेरै दिनसम्म खान दिइएन, आँधीबेरीमा छाडियो र अग्ला-अग्ला पर्वतहरूबाट खसालियो, यति मात्र नभएर चिसो पानीमा डुबाइयो, आगामा हालियो तैपनि हिरण्यकशिपुले निर्दोष बालक प्रह्लादलाई मार्न सकेन। यसप्रकार उसलाई मार्ने कुनै पनि उपाय नदेख्दा झन् चिन्तामा परेको हिरण्यकशिपुले यसप्रकार सोच्न थाल्यो।

**एष मे बह्वसाधूक्तो वधोपायाश्च निर्मिताः।**
**तैस्तैर्द्रोहैरसद्धर्मैर्मुक्तः स्वेनैव तेजसा ॥ ४५ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **मे** = मद्वारा | **असद्धर्मैः** = दुःख दिने खालका | **निर्मिताः** = गरियो (तर यो) |
| **एषः** = यो प्रह्लादलाई | **तैः तैः द्रोहैः** = त्रिशूलले रोप्ने, आगामा डढाउने आदि द्रोह कर्मद्वारा | **स्वेन एव** = आफ्नै |
| **बहुः** = धेरै | **वधोपायाः च** = यसलाई मार्ने धेरै उपायहरू पनि | **तेजसा** = प्रभावले |
| **असाधुः** = नराम्रा कुराहरू | | **मुक्तः** = बाँच्यो (केही भएन) |
| **उक्तः** = भनियो | | |

**वाक्यार्थ–** मैले यस प्रह्लादलाई धेरै गाली गरेँ र यसलाई मार्न कठोरभन्दा कठोर धेरै उपायहरू गरेँ तर पनि यो बालक प्रह्लाद किन हो कुन्नि ? आफ्नै प्रभावले यो बाँचिरहेको छ। यसलाई केही हुँदैन।

**वर्तमानोऽविदूरे वै बालोऽप्यजडधीरयम्।**
**न विस्मरति मेऽनार्यं शुनःशेप इव प्रभुः ॥ ४६ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अविदूरे** = नजिकै | **बालः अपि** = सानै भए तापनि | **मे** = मेरो |
| **वर्तमानः** = रहेको | **अजडधीः** = चलाख छ | **अनार्यं** = यो कुकृत्यलाई |
| **अयम्** = यो | **वै** = निश्चय नै | **शुनःशेप इव** = शुनःशेपले झैँ |
| | **प्रभुः** = समर्थ पनि छ | **न विस्मरति** = बिर्सनेछैन |

**वाक्यार्थ–** यो बालक सानै उमेरको भए पनि निकै चलाख छ। पक्कै पनि सामर्थ्यवान् यस बच्चालाई कुनै हालतमा पनि मार्न सकिँदैन किनभने यो जस्तोसुकै कष्टबाट पनि बाँच्यो। बरू अब यसले मैले गरेको द्रोहलाई अजिगर्तद्वारा बेचिएको छोरो शुनःशेपले झैं कहिल्यै बिर्सनेछैन।

**विवरण–** सम्पूर्ण प्राणीहरूको आन्तरिक शक्ति भनेको परमात्मा नै हुनुहुन्छ। उहाँ सर्वसमर्थ र सर्वज्ञ हुनुहुन्छ। भक्तहरू आफ्नो आत्मस्वरूप उहाँको भर परेर निडर बन्छन् भने जतिसुकै ठुला बलशाली भए पनि यो आन्तरिक बल नभएका व्यक्तिहरू प्रतिकूल परिस्थिति आइपर्दा डराउन थाल्छन्। आफ्नो अन्तरात्माको अस्तित्वलाई नस्विकार्ने र त्यसको आवाजलाई नसुन्नेहरू एक दिन मुन्टो निहुर्‍याउन बाध्य हुन्छन्। उनीहरूको शक्ति भनेको बाहिरी साधनहरूमा आश्रित रहेको हुन्छ। अन्तिममा जब कसैले आफ्नो रक्षा गर्ने स्थिति रहँदैन तब उनीहरू भित्र र बाहिर दुबैतिरबाट असफल बनी दुःखी बन्छन् भन्ने रहस्य यहाँ व्यक्त गरिएको छ।

**अप्रमेयानुभावोऽयमकुतश्चिद्भयोऽमरः।**
**नूनमेतद्विरोधेन मृत्युर्मे भविता न वा ॥ ४७ ॥**

**पदार्थ–**
**अप्रमेयानुभावः** = असीमित शक्तिले युक्त भएको
**अयम्** = यो बालक
**अकुतश्चिद्भयः** = कसैसँग पनि डराउँदैन
**नूनम्** = निश्चय नै (यो बालक)
**अमरः** = अमर छ
**एतद्विरोधेन** = यसको विरोधले
**मे** = मेरो
**मृत्युः** = विनाश
**भविता** = हुने हो कि
**न वा** = अथवा नहुन पनि सक्छ

**वाक्यार्थ–** यो बालक असीमित शक्तिसम्पन्न रहेछ। यो कसैदेखि डराउँदैन र कसैबाट यसको मृत्यु पनि हुँदैन। यो त अमर छ कि क्या हो। यसको विरोध गर्दा मेरै मृत्यु हुने त होइन ?

**इति तं चिन्तया किञ्चिन्म्लानश्रियमधोमुखम्।**
**शण्डामर्कावौशनसौ विविक्त इति होचतुः ॥ ४८ ॥**

**पदार्थ–**
**इति** = यसरी
**चिन्तया** = चिन्ताले
**किञ्चित्** = केही
**ग्लानश्रियम्** = शोभाहीन भएको
**अधोमुखम्** = घोसे मुन्टो लाएको
**तं** = त्यो हिरण्यकशिपुलाई
**औशनसौ** = शुक्राचार्यका पुत्र
**शण्डामर्कौ** = शण्ड र अमर्कले
**विविक्ते** = एकान्तमा
**ह** = निश्चय नै
**इति** = यस्तो
**ऊचतुः** = भन्न लागे

**वाक्यार्थ–** यसरी चिन्ताले व्याकुल भएर अँध्यारो मुख भएको र घोसे मुन्टो लगाएको हिरण्यकशिपुलाई देखेर शुक्राचार्यका पुत्र शण्ड र अमर्कले एकान्तमा यस प्रकार भन्न लागे।

**जितं त्वयैकेन जगत्त्रयं भ्रुवोर्विजृम्भणत्रस्तसमस्तधिष्ण्यपम्।**
**न तस्य चिन्त्यं तव नाथ चक्ष्महे न वै शिशूनां गुणदोषयोः पदम् ॥४९॥**

**इमं तु पाशैर्वरुणस्य बद्ध्वा निधेहि भीतो न पलायते यथा।**
**बुद्धिश्च पुंसो वयसार्यसेवया यावद् गुरुर्भार्गव आगमिष्यति॥ ५०॥**

**पदार्थ–**
**नाथ** = हे राजा
**एकेन** = एक्लै
**त्वया** = हजुरले
**भ्रुवोः** = आँखीभौँको
**विजृम्भणत्रस्तसमस्तधिष्ण्यपम्** = इसारा मात्रले डराएर सम्पूर्ण लोकपालहरू शरणमा आएको
**जगत्त्रयं** = तीनै लोकलाई
**जितं** = जित्नुभयो
**तस्य तव** = त्यस्ता हजुरको
**चिन्त्यं** = चिन्ता गर्नुपर्ने विषय
**न चक्ष्महे** = केही पनि देख्दैनौँ
**वै** = निश्चय नै
**शिशूनां** = बच्चाहरूको चरित्र
**गुणदोषयोः** = गुण र दोषको
**पदम्** = विषय
**न** = हुन सक्दैन
**यावत्** = जहिलेसम्म
**गुरुः** = गुरु (हामीहरूका बुबा)
**भार्गवः** = शुक्राचार्य
**आगमिष्यति** = आउनुहुनेछ (त्यस वेलासम्म)
**इमं तु** = यो बालकलाई त
**वरुणस्य** = वरुणको
**पाशैः** = पाशहरूले
**बद्ध्वा** = बाँधेर
**निधेहि** = राख्नुहोस्
**यथा** = जसरी
**भीतः** = डराएर
**न पलायते** = नभागोस्
**वयसा** = धेरै उमेर भएपछि (बुद्धि सप्रिएर) र
**आर्यसेवया च** = ठुला व्यक्तिहरूको सेवाले पनि
**पुंसः** = मानिसहरूको
**बुद्धिः** = विचार (परिवर्तन हुन पनि सक्छ)

**वाक्यार्थ–** हे राजा ! हजुरको आँखीभौँका इसाराको भरमा सारा लोकपालहरू थरथर हुँदै हजुरका सामु हाजिर हुने गर्दछन्। हजुरले तीनै लोकलाई आफ्नो वशमा राख्नुभएको छ। त्यस्ता हजुरको लागि यो कुरा कुनै चिन्ताको विषय होइन भन्ने हामीलाई लाग्दछ। साना बच्चाहरूको चरित्र गुण र दोषको विषय हुन सक्दैन। बरु जहिलेसम्म हाम्रा बुबा शुक्राचार्य आइपुग्नुहुन्न तहिलेसम्म यस बालकलाई वरुणको पाशले बाँधेर राखौँ जसले गर्दा यो डरले भाग्न नपाओस्। कति बालकहरू उमेर बढ्दै गएपछि बुद्धि सप्रिएर सुध्रिँदै आउँछन् र ठुला-ठुला गुरुहरूको सेवा र सङ्गतबाट पनि पछि परिवर्तित हुन्छन् त्यसैले अहिले चिन्तित बन्नुपर्ने कुनै कुरा छैन।

**तथेति गुरुपुत्रोक्तमनुज्ञायेदमब्रवीत्।**
**धर्मो ह्यस्योपदेष्टव्यो राज्ञां यो गृहमेधिनाम्॥ ५१॥**

**पदार्थ–**
**गुरुपुत्रोक्तम्** = गुरुपुत्रहरूले भनेको कुरालाई
**तथा इति** = ठीकै हो भनी
**अनुज्ञाय** = स्वीकार गरेर (हिरण्यकशिपुले)
**इदम्** = यस्तो कुरा
**अब्रवीत्** = भन्न लाग्यो
**हि** = निश्चय नै
**अस्य** = यसका लागि
**गृहमेधिनाम्** = गृहस्थहरूको र
**राज्ञां** = राजाहरूको पनि
**यः** = जुन
**धर्मः** = धर्म छ त्यो
**उपदेष्टव्यः** = सिकाउनुपर्छ

**वाक्यार्थ–** यसरी गुरुपुत्रहरूले सल्लाह दिएपछि हिरण्यकशिपुले ठिक छ त्यसै गरौँ भनी स्वीकार गरेर फेरि गुरुपुत्रहरूलाई यस बालकलाई गृहस्थहरूको र राजाहरूको धर्मको विषयमा खुब

उपदेश गर्नू है भनेर निर्देशन दियो।

**धर्ममर्थं च कामं च नितरां चानुपूर्वशः।**
**प्रह्लादायोचतू राजन् प्रश्रितावनताय च॥ ५२॥**

**पदार्थ—**
**राजन्** = हे राजा युधिष्ठिर
**प्रश्रितावनताय च** = अनुनय र विनयले समेत युक्त भएका
**प्रह्लादाय** = प्रह्लादलाई
**धर्मम्** = धर्म
**अर्थं** = अर्थ र
**कामं च** = कामको विषयमा पनि
**नितरां** = पूरै
**अनुपूर्वशः** = क्रमैले
**ऊचतू** = बताए

**वाक्यार्थ—** हे युधिष्ठिर! त्यसपछि गुरुहरूले अत्यन्त विनयले युक्त भएका प्रह्लादलाई धर्म, अर्थ र कामको विषयमा निरन्तर क्रमैसँग पूरै पढाए।

**यथा त्रिवर्गं गुरुभिरात्मने उपशिक्षितम्।**
**न साधु मेने तच्छिक्षां द्वन्द्वारामोपवर्णिताम्॥ ५३॥**

**पदार्थ—**
**गुरुभिः** = गुरुहरूद्वारा
**आत्मने** = आफूलाई
**त्रिवर्गं** = धर्म, अर्थ र कामको विषयमा
**यथा** = जसरी
**उपशिक्षितम्** = शिक्षा दिइएको थियो
**द्वन्द्वारामोपवर्णिताम्** = राग र द्वेष आदि द्वन्द्वले युक्त भएको
**तच्छिक्षां** = त्यस्तो शिक्षालाई
**साधु** = राम्रो शिक्षा भनेर
**न मेने** = मानेनन्

**वाक्यार्थ—** यसरी प्रह्लादले गुरुहरूद्वारा आफूलाई पढाइएको धर्म, अर्थ र कामरूप त्रिवर्गको शिक्षालाई राम्रो मानेनन् किनभने यो शिक्षा केवल राग, द्वेष आदि द्वन्द्व बढाउने किसिमको थियो।

**यदाचार्यः परावृत्तो गृहमेधीयकर्मसु।**
**वयस्यैर्बालकैस्तत्र सोपहूतः कृतक्षणैः॥ ५४॥**

**पदार्थ—**
**यदा** = जहिले
**आचार्यः** = गुरु शण्ड र अमर्क
**गृहमेधीयकर्मसु** = घरको काममा
**परावृत्तः** = आफ्ना घरतिर गए त्यसै वेला
**कृतक्षणैः** = अवसर पाएका
**वयस्यैः** = समान उमेरका
**बालकैः** = बालकहरूद्वारा
**सः** = ती प्रह्लाद
**तत्र** = त्यहाँ खेल्नका लागि
**उपहूतः** = बोलाइए

**वाक्यार्थ—** कुनै दिन गुरुहरू घरको काममा लागेका वेला खेल्ने अवसर पाएका समान उमेरका प्रह्लादका साथीहरूले उनलाई पनि खेल्नको लागि बोलाए।

**अथ तान् श्लक्ष्णया वाचा प्रत्याहूय महाबुधः ।**
**उवाच विद्वांस्तन्निष्ठां कृपया प्रहसन्निव ॥ ५५ ॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**तन्निष्ठां** = दैत्यबालकहरूको आफूप्रतिको आदरभावलाई
**विद्वान्** = बुझेका
**महाबुधः** = ज्ञानी प्रह्लादले पनि
**श्लक्ष्णया वाचा** = मिठो बोलीले
**तान्** = ती साथीहरूलाई
**प्रत्याहूय** = बोलाएर
**कृपया** = अति स्नेहपूर्वक
**प्रहसन् इव** = केही हाँसे झैं गरी
**उवाच** = भन्न थाले

**वाक्यार्थ–** त्यसपछि दैत्यबालकहरूले आफूलाई आदर गर्दछन् भन्ने कुरा राम्रोसँग बुझेका प्रह्लादले खेलकुदप्रति आफ्नो अनुराग नभएको कुरा जनाई सबैलाई एकै ठाउँमा जम्मा पारेर अति मिठो बोलीले मुसुमुसु हाँस्दै स्नेहपूर्वक सबैलाई भन्न थाले।

**ते तु तद्गौरवात् सर्वे त्यक्तक्रीडापरिच्छदाः ।**
**बाला न दूषितधियो द्वन्द्वारामेरितेहितैः ॥ ५६ ॥**
**पर्युपासत राजेन्द्र तन्न्यस्तहृदयेक्षणाः ।**
**तानाह करुणो मैत्रो महाभागवतोऽसुरः ॥ ५७ ॥**

**पदार्थ–**
**राजेन्द्र** = हे युधिष्ठिर
**तद्गौरवात्** = प्रह्लादको विशेषताको कारणले
**त्यक्तक्रीडापरिच्छदाः** = खेल र खेलका सामग्रीलाई त्यागेका
**द्वन्द्वारामेरितेहितैः** = रागद्वेषयुक्त व्यक्तिहरूको उपदेश र चेष्टाबाट
**न दूषितधियः** = बुद्धि नबिग्रिएका
**तन्न्यस्तहृदयेक्षणाः** = यिनै प्रह्लादमा मन र आँखा लगाएका
**ते सर्वे** = ती सबै
**बालाः तु** = दानव बालकहरूले पनि
**पर्युपासत** = सम्मान गर्न लागे
**करुणः** = दयालु
**मैत्रः** = सबैका मित्र
**महाभागवतः** = भगवान्का परमभक्त
**असुरः** = प्रह्लादले
**तान्** = ती दैत्यबालकहरूलाई
**आह** = भन्न लागे

**वाक्यार्थ–** हे युधिष्ठिर ! प्रह्लादको यस्तो गौरवपूर्ण विशेष व्यवहारले प्रभावित भएका अरू दानव बालकहरू पनि खेल्न, दौडन छाडेर यिनैका पछि लागे। विषयमा आसक्त व्यक्तिहरूसँग सङ्गत नहुनाले सफा हृदय भएका ती दैत्यबालकहरूले प्रह्लादको कुरा सुन्न उनैतिर मन लगाउँथे, आँखाले उतै हेरिरहन्थे र सम्मानपूर्वक पछि लाग्दथे। दयालु र सबैको हित चाहने भगवान्का परमभक्त प्रह्लादले ती सबै साथीहरूलाई सामने राखेर यसरी भन्न थाले।

**विवरण–** मानिस जन्मँदा सरल, अबोध र चिन्तारहित भएर जन्मिएको हुन्छ। यसैले साना बच्चाहरूमा राग-द्वेषको भावना विकसित भएको हुँदैन। ठुला व्यक्तिहरू बिस्तारै उनीहरूलाई यस संसारमा मिल्दो हुने गरी राग-द्वेष, छल-कपट र विश्वासघात आदि सिकाउँछन्। उपदेश राम्रो

गर्ने तर गलत व्यवहार गर्न सिकाउने संसारका बुभ्रुकहरू नै सबै अनर्थका मूल कारण हुन्। बच्चाहरू शिक्षित हुनु जरुरी छ तर उनीहरूले वास्तविक प्रेम, सद्भाव र सहानुभूतिको शिक्षा पाउनुपर्दछ। साना बच्चाहरूलाई भगवान्को प्रतिरूप मानिन्छ। उनीहरूबाट भगवान् पनि चाँडै प्रसन्न हुनुहुन्छ किनभने संसारका दुर्गन्धी विचारहरूले उनीहरूको बुद्धि दूषित भएको हुँदैन। जब व्यक्तिको मनभित्र संसारको दुराग्रह पस्दछ तब ऊ हजारौँ उपदेशले पनि सत्य कुरा स्वीकार गर्दैन। शास्त्रज्ञ मानिएका शण्डामर्कलाई प्रह्लादको उपदेशको पटक्कै प्रभाव परेन तर बच्चाहरू आग्रहरहित हुने भएकाले असुरका बच्चाहरूलाई उनको हृदयको भावुकताले आकर्षित गऱ्यो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां सप्तमस्कन्धे**

**प्रह्लादानुचरिते पञ्चमोऽध्यायः ॥ ५ ॥**

# अथ षष्ठोऽध्यायः

## प्रह्लादद्वारा असुरबालकहरूलाई उपदेश

**प्रह्राद उवाच** (प्रह्लादले भने)

**कौमार आचरेत् प्राज्ञो धर्मान् भागवतानिह ।**
**दुर्लभं मानुषं जन्म तदप्यध्रुवमर्थदम् ॥ १ ॥**

**पदार्थ–**
**इह** = यस संसारमा
**प्राज्ञः** = बुद्धिमान् व्यक्तिले
**कौमारे** = सानै उमेरमा
**भागवतान्** = भगवान्सम्बन्धी
**धर्मान्** = सेवा, अनुष्ठान, भजन, कीर्तन आदि धर्महरू
**आचरेत्** = गरिरहोस्
**मानुषं** = मनुष्यको
**जन्म** = जन्म
**दुर्लभं** = अत्यन्त दुर्लभ छ
**तत्** = त्यो मनुष्य शरीर
**अध्रुवम् अपि** = अनित्य भए पनि
**अर्थदम्** = परमपुरुषार्थ दिनेवाला छ

**वाक्यार्थ–** हे मित्रहरू हो ! यस संसारमा मनुष्य शरीर अत्यन्त दुर्लभ छ। त्यसैले मनुष्य शरीर प्राप्त भएको वेलामा सानै उमेरदेखि भगवान्लाई प्रसन्न पार्ने सेवा, अनुष्ठान, भजन, कीर्तन आदि कर्महरू गरिहाल्नुपर्दछ। यो अनित्य मनुष्यशरीरद्वारा परमपुरुषार्थ प्राप्त गर्न सकिन्छ।

**विवरण–** यस अध्यायमा प्रह्लादले आफ्ना साथीहरूलाई भक्ति, ज्ञान, वैराग्य आदिको उपदेश गरेका छन्। शास्त्रहरूमा मनुष्यजीवनको खुब प्रशंसा गरिएको पाइन्छ। मनुष्ययोनि बाहेकका अन्य योनिहरू भोगयोनि हुन्। मनुष्ययोनिमा नै आफ्नो प्रयास अर्थात् धर्म, अर्थ, काम र मोक्ष यी चारै पुरुषार्थहरू प्राप्त हुन सम्भव छ। सृष्टिको आरम्भमा रचना गरिएका गाई, घोडा आदि मनुष्यभिन्न शरीरहरूभित्र पसेर आफ्नो प्रयोजन सिद्ध नहुने देखी इन्द्रियका अभिमानी देवताहरूले ती शरीरलाई मन पराएनन् तर मनुष्य शरीर बनाउँदा भने उनीहरू फटपट त्यसभित्र पसे। मनुष्यको शरीरबाट भोग र मोक्ष दुबै प्राप्त गर्न सकिन्छ। त्यसैले खुसी भई उनीहरूले ईश्वरलाई साह्रै राम्रो गर्नुभयो भनी प्रशंसा गरेको प्रसङ्ग उपनिषद्मा आउँछ (ऐतरेयोपनिषद्, १/२/३)। मनुष्यले नै तत्त्वज्ञानद्वारा आफ्ना सम्पूर्ण इन्द्रियहरूलाई अखण्ड आनन्दको असीम तृप्ति दिन सक्छ, जुन तृप्ति पशु, पन्छी आदि शरीरमा रहँदा इन्द्रियाभिमानी देवताहरूलाई प्राप्त हुन सक्दैन। त्यसैले उनीहरू प्रसन्न बनेका हुन्। **ब्रह्मावलोकधिषणं मुदमाप देवः** (श्रीमद्भागवत, ११/९/२८) अर्थात् मनुष्यहरूलाई बनाएपछि त जगत्कर्ता परमात्मासमेत अत्यन्त प्रसन्न हुनुभयो किनभने उनीहरूले मात्र आफ्नो बुद्धिशक्तिको प्रयोगद्वारा जगत्कर्ता परमात्मालाई चिन्न सक्दछन्। यसप्रकार सम्पूर्ण पुरुषार्थ प्रदान गर्न सक्ने मनुष्ययोनिलाई यहाँ अर्थद भनिएको छ।

कतिपय मानिसहरू बुढो भएपछि मात्र भगवान्को चिन्तन गर्नुपर्दछ भन्ने विचार गर्दछन्। तर संसारका राग-द्वेष, चिन्ता आदि दोषहरूबाट दूषित इन्द्रिय र मनले परमात्माको चिन्तन कसरी

गर्न सक्छ र ? मान्छेले बुढो हुन्जेलसम्म अनेक संस्कारहरू सँगालिसक्छ, जसको कारणले उसको मन कहिल्यै स्थिर रहँदैन। त्यसभन्दा त बरु विधिविधान नजान्ने बालकले नै निष्कपट मनले भगवान्को सेवा गर्न सक्छ किनभने उसको मन रागद्वेष आदि दोषले दूषित भएको हुँदैन। विवेकी र धीर व्यक्तिले सानैदेखि भक्ति गर्नुपर्दछ। यो मनुष्य जन्म एकदमै अनिश्चित छ। त्यसैले बुढेसकालको भर पर्नुहुन्न किनभने बीचैमा शरीर टुङ्गियो भने यो दुर्लभ जन्म फेरि पाइन्छ वा पाइँदैन थाहा छैन। आत्मकल्याणको लागि भागवतधर्म अर्थात् भक्ति नै सर्वश्रेष्ठ हो। त्यसैले लौकिक कर्महरूलाई छाडी सानैदेखि मानिसहरूले भगवान्को नजिक हुने प्रयास गर्नुपर्दछ भन्ने प्रह्लादको उपदेश छ। भक्ति गर्न शास्त्रज्ञानको आवश्यकता छैन, बरु निश्छल हृदय चाहिन्छ। त्यसैले निश्छल हृदय भएका बालकहरू भक्तिका मुख्य अधिकारी हुन्। संसारको भोगद्वारा जुठा भएका र आकुल-व्याकुल बनेका थोत्रा इन्द्रियहरू भगवान्लाई चढाएर के फाइदा ? त्यसैले सानैमा भक्ति गर्नुपर्छ। यही नै प्रह्लादका भनाइको तात्पर्य हो।

**यथा हि पुरुषस्येह विष्णोः पादोपसर्पणम्।**
**यदेष सर्वभूतानां प्रिय आत्मेश्वरः सुहृत्॥ २॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **यथा हि** = निश्चय नै | **पादोपसर्पणम्** = चरणको नजिक रहनु अति आवश्यक छ | **आत्मा** = आत्मरूप |
| **इह** = यो मनुष्य जन्ममा | **यत्** = किनभने | **प्रियः** = प्यारा |
| **पुरुषस्य** = प्राणीहरूको लागि | **एषः** = यी भगवान् | **सुहृत्** = मित्र र |
| **विष्णोः** = भगवान् विष्णुको | **सर्वभूतानां** = सम्पूर्ण प्राणीहरूका | **ईश्वरः** = नियन्ता पनि हुनुहुन्छ |

**वाक्यार्थ—** प्राणीहरूका लागि यही मनुष्य चोलामा भगवान्को चरणको नजिक रहनु अति आवश्यक छ किनभने भगवान् सम्पूर्ण प्राणीहरूको आत्मरूपले साथै बस्नुभएको छ र उहाँ सबैका प्यारा, साथी र नियन्ता पनि हुनुहुन्छ।

**टिप्पणी—** अरू योनिमा भगवान्को आराधना हुन संभव छैन केवल यही मनुष्य चोलामा मात्र संभव छ। यदि भगवत्प्राप्तिको अभिलाषाले लागिपरेको खण्डमा सम्पूर्ण प्राणीहरूको आत्मरूपले बस्नुभएको भगवान् अवश्य प्राप्त हुनुहुनेछ।

**सुखमैन्द्रियकं दैत्या देहयोगेन देहिनाम्।**
**सर्वत्र लभ्यते दैवाद् यथा दुःखमयत्नतः॥ ३॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **दैत्याः** = हे दैत्यकुमारहरू | **दुःखम्** = दुःख प्राप्त हुन्छ त्यस्तै | **सुखम्** = सुख |
| **यथा** = जसरी (प्राणीहरूलाई) | **देहिनाम्** = प्राणीहरूका लागि | **दैवात्** = प्रारब्धवशात् |
| **अयत्नतः** = प्रयत्नविना नै | **देहयोगेन** = शरीरसँगसँगै | **सर्वत्र** = जुनसुकै योनिमा पनि |
| | **ऐन्द्रियकं** = इन्द्रिय सम्बन्धी | **लभ्यते** = प्राप्त हुन्छ |

**वाक्यार्थ–** हे दैत्यकुमारहरू ! जसरी सम्पूर्ण प्राणीहरूलाई विना प्रयास नै दुःख प्राप्त हुन्छ त्यसरी नै विषय र इन्द्रियको सम्बन्धबाट मिल्ने सुख त जुनसुकै योनिमा गए पनि शरीरसँगै स्वाभाविक रूपमा प्राप्त हुन्छ।

**तत् प्रयासो न कर्तव्यो यत आयुर्व्ययः परम्।**
**न तथा विन्दते क्षेमं मुकुन्दचरणाम्बुजम्॥ ४॥**

**पदार्थ–**
**तत्** = त्यसैले (विषयजन्य सुखको प्राप्तिका लागि)
**प्रयासः** = प्रयास
**न कर्तव्यः** = गर्नु आवश्यक छैन
**यतः** = किनभने त्यस्तो प्रयासले
**परम्** = धेरै नै
**आयुर्व्ययः** = आयुको खर्च हुन्छ
**तथा** = त्यस्तो प्रयासबाट
**क्षेमं** = कल्याण
**न विन्दते** = प्राप्त गर्न सक्दैन
**मुकुन्दचरणाम्बुजम्** = (कल्याण त) भगवान् श्रीहरिको चरणको सेवा गरेर मात्र पाउँछ

**वाक्यार्थ–** सुखदुःख चाहिँ प्रारब्धअनुसार पाइने भएकोले मानिसले विषयसुखको प्राप्तिका लागि प्रयास गर्नु बेकार हो। त्यस्तो प्रयासबाट त केवल आफ्नो आयु मात्रै क्षीण हुन्छ कुनै कल्याण प्राप्त हुँदैन। कल्याण त केवल भगवान् श्रीहरिको चरणको सेवाबाट मात्रै प्राप्त हुन्छ।

**ततो यतेत कुशलः क्षेमाय भयमाश्रितः।**
**शरीरं पौरुषं यावन्न विपद्येत पुष्कलम्॥ ५॥**

**पदार्थ–**
**ततः** = त्यसैले
**भयम्** = सांसारिक दुःखमा
**आश्रितः** = परेको
**कुशलः** = बुद्धिमान् व्यक्ति
**यावत्** = जहिलेसम्म
**पुष्कलम्** = सर्वाङ्गपूर्ण
**पौरुषं** = पुरुषार्थसाधक
**शरीरं** = यो मनुष्यशरीर
**न विपद्येत** = इन्द्रिय आदि कमजोर भएर असमर्थ बन्दैन (त्यति वेला नै)
**क्षेमाय** = कल्याणको लागि
**यतेत** = लागिपरोस्

**वाक्यार्थ–** त्यसैले संसारमा आइपुगेको बुद्धिमान् व्यक्ति शरीर कमजोर नहुँदै र इन्द्रियहरू असमर्थ नहुँदै आफ्नो कल्याणका लागि लागिहालोस्।

**पुंसो वर्षशतं ह्यायुस्तदर्धं चाजितात्मनः।**
**निष्फलं यदसौ रात्र्यां शेतेऽन्धं प्रापितस्तमः॥ ६॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**पुंसः** = मानिसको
**आयुः** = आयु
**वर्षशतं** = सय वर्ष तोकिएको छ (त्यसमा पनि)
**अजितात्मनः** = असंयमी मानिसको
**तदर्धं च** = सय वर्षको आधा पचास वर्षको आयु पनि
**निष्फलं** = बेकारमा जान्छ
**यत्** = जो
**असौ** = त्यो अज्ञानी मानिस
**रात्र्यां** = रातमा
**अन्धं** = अन्धकारमय

**तमः** = तमोगुणलाई | **प्रापितः** = प्राप्त गरेर | **शेते** = सुत्छ

**वाक्यार्थ–** यो मानिस पूर्ण आयु बाँचेमा जम्मा सय वर्ष बाँच्छ। त्यसमा पनि पचास वर्ष अन्धकारमय तमोगुण (अर्थात् रात्री)मा रुमल्लिएर असंयमी बन्दै मस्त सुत्दछ।

**मुग्धस्य बाल्ये कौमारे क्रीडतो याति विंशतिः।**

**जरया ग्रस्तदेहस्य यात्यकल्पस्य विंशतिः॥ ७॥**

**पदार्थ–**
**बाल्ये** = बालककालमा
**मुग्धस्य** = अज्ञानी रहने र
**कौमारे** = कुमार अवस्थामा
**क्रीडतः** = खेल्ने व्यक्तिको
**विंशतिः** = बीस वर्ष
**याति** = जान्छ (फेरि)
**जरया** = वृद्धावस्थाले
**ग्रस्तदेहस्य** = शरीर ग्रस्त तथा
**अकल्पस्य** = लौकिक कार्यमा असमर्थ भएका व्यक्तिको
**विंशतिः** = बीस वर्षको आयु
**याति** = बित्दछ

**वाक्यार्थ–** मनुष्यको बाल्यकालको अज्ञानावस्थामा र कौमारावस्थामा खेल्दै, डुल्दै बीस वर्ष बेकार जान्छ। त्यसै गरी वृद्धावस्थामा असमर्थ भएर केही गर्ने नसकी फेरि अरू बीस वर्षको आयु बित्दछ।

**दुरापूरेण कामेन मोहेन च बलीयसा।**

**शेषं गृहेषु सक्तस्य प्रमत्तस्यापयाति हि॥ ८॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**गृहेषु** = घरमा
**सक्तस्य** = आसक्त भएको
**प्रमत्तस्य** = कर्तव्यबोध नभएको व्यक्तिको
**दुरापूरेण** = कहिल्यै पूरा नहुने
**कामेन** = कामनाले र
**बलीयसा** = अत्यन्त बलियो
**मोहेन च** = मोहले पनि
**शेषं** = बाँकी दश वर्षको आयु
**अपयाति** = बित्छ

**वाक्यार्थ–** यसरी पूरा आयुको नब्बे वर्ष बेकारमा खर्च भएपछि उसँग जम्मा दश वर्ष बाँकी रहन्छ। त्यो दश वर्षभित्र पनि कर्तव्याकर्तव्यको बोध नभएको यस मानिसले कहिल्यै पूरा नहुने विभिन्न कामनाहरू गर्दछ।

**विवरण–** यस प्रसङ्गमा प्रह्लादले मानिसहरूको अमूल्य समय कसरी व्यर्थमा नै बितिरहेको हुन्छ भनी बताएका छन्। संसारका एक मात्र सत्य वस्तु परमात्मा हुनुहुन्छ, अरू सबै भौतिक उपलब्धिहरू केवल कल्पना मात्र हुन्। सपनामा कसैले करोडौँ रुपैयाँ कमाउन गरेको प्रयासले जाग्रत् अवस्थाका व्यवहारको एक कौडी जत्ति पनि मूल्य राख्दैन। त्यसकारण परमात्मालाई छाडी सांसारिक भोग गर्न खर्च गरिएको सम्पूर्ण समय व्यर्थ नै हो भन्ने प्रह्लादको धारणा छ। अनेकौँ जन्मका अनन्त दुःख र अनन्त पाप पनि केवल एक जन्ममा नष्ट गर्न सकिन्छ। संयम र सदाचारपूर्वक जीवन निर्वाह गरी परमात्मामा मन लगाउँदा त्यो अनन्त दुःखको क्रम टुटिहाल्छ। तर मानिसहरू यति महत्त्वपूर्ण समयलाई पनि त्यसै फालिरहेका छन्। संसारी मानिसहरू रातलाई

परमात्मचिन्तनविना सुतेरै बिताउँछन्। यस्तै उनीहरूको बालक र युवावस्थाको बीस वर्षसम्मको उमेर साथीहरूसँग खेल्दाखेल्दै बितिहाल्छ। असीभन्दा पछिका बीस वर्ष पनि असमर्थ र परनिर्भर भई बिताउनुपर्दछ। बाँकी रहेको दश वर्षमा कहिल्यै पूरा नहुने कामनाको पूर्ति पनि गर्नु छ, आलस्य र मोहमा पनि पर्नु छ, घरका कामहरू पनि गर्नु छ, अर्काको इच्छा पनि पूरा गर्नु छ। यसरी मानिस अनन्त इच्छा पूरा गर्न भ्याउँदैन। यस्तो मानिसले परमात्माको चिन्तन गर्ने फुर्सद कहाँबाट पाओस् ? यसरी संसारी मानिसहरूको दुर्दशा यहाँ बताइएको छ।

**को गृहेषु पुमान् सक्तमात्मानमजितेन्द्रियः।**
**स्नेहपाशैर्दृढैर्बद्धमुत्सहेत विमोचितुम्॥ ९॥**
**को न्वर्थतृष्णां विसृजेत् प्राणेभ्योऽपि य ईप्सितः।**
**यं क्रीणात्यसुभिः प्रेष्ठैस्तस्करः सेवको वणिक्॥ १०॥**

**पदार्थ–**
**गृहेषु** = घरपरिवारमा
**सक्तम्** = आसक्त भएको
**दृढैः** = अत्यन्त बलियो
**स्नेहपाशैः** = माया र ममतारूपी स्नेहको पाशले
**बद्धम्** = बाँधिएको
**आत्मानम्** = आफूलाई
**विमोचितुम्** = मुक्त पार्न
**अजितेन्द्रियः** = इन्द्रियमाथि विजय प्राप्त गर्न नसकेको
**कः** = कुन
**पुमान्** = मानिसले
**उत्सहेत** = हिम्मत गर्ला र
**कः नु** = कुन चाहिँ मानिसले
**अर्थतृष्णां** = धन प्राप्त गर्ने लोभलाई
**विसृजेत्** = त्याग्ला
**यः** = जो (अर्थ)
**प्राणेभ्यः अपि** = प्राणभन्दा पनि
**ईप्सितः** = प्यारो छ र
**यं** = जुन धनलाई
**तस्करः** = चोरले
**सेवकः** = सेवकले र
**वणिक्** = व्यापारीले
**प्रेष्ठैः** = अत्यन्त प्रिय
**असुभिः** = प्राणको मूल्य चुकाएर पनि
**क्रीणाति** = जम्मा पार्दछ

**वाक्यार्थ–** घर-गृहस्थमा आसक्त भएको, ममतारूपी पाशले बलियोसँग बाँधिएको अनि आफूलाई संसारबाट मुक्त पार्नका लागि आफ्नै इन्द्रियमाथि विजय प्राप्त गर्न नसकेको कुन चाहिँ मानिसले यो बन्धनबाट छुट्न हिम्मत गर्छ र ? धन-सम्पत्ति कमाउन पाए हुन्थ्यो भन्ने इच्छालाई कसले त्याग्न सक्छ। सम्पत्ति मानिसका लागि प्राणभन्दा पनि प्यारो छ। त्यसैले चोरहरू, सेवकहरू र व्यापारीहरू आफ्नो प्राणको बाजी राखेर पनि धनसम्पत्ति जम्मा पार्ने काम गर्छन्।

**विवरण–** मानिसहरूलाई सबैभन्दा बढी आफ्नो जीवन प्यारो हुन्छ। आफ्नो जीवनमा ज्यादै प्रेम हुनु भनेको सत्लाई स्वीकार गर्नु हो। प्राणीहरू वस्तुतः सत् वा परमात्मस्वरूप हुन्। त्यसैले उनीहरू रहन, हुन वा जिउन स्वतः नै चाहन्छन्। सम्पत्ति, परिवार, घर आदि बाहिरी पदार्थहरू जिउन सघाउने उपकरणहरू मात्रै हुन्। तर अज्ञानरूप अन्धकारमा फसेका मानिसहरू आफ्नो अस्तित्वको स्वाभाविक प्रेम र आनन्दलाई पनि बिर्सिएर आनन्दका बाह्य साधनमा नै अल्झिन्छन्। सम्पत्तिको लागि आफ्नो जीवन नै मिल्काउन तयार हुने मानिसहरूको दृष्टान्तद्वारा यहाँ

विषयासक्त व्यक्तिको दुरवस्थालाई प्रस्तुत गरिएको छ। सम्पत्तिको चोरी गर्दा मृत्युदण्ड हुने थाहा भएर पनि कतिपय तस्कर (चोर)हरू जीवनको वास्ता नगरी चोरी गरिरहन्छन्। कतिपय मानिसहरू पैसा र अन्य वस्तुको लोभले बाँधिएर युद्धमा होमिन्छन् र प्राणत्याग गर्दछन्। व्यापारीहरू चाहिँ लामा र अनिश्चित समुद्री यात्रामा निस्किई ज्यानको बाजी राखेर पनि सम्पत्ति कमाउन खोज्छन्। यसरी विषयासक्त मानिसहरू आफ्नो वास्तविक आनन्दमय रूपलाई बिर्सेर बाह्य विषयमा नै आसक्त बन्दछन्।

**कथं प्रियाया अनुकम्पितायाः सङ्गं रहस्यं रुचिरांश्च मन्त्रान्।**
**सुहृत्सु च स्नेहसितः शिशूनां कलाक्षराणामनुरक्तचित्तः॥ ११॥**
**पुत्रान् स्मरंस्ता दुहितॄर्हृदय्या भ्रातॄन् स्वसॄर्वा पितरौ च दीनौ।**
**गृहान् मनोज्ञोरुपरिच्छदांश्च वृत्तीश्च कुल्याः पशुभृत्यवर्गान्॥ १२॥**
**त्यजेत कोशस्कृदिवेहमानः कर्माणि लोभादवितृप्तकामः।**
**औपस्थ्यजैह्व्यं बहुमन्यमानः कथं विरज्येत दुरन्तमोहः॥ १३॥**

**पदार्थ–**
**सुहृत्सु** = आफ्नो बन्धुबान्धवमा
**स्नेहसितः** = स्नेहपाशले बाँधिएको
**अनुरक्तचित्तः** = सांसारिक पदार्थमा आसक्त भएको मानिस
**कथं च** = कसरी
**तत्** = त्यो
**अनुकम्पितायाः** = माया गर्ने
**प्रियायाः** = प्यारी स्त्रीहरूको
**रहस्यं** = एकान्तमा हुने
**सङ्गं** = सम्पर्कलाई
**रुचिरान्** = ऊसँग गफ गर्दा भएका मिठा
**मन्त्रान्** = बोलीहरूलाई
**कलाक्षराणाम्** = तोते बोल्ने
**शिशूनां** = साना बालकहरूलाई
**पुत्रान्** = पुत्रहरूलाई
**हृदय्याः** = प्यारा
**ताः** = ती विवाह गरेर दिएका
**दुहितॄः** = छोरीहरूलाई
**भ्रातॄन्** = भाइहरूलाई
**वा** = अथवा
**स्वसॄः च** = बहिनीहरूलाई पनि
**दीनौ** = अत्यन्त दुःखी
**पितरौ च** = मातापितालाई पनि
**मनोज्ञोरुपरिच्छदान्** = राम्रा बिछ्यौना आदि विलासका सामानले युक्त भएका
**कुल्याः** = कुलपरम्पराबाट प्राप्त
**गृहान्** = घरहरूलाई
**वृत्तीः** = आफ्नो जीविकालाई र
**पशुभृत्यवर्गान् च** = घरमा रहेका पशुहरू तथा सेवकहरूलाई पनि
**स्मरन्** = सम्झँदै
**कोशस्कृत् इव** = रेशम किरा झैँ
**कर्माणि** = सांसारिक कार्यमा
**ईहमानः** = रातदिन लागिरहेको
**लोभात्** = लोभले
**अवितृप्तकामः** = तृष्णा समाप्त नभएको
**औपस्थ्यजैह्व्यं** = उपस्थ इन्द्रिय र रसनेन्द्रियबाट हुने सुखलाई
**बहुमन्यमानः** = सर्वस्व सम्झने
**दुरन्तमोहः** = अन्तरहित मोहमा परेको व्यक्ति
**कथं** = कसरी
**विरज्येत** = यी पदार्थबाट विरक्त होला र कसरी
**त्यजेत** = यी पदार्थलाई त्याग्न सक्ला

**वाक्यार्थ–** सांसारिक व्यक्तिहरू आफ्ना बन्धुबान्धवको स्नेहपाशले बाँधिएका हुन्छन्। संसारका

पदार्थहरूमा अति मोहित भएका ती व्यक्तिहरू आफ्नी स्त्रीसँगको एकान्तमा हुने भेटघाट, मिठो बोलीचाली, साना केटाकेटीको तोतेबोली, अत्यन्त प्यारा, विवाह गरेर दिइएका छोरीहरू, आफ्ना दाजुभाइहरू, दिदी बहिनीहरू, अत्यन्त दुःखी भएका आफ्ना माता-पिता, राम्रा बिछ्यौना र अन्य सामग्रीहरूले भरिएको घर, कुलपरम्पराबाट प्राप्त भएको जीविका र घरका पशु तथा सेवक, यी सबैलाई सम्झँदै रेशम किरा झैँ कतैबाट फुत्कन नसक्ने गरी घेरिएका हुन्छन्। लोभले गर्दा रात-दिन संसारका कर्ममा आफ्नो तृष्णा पूर्तिका लागि लागिरहेका हुन्छन्। उनीहरूले उपस्थ इन्द्रिय र रसना इन्द्रियबाट हुने सुखलाई नै सर्वश्रेष्ठ सुख मानेका हुन्छन्। यस्तो कहिल्यै नहट्ने मोहमा फसेका व्यक्तिहरूलाई कहिले वैराग्य आउला र यी सारा पदार्थहरूलाई त्याग्न सक्लान् ?

**विवरण–** रेशम किराले आफ्नो मुखबाट रेशमी धागो निकाल्दै त्यसलाई आफ्नो वरिपरि बेर्दछ, आफूलाई धागोले बेरेर त्यहाँबाट निस्कनै सक्दैन र त्यहीँ मर्छ। त्यस्तै मानिस पनि इन्द्रियासक्तिको बन्धनमा जानी नजानी झन्-झन् फसिरहन्छ भन्ने कुरा यहाँ दृष्टान्तसहित बताइएको छ। प्राणीहरू इन्द्रियका विषयमा स्वतः नै आसक्त हुन्छन्। यसमा पनि मानिसहरू उपस्थ (जननेन्द्रिय) र जिह्वा (जिब्रो) यी दुई इन्द्रियका त पूर्ण रूपमा दास नै बनेका हुन्छन्। मिठा परिकारहरूको भोजनमा र स्त्रीपुरुषको संसर्गमा उनीहरूलाई कहिल्यै तृप्ति हुँदैन। स्त्री-पुरुषमा हुने आसक्ति कतिसम्म प्रबल हुन्छ भन्ने कुरा पुराणका विभिन्न प्रसङ्गहरूबाट पनि थाहा पाउन सकिन्छ। आफ्नो वृद्धावस्था छोरालाई दिई छोराको यौवनावस्था आफूले लिएर स्त्रीभोग गर्ने राजा ययाति, तपस्या छाडी मान्धाता राजाका पचास कन्यासँग विवाह गर्ने ऋषि सौभरि, गौतमपत्नी अहिल्यामा आँखा गाड्ने देवराज इन्द्र आदि भोगीहरूको कथा पुराणमा पाइन्छन्। दार्शनिकहरूले उपस्थ इन्द्रियलाई सबैभन्दा प्रबल इन्द्रियको रूपमा लिएका छन्। सम्पूर्ण विवेकशक्तिलाई र चेतनालाई नष्ट गरिदिने, तहसनहस पारिदिने मन्मथ अर्थात् कामदेव जसका नियन्त्रक छन् त्यो इन्द्रियलाई पूरा जित्न सक्नु भनेको जीव शिवसमान हुनु हो। उपस्थ र जिब्रोको नजिकको सम्बन्ध छ। चटपटे र स्वादिष्ट भोजन गरिरहनुपर्ने मानिसको कामवासनामाथि पटक्कै नियन्त्रण हुन सक्दैन। अरु जिब्रोलाई संयममा राख्ने हो भने अरू सबै इन्द्रियलाई सहजै जित्न सकिने कुरा शास्त्रमा बताइएको छ। **जितं सर्वं जिते रसे** (श्रीमद्भागवत, ११/८/२१) अर्थात् जिब्रोको लोलुपतामा नियन्त्रण राख्नेले सबै इन्द्रियलाई जित्न सक्छ। भोजनबाट नै मन बन्ने भएकाले स्वादमाथि नियन्त्रण राखी सात्त्विक भोजन गर्ने हो भने सम्पूर्ण इन्द्रियलाई नियन्त्रणमा राख्न सकिन्छ। त्यसैले छान्दोग्योपनिषद् (७/२६/२)मा **आहारशुद्धौ सत्त्वशुद्धिः** अर्थात् आहार शुद्ध हुँदा अन्तःकरणको शुद्धि हुन्छ भनिएको हो। यसैले उपस्थ इन्द्रिय र रसना इन्द्रियबाट हुने सुखलाई त्याग्न ज्यादै कठिन छ भन्ने कुरा यहाँ प्रतिपादन गरिएको छ।

**कुटुम्बपोषाय वियन्निजायुर्न बुध्यतेऽर्थं विहतं प्रमत्तः।**
**सर्वत्र तापत्रयदुःखितात्मा निर्विद्यते न स्वकुटुम्बरामः॥ १४॥**

**पदार्थ–** **कुटुम्बपोषाय** = केवल परिवारको पालन पोषणका लागि

**निजायुः** = आफ्नो आयु
**वियन्** = बिताउँदै गर्ने
**प्रमत्तः** = विषयमा आसक्त मानिस
**सर्वत्र** = हरेक ठाउँमा
**अर्थं** = आफ्नो पुरुषार्थ (शान्ति)
**विहतं** = नष्ट भइरहको कुरा
**न बुध्यते** = बुझ्दैन (त्यसैले)
**तापत्रयदुःखितात्मा** = आध्यात्मिक आदि तीन तापले दुःखित भएको
**स्वकुटुम्बरामः** = आफ्नै परिवारको पोषणका लागि रमाउने त्यो व्यक्ति
**न निर्विद्यते** = संसारका पदार्थबाट कहिल्यै विरक्त हुँदैन

**वाक्यार्थ–** संसारमा आसक्त भएको व्यक्तिले केवल आफ्नो परिवारको पालन पोषण गर्दा-गर्दै आयु बितेको थाहै पाउँदैन। उसको वास्तविक पुरुषार्थ गुमिरहेको पनि उसलाई थाहै हुँदैन। सधैँ आध्यात्मिक आदि तीन तापले सन्तप्त भइरहेको यस्तो सांसारिक व्यक्ति परिवारकै भरणपोषणमा रमाइरहन्छ, संसारका पदार्थबाट कहिल्यै विरक्त हुँदैन।

**वित्तेषु नित्याभिनिविष्टचेता विद्वांश्च दोषं परवित्तहर्तुः।**
**प्रेत्येह चाथाप्यजितेन्द्रियस्तदशान्तकामो हरते कुटुम्बी॥ १५॥**

**पदार्थ–**
**कुटुम्बी** = परिवारमा अनुरक्त
**वित्तेषु** = सम्पत्तिमा
**नित्याभिनिविष्टचेता** = सधैँ मन लगाइरहने
**अजितेन्द्रियः** = इन्द्रियलाई छाडा छोड्ने
**अशान्तकामः** = मनका इच्छा शान्त नभएको व्यक्ति
**इह** = यस लोकमा र
**प्रेत्य च** = परलोकमा पनि
**परवित्तहर्तुः** = अरूको धन हरण गर्ने व्यक्तिको
**दोषं** = दोषलाई
**विद्वान् च** = जान्दा-जान्दै पनि
**अथ अपि** = तैपनि
**तत्** = त्यो अर्काको धन
**हरते** = हरण गर्दछ

**वाक्यार्थ–** आफ्नो परिवारको पालन पोषणमा लागेको संसारी व्यक्ति धन-सम्पत्ति जोड्ने काममा नै सधैँ मन लगाइरहन्छ। उसले इन्द्रियलाई पनि वशमा राख्न सकेको हुँदैन। यसैले उसका मनमा अनन्त कामनाहरू हुन्छन्। अर्काको धन चोर्नेलाई यो लोक र परलोक दुबैतिर राम्रो हुँदैन भन्ने कुरा बुझ्दा-बुझ्दै पनि त्यो व्यक्ति आफ्नै कामनापूर्तिका लागि अर्काको धन हरण गर्छ।

**विद्वानपीत्थं दनुजाः कुटुम्बं पुष्णन् स्वलोकाय न कल्पते वै।**
**यः स्वीयपारक्यविभिन्नभावस्तमः प्रपद्येत यथा विमूढः॥ १६॥**

**पदार्थ–**
**दनुजाः** = हे दानवहरू
**यः** = जो व्यक्ति
**विद्वान् अपि** = विद्वान् भएर पनि
**स्वीयपारक्यविभिन्नभावः** = मेरो र अरूको भन्ने भेदभावना भएको छ त्यस्तो व्यक्ति
**इत्थं** = यसरी
**कुटुम्बं** = आफ्ना परिवारलाई
**पुष्णन्** = पाल्दै (समय बिताउँछ)
**स्वलोकाय** = आफ्नो कल्याणका लागि
**न वै कल्पते** = समर्थ हुन सक्दैन
**यथा** = जसरी
**विमूढः** = अज्ञानी व्यक्ति
**तमः** = अन्धकारमय गति (पाउँदछ त्यसरी नै यसले पनि त्यस्तै गति)
**प्रपद्येत** = प्राप्त गर्दछ

**वाक्यार्थ–** हे दैत्यकुमारहरू ! जो व्यक्ति भेदबुद्धि भएको छ त्यस्तो व्यक्ति जतिसुकै विद्वान् भए पनि आफ्नो कल्याण गर्न सक्दैन। जसरी अज्ञानी मानिसले अन्धकारमय अवस्थालाई प्राप्त गर्छ त्यस्तै आफ्नो परिवारको पालन-पोषण गरेर मात्र समय बिताउने भगवान्‌को भजनबाट विमुख भएका व्यक्तिको पनि उस्तै अन्धकारमय गति हुन्छ।

**यतो न कश्चित् क्व च कुत्रचिद् वा दीनः स्वमात्मानमलं समर्थः।**
**विमोचितुं कामदृशां विहारक्रीडामृगो यन्निगडो विसर्गः॥ १७॥**
**ततो विदूरात् परिहृत्य दैत्या दैत्येषु सङ्गं विषयात्मकेषु।**
**उपेत नारायणमादिदेवं स मुक्तसङ्गैरिषितोऽपवर्गः॥ १८॥**

**पदार्थ–**
**दैत्याः** = हे दैत्यकुमारहरू
**यतः** = जहाँबाट
**कामदृशां** = कामपूर्ण दृष्टिले हेर्ने कामिनीहरूको
**विहारक्रीडामृगः** = खेल खेल्ने मृगजस्तो
**यन्निगडः** = जहाँ हतकडी जस्तो
**विसर्गः** = पुत्रादिको उत्पत्ति हुन्छ त्यस्तो
**दीनः** = दुःखी
**कश्चित्** = जो कोही पनि
**क्व कुत्रचित् वा** = कहीं कतै पनि
**स्वम् आत्मानम्** = आफूलाई
**विमोचितुं** = मुक्त गर्न
**न समर्थः** = समर्थ छैन र
**अलं च** = पर्याप्त पनि छैन
**ततः** = त्यसैले
**विषयात्मकेषु** = विषयमा लम्पट भएका
**दैत्येषु** = दानवहरूमा
**विदूरात्** = टाढैबाट
**सङ्गं** = सङ्गतलाई
**परिहृत्य** = त्यागेर
**आदिदेवं** = आदिदेव
**नारायणम्** = नारायण प्रभुमा
**उपेत** = शरण पर
**सः** = उहाँ भगवान्
**मुक्तसङ्गैः** = विरक्तहरूद्वारा
**इषितः** = पाइनेवाला हुनुहुन्छ र
**अपवर्गः** = मोक्षस्वरूप हुनुहुन्छ

**वाक्यार्थ–** हे दैत्यकुमारहरू ! जो कामिनीहरूका खेलौना बनेका छन् र हतकडीजस्ता पुत्रादि सन्तान उत्पन्न गरेर त्यहीं रमेका छन्, ती दुःखीहरू कुनै पनि अवस्थामा मुक्त हुन सक्दैनन्। त्यसैले हे मित्रहरू हो ! विषयमा लम्पट भएका यी दानवहरूको सङ्गत टाढैबाट छाडिदेऊ र आदिदेव भगवान् नारायणको शरणमा पर। विरक्तहरूद्वारा मात्र पाइने भगवान् नारायण नै सबैको गति हुनुहुन्छ र वास्तविक मोक्षको स्वरूप पनि हुनुहुन्छ।

**न ह्यच्युतं प्रीणयतो बह्वायासोऽसुरात्मजाः।**
**आत्मत्वात् सर्वभूतानां सिद्धत्वादिह सर्वतः॥ १९॥**

**पदार्थ–**
**असुरात्मजाः** = हे दैत्यकुमारहरू
**सर्वभूतानां** = सम्पूर्ण प्राणीहरूको
**आत्मत्वात्** = आत्मस्वरूप भएको हुनाले र
**इह** = यहाँ
**सर्वतः** = सम्पूर्ण चराचर जगत्मा
**सिद्धत्वात्** = सत् स्वरूपले विद्यमान रहेकाले
**हि** = निश्चय पनि
**अच्युतं** = भगवान् नारायणलाई

**प्रीणयतः** = प्रसन्न गराउन | **बह्वायासः न** = धेरै कठिन छैन

**वाक्यार्थ–** हे मित्रहरू ! भगवान् नारायण सम्पूर्ण प्राणीहरूका आत्मस्वरूप हुनुहुन्छ र सारा चराचर जगत्मा सत्स्वरूपले रहनुभएको छ। त्यसैले उहाँलाई प्रसन्न गराउनका लागि त्यति धेरै प्रयास गर्नुपर्दैन।

**विवरण–** कुनै पनि वस्तुलाई प्राप्त गर्न निरन्तर प्रयासको आवश्यकता पर्दछ। भगवान्लाई प्राप्त गर्न वा अपरोक्ष अनुभव गर्न त झनै अनन्त जन्मको साधना, तपस्या र प्रेम चाहिने कुरा शास्त्रहरूमा बताइएको छ। संसारमा लाग्न मनलाई नियन्त्रण गर्नुपर्दैन, अज्ञानको निद्राबाट जाग्न पनि पर्दैन तर परमात्मामा लाग्न त ब्युँझन पनि पर्छ र मनलाई नियन्त्रण पनि गर्नुपर्दछ। यसैले सामान्य व्यक्तिहरूको सोचाइमा भगवान्लाई प्रसन्न पार्नु भनेको ज्यादै कठिन कार्य हो। यो काम त योगी वा तपस्वीहरूको हो भन्ने सामान्य मानिसहरूको धारणा हुन्छ। तर प्रह्लाद भन्दछन्– भगवान्लाई प्रसन्न पार्न कुनै विशेष परिश्रमको आवश्यकता पर्दैन। परमात्मालाई प्राप्त गर्न कतै बाहिर जानै पर्दैन किनभने उहाँ सबैका आत्मा हुनुहुन्छ। आफूले आफैँलाई प्रसन्न पार्नु पनि कुनै गाह्रो कुरो हो र ? भगवान् सबैका आत्मा भएकाले सधैँ प्रसन्न हुनुहुन्छ। जीवहरूले गर्ने काम त केवल उहाँका अखण्ड र व्यापक प्रेमको महत्त्वलाई सम्झने, बुझ्ने मात्र हो। अज्ञानमा बाँच्न चाहने मानिसहरू यो परम सत्यदेखि डराउँछन् र यसको प्रकाशबाट लुक्न खोज्छन्। त्यसैले उनीहरू दुःख दिने विषयहरूलाई नै सँगाल्न लागिपर्दछन्। तर विवेकी भक्तहरू परमात्माको स्वाभाविक प्रेमलाई महसुस गर्दै कृतज्ञताको भावमा डुब्छन्। त्यस्ता भक्तहरूलाई परमात्मा स्वतः प्राप्त हुनुहुन्छ। त्यसका लागि कुनै पनि अतिरिक्त प्रयास चाहिँदैन।

**परावरेषु भूतेषु ब्रह्मान्तस्थावरादिषु।**
**भौतिकेषु विकारेषु भूतेष्वथ महत्सु च॥ २०॥**
**गुणेषु गुणसाम्ये च गुणव्यतिकरे तथा।**
**एक एव परो ह्यात्मा भगवानीश्वरोऽव्ययः॥ २१॥**
**प्रत्यगात्मस्वरूपेण दृश्यरूपेण च स्वयम्।**
**व्याप्यव्यापकनिर्देश्यो ह्यनिर्देश्योऽविकल्पितः॥ २२॥**
**केवलानुभवानन्दस्वरूपः परमेश्वरः।**
**माययान्तर्हितैश्वर्य ईयते गुणसर्गया॥ २३॥**

**पदार्थ–**
**ब्रह्मान्तस्थावरादिषु** = ब्रह्मादेखि वृक्ष आदि स्थावरसम्मका | **परावरेषु** = ठुला र साना सबै पदार्थहरूमा | **भूतेषु** = पञ्च महाभूतहरूमा | **भौतिकेषु** = भौतिक | **विकारेषु** = कार्य प्रपञ्चमा | **महत्सु** = महत्तत्त्व आदिमा

**भूतेषु** = अरू सारा प्राणीहरूमा
**अथ च** = यस्तै अरू
**गुणेषु** = सत्त्व आदि गुणहरूमा
**गुणसाम्ये** = प्रकृतिमा र
**गुणव्यतिकरे च** = गुणको विकार अहङ्कार आदिमा पनि
**प्रत्यगात्मस्वरूपेण** = द्रष्टारूपले र
**दृश्यरूपेण च** = दृश्यरूपले पनि
**स्वयम्** = आफैं
**एक एव** = एउटै
**परः आत्मा** = परमात्मा हुनुहुन्छ
**हि** = निश्चय नै
**भगवान्** = परमात्मा
**ईश्वरः** = सबैका नियन्ता
**अव्ययः** = नाशरहित
**व्याप्यव्यापकनिर्देश्यः** = व्याप्य र व्यापक दुबै रूपले भन्न मिल्ने
**तथा** = त्यसै गरी
**अनिर्देश्यः** = यथार्थमा भन्न नमिल्ने पनि
**अविकल्पितः** = भेदरहित
**हि** = निश्चय नै
**केवलानुभवानन्दस्वरूपः** = केवल अनुभवबाट थाहा पाइने र आनन्द मात्र स्वरूप भएका
**गुणसर्गया** = गुणमय सृष्टि गर्ने
**मायया** = मायाशक्तिद्वारा
**अन्तर्हितैश्वर्यः** = ऐश्वर्य ढाकिएका
**परमेश्वरः** = उनै परमेश्वर नै
**ईयते** = प्राप्त हुनुहुन्छ

**वाक्यार्थ–** परमात्मा नारायण नै ब्रह्मादेखि लिएर स्थावर वृक्ष आदिसम्म ठुला र साना सबै पदार्थहरूमा हुनुहुन्छ। पञ्चमहाभूतमा, पाञ्चभौतिक कार्यप्रपञ्चमा, महत्तत्त्व आदिमा र अरू सारा प्राणीहरूमा पनि उहाँ नै हुनुहुन्छ। त्यति मात्र नभएर सत्त्व आदि गुणहरूमा, गुणसाम्यावस्थाको प्रकृतिमा, अहङ्कार आदिमा तथा द्रष्टारूपले र दृश्यरूपले पनि उहाँ एउटै परमात्मा हुनुहुन्छ। सारा चराचरको नियन्ता, नाशरहित र व्याप्य र व्यापक दुबै रूपमा रहनुभएको परमात्मा शब्द र मनको विषय हुनुहुन्न। सारा भेदरहित अनिर्वचनीय परमात्मा अनुभव र आनन्दको विषय हुनुहुन्छ। गुणमय सृष्टि गर्ने मायाको शक्तिद्वारा ढाकिनुभएका परमात्मा त्यसलाई हटाएपछि मात्र प्राप्त हुनुहुन्छ।

**तस्मात् सर्वेषु भूतेषु दयां कुरुत सौहृदम्।**
**भावमासुरमुन्मुच्य यया तुष्यत्यधोक्षजः॥ २४॥**

**पदार्थ–**
**तस्मात्** = त्यसैले
**आसुरम् भावम्** = आसुर भावलाई
**उन्मुच्य** = त्यागेर
**सर्वेषु** = सबै
**भूतेषु** = प्राणीहरूमा
**सौहृदम्** = मित्रभाव र
**दयां** = दयाभाव
**कुरुत** = गर
**यया** = जुन भावनाबाट
**अधोक्षजः** = अन्तर्यामी भगवान् श्रीहरि
**तुष्यति** = खुसी हुनुहुन्छ

**वाक्यार्थ–** हे दैत्यकुमारहरू ! त्यसैले तिमीहरूले आसुरी भावनालाई त्याग र सम्पूर्ण प्राणीहरूमा मित्रताको र दयाको भावना गर। यस्तो भावनाबाट मात्र अन्तर्यामी भगवान् श्रीहरि प्रसन्न हुनुहुन्छ।

**तुष्टे च तत्र किमलभ्यमनन्त आद्ये**
**किं तैर्गुणव्यतिकरादिह ये स्वसिद्धाः।**

**धर्मादयः किमगुणेन च काङ्क्षितेन**

**सारंजुषां चरणयोरुपगायतां नः ॥ २५ ॥**

**पदार्थ–**
**तत्र** = ती
**आद्ये** = आदिपुरुष
**अनन्ते च** = अनन्त भगवान्
**तुष्टे** = प्रसन्न भएपछि
**अलभ्यम्** = प्राप्त गर्न नसकिने
**किम्** = के छ
**इह** = यस लोकमा
**ये** = जुन
**धर्मादयः** = धर्म आदि पुरुषार्थहरू
**गुणव्यतिकरात्** = सत्त्व आदि गुणका कार्य अदृष्ट आदिद्वारा
**स्वसिद्धाः** = आफैं सिद्ध छन् भने
**तैः** = तिनीहरूद्वारा नै
**किं** = के हुन्छ
**चरणयोः** = भगवान्का चरणकमलको सेवामा
**सारंजुषां** = आनन्द अनुभव गर्ने र
**उपगायतां** = रातदिन उहाँकै कीर्तन गर्ने
**नः** = हामीहरूलाई
**काङ्क्षितेन** = सबैद्वारा इच्छा गरिने
**अगुणेन च** = निर्गुणमा लय हुने यो मोक्षद्वारा पनि
**किम्** = के हुन्छ र

**वाक्यार्थ–** आदिपुरुष भगवान् नारायण प्रसन्न भएपछि संसारमा प्राप्त गर्न नसकिने कुरा केही पनि बाँकी रहँदैन। धर्म, अर्थ आदि जति पुरुषार्थहरू छन् ती त प्रारब्धवशात् स्वतः सिद्ध हुन्छन्, तिनीहरूको केही प्रयोजन छैन। रात-दिन भगवान्को चरणको चिन्तनमा लागेर र उनैको नाम सङ्कीर्तन गरेर परमानन्दको अनुभव गर्ने हामीहरूको लागि निर्गुणमा लय हुने खालको त्यो मोक्षद्वारा पनि के हुन्छ र ?

**धर्मार्थकाम इति योऽभिहितस्त्रिवर्ग**

**ईक्षा त्रयी नयदमौ विविधा च वार्ता ।**

**मन्ये तदेतदखिलं निगमस्य सत्यं**

**स्वात्मार्पणं स्वसुहृदः परमस्य पुंसः ॥ २६ ॥**

**पदार्थ–**
**धर्मार्थकामः** = धर्म, अर्थ, काम
**इति** = इत्यादि
**त्रिवर्गः** = तीन पुरुषार्थ (वेदले)
**अभिहितः** = बताएको छ
**यः** = जो
**ईक्षा** = आत्मविद्या
**त्रयी** = कर्मविद्या
**नयदमौ** = न्याय र दण्डविद्या आदि
**विविधाः** = अरू विभिन्न
**वार्ताः** = जति कुराहरू छन्
**तत् एतत्** = ती यस्ता
**अखिलं** = सम्पूर्ण कुरा
**तदर्थम्** = उनै परमात्माको साक्षात्कारका साधन हुन् र
**स्वसुहृदः** = सबैका मित्र
**परमस्य पुंसः** = परमपुरुष परमात्मामा
**स्वात्मार्पणं** = आफूलाई समर्पण गरिदिनु नै
**निगमस्य** = वेदको
**सत्यं च** = रहस्य हो भन्ने पनि
**मन्ये** = म मान्दछु

**वाक्यार्थ–** वेदले जो धर्म, अर्थ काम यी तीन पुरुषार्थ बताएको छ त्यो पनि वास्तवमा परमात्मसाक्षात्कारकै साधन हो। त्यसै गरी आत्मविद्या, कर्मकाण्डविद्या, न्यायविद्या तथा

दण्डनीति आदि अरू जति पनि शास्त्रविहित कुराहरू छन् ती सबै परमात्मसाक्षात्कारकै साधन हुन् तर वेदको परम रहस्य चाहिँ सबैमा अन्तर्यामी रूपले रहनुभएका परमात्मामा आफूलाई नै अर्पण गरिदिनु नै हो भन्ने मलाई लाग्छ।

**विवरण**— यहाँ प्रह्लादले धर्म, अर्थ, काम, मोक्ष यी चारै पुरुषार्थहरू भगवान्का अधीनमा भएकाले तिनको प्राप्तिका लागि छुट्टै प्रयास गर्नु आवश्यक छैन भनेर बताएका छन्। धर्म, अर्थ र विषयभोग चाहिँ भगवान्ले नै दिनुहुन्छ भने मोक्ष साक्षात् भगवत्स्वरूप नै हो। भगवान् आनन्दघन हुनुहुन्छ। त्यसैले सम्पूर्ण पुरुषार्थभन्दा भगवान् श्रेष्ठ हुनुहुन्छ। उहाँलाई पाएपछि कुनै पुरुषार्थको अपेक्षा रहँदैन। भगवान्लाई प्राप्त गरेपछि मोक्ष पनि स्वतः प्राप्त हुने भएकाले त्यसको चाहना समेत गर्नुपर्दैन। वेद आदि सम्पूर्ण शास्त्रले पनि परमपुरुष परमात्माको चिन्तन गर्नुपर्दछ भन्ने निष्कर्ष दिएका छन्।

वेदमा दुई प्रकारका वाक्यहरू पाइन्छन्— विधिवाक्य र निषेधवाक्य। कुनै कार्यमा प्रवृत्त गराउने वाक्यलाई विधिवाक्य भनिन्छ। हिंसा, असत्यभाषण आदिको निषेध गर्ने वाक्यहरू निषेधवाक्य हुन्। यद्यपि वेदले अग्निहोत्र, पञ्चमहायज्ञ, तपस्या, पूजा आदि अनेकौँ विषयको विधान गरेको छ तर ती सबै विधिवाक्यहरूको तात्पर्य पनि भगवान्को स्मरण गर्नुपर्दछ भन्ने नै हो। अनि समस्त निषेधवचनहरूको तात्पर्य पनि भगवान्लाई बिर्सन हुँदैन भन्ने हो। अरु के भनिन्छ भने वेदमा मुख्य दुई ओटा मात्र स्वतन्त्र वाक्य छन्। अरू सबै वाक्यहरू ती दुई वाक्यका नै अनुचर हुन्। भगवान्लाई सम्झ र उहाँलाई कहिल्यै पनि नबिर्स यी दुई विधि र निषेधलाई बताउनुमा नै शास्त्रको परम तात्पर्य छ। भनिएको पनि छ—

**स्मर्तव्यः सर्वदा विष्णुर्विस्मर्तव्यो न जातुचित्।**
**अन्ये विधिनिषेधाः स्युरेतयोरेव किङ्कराः।।**

अर्थात् 'भगवान् विष्णुलाई सधैँ सम्झनू' वेदको विधिवाक्य हो भने 'कहिल्यै पनि नबिर्सनू' भन्ने निषेधवाक्य हो। वेदका अन्य विधिनिषेधपरक वाक्यहरू त उक्त वाक्यकै अनुचर हुन्।

**ज्ञानं तदेतदमलं दुरवापमाह**
**नारायणो नरसखः किल नारदाय।**
**एकान्तिनां भगवतस्तदकिञ्चनानां**
**पादारविन्दरजसाप्लुतदेहिनां स्यात्॥ २७॥**

**पदार्थ**—

**तत् एतत्** = जो मैले बताएँ यो
**अमलं** = निर्मल
**दुरवापम्** = अति दुर्लभ
**ज्ञानं** = ज्ञान
**नरसखः** = मानिसहरूका सखा
**नारायणः** = भगवान् नारायणले
**किल** = निश्चय नै
**नारदाय** = देवर्षि नारदजीलाई
**आह** = भन्नुभयो
**भगवतः** = भगवान्का
**एकान्तिनां** = अत्यन्त प्यारा भक्त
**अकिञ्चनानां** = सम्पूर्ण इच्छा त्यागेका र भगवान्मा मात्रै अनुराग भएका व्यक्तिहरूको

**पादारविन्दरजसा** = चरणकमलको धुलोले
**आप्लुतदेहिनां** = स्नान गरेका व्यक्तिहरूको नै
**तत्** = त्यो निर्मल ज्ञान
**स्यात्** = हुन्छ

**वाक्यार्थ–** हे दानवहरू ! मैले जो यो निर्मल एवं शुद्ध ज्ञान तिमीहरूलाई बताएँ यो ज्ञान अत्यन्त दुर्लभ छ। यो ज्ञान पहिले मानिसहरूका सखा भगवान् नारायणले नारद आदि महर्षिहरूलाई बताउनुभएको थियो। जसले सारा इच्छा त्यागेर केवल भगवान्मा मात्र प्रेम गरेका छन् र भगवान्का भक्तहरूको चरणधूलिले स्नान गरेका छन् त्यस्ता व्यक्तिहरूलाई मात्र यो निर्मल ज्ञान प्राप्त हुन्छ।

**श्रुतमेतन्मया पूर्वं ज्ञानं विज्ञानसंयुतम्।**
**धर्मं भागवतं शुद्धं नारदाद् देवदर्शनात्॥ २८॥**

**पदार्थ–**
**मया** = म प्रह्लादले
**एतत्** = यो
**विज्ञानसंयुतम्** = अनुभवले सहित
**शुद्धं ज्ञानं** = निर्मल ज्ञान र
**भागवतं** = भगवान्सम्बन्धी
**धर्मं** = श्रवण, कीर्तन आदि धर्म
**पूर्वं** = पहिले
**देवदर्शनात्** = भगवान्को दर्शन गरेका
**नारदात्** = देवर्षि नारदजीबाट
**श्रुतम्** = सुनेको हुँ

**वाक्यार्थ–** हे मित्रहरू ! मैले यो अनुभवले सहित भएको निर्मल ज्ञान र भगवान्लाई खुसी पार्ने श्रवण, कीर्तन आदि धर्म पहिले देवर्षि नारदबाट प्राप्त गरेको हुँ।

**दैत्यपुत्रा ऊचुः** (दैत्यका पुत्रहरूले भने)

**प्रह्लाद त्वं वयं चापि नर्तेऽन्यं विद्महे गुरुम्।**
**एताभ्यां गुरुपुत्राभ्यां बालानामपि हीश्वरौ॥ २९॥**
**बालस्यान्तःपुरस्थस्य महत्सङ्गो दुरन्वयः।**
**छिन्धि नः संशयं सौम्य स्याच्चेद् विस्रम्भकारणम्॥ ३०॥**

**पदार्थ–**
**प्रह्लाद** = हे प्रह्लाद
**त्वं** = तिमी र
**वयं** = हामीहरू
**अपि** = पनि
**एताभ्यां** = यी दुई
**गुरुपुत्राभ्यां** = गुरुपुत्र शण्ड र अमर्कलाई
**ऋते** = छाडेर
**अन्यं** = अरू कुनै
**गुरुम्** = गुरुलाई
**न विद्महे** = जान्दैनौं
**हि** = निश्चय नै (यी दुई गुरुहरू)
**बालानाम्** = अरू बालकहरूको
**अपि** = पनि
**ईश्वरौ** = नियन्ता र शिक्षादाता हुन्
**सौम्य** = हे सज्जन प्रह्लाद
**अन्तःपुरस्थस्य** = अन्तःपुरमा बसेका
**बालस्य** = बालक तिम्रो
**महत्सङ्गः** = महापुरुष (नारद)को सङ्गत
**दुरन्वयः** = सम्भव छैन (त्यसैले)
**नः** = हामीहरूलाई
**विस्रम्भकारणम्** = विश्वास

दिलाउने कुनै कारण
**स्यात् चेत्** = यदि छ भने
(हामीहरूको)
**संशयं च** = सन्देहलाई पनि
**छिन्धि** = निवारण गरिदेऊ

**वाक्यार्थ–** हे मित्र प्रह्लाद ! तिमीले आश्चर्यजनक कुरा गऱ्यौ। तिमी र हामी यिनै गुरुपुत्र शण्ड र अमर्कबाट सँगै पढिरहेका छौँ। उनीहरूलाई छाडेर हामी अन्यत्र गएका छैनौँ। तिमी पनि सारा बालकहरूसँगै बसेर शिक्षा लिँदैछौ भने तिमीलाई मात्रै यो ज्ञान कसरी भयो। हे प्रह्लाद ! तिमी सधैँ अन्तःपुरमा बस्ने व्यक्तिको महर्षि नारदसँग कसरी भेट भयो अनि कसरी तिमीलाई उनले ज्ञान दिए ? यी सबै सन्देहलाई निवारण गर।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां सप्तमस्कन्धे**

**प्रह्लादानुचरिते षष्ठोऽध्यायः ॥ ६ ॥**

# अथ सप्तमोऽध्यायः

## आमाको गर्भमा रहँदा प्रह्लादले नारदजीबाट प्राप्त गरेको उपदेशको वर्णन

**नारद उवाच** (नारदजीले भन्नुभयो)

**एवं दैत्यसुतैः पृष्टो महाभागवतोऽसुरः।**

**उवाच स्मयमानस्तान् स्मरन् मदनुभाषितम्॥ १॥**

**पदार्थ–**

**एवं** = यसरी
**दैत्यसुतैः** = दैत्यपुत्रहरूद्वारा
**पृष्टः** = सोधिएका
**महाभागवतः** = भगवान्का परमभक्त
**असुरः** = असुर प्रह्लादले
**मदनुभाषितम्** = मैले बताएको कुरालाई
**स्मरन्** = सम्झँदै
**स्मयमानः** = मुसुमुसु हाँस्दै
**तान्** = ती दैत्यहरूलाई
**उवाच** = भने

**वाक्यार्थ–** यसरी दैत्यकुमारहरूले सोधिसकेपछि भगवान्का परमभक्त प्रह्लादले मैले (नारदले) बताएको कुरा सम्झँदै, मुसुमुसु हाँस्दै ती दैत्यबालकहरूलाई भन्न थाले।

**प्रह्लाद उवाच** (प्रह्लादले भने)

**पितरि प्रस्थितेऽस्माकं तपसे मन्दराचलम्।**

**युद्धोद्यमं परं चक्रुर्विबुधा दानवान् प्रति॥ २॥**

**पिपीलिकैरहिरिव दिष्ट्या लोकोपतापनः।**

**पापेन पापोऽभक्षीति वादिनो वासवादयः॥ ३॥**

**पदार्थ–**

**अस्माकं** = हाम्रा
**पितरि** = बुबा (हिरण्यकशिपु)
**तपसे** = तपस्याका लागि
**मन्दराचलम्** = मन्दराचलमा
**प्रस्थिते** = गएपछि
**पिपीलिकैः** = कमिलाहरूद्वारा
**अहिः इव** = सर्पलाई (मारिए झैं)
**दिष्ट्या** = दैवसंयोगले
**पापेन** = आफूद्वारा नै गरिएका पापद्वारा
**लोकोपतापनः** = तीनै लोकलाई सन्ताप दिने
**पापः** = पापको प्रतिमूर्ति यो हिरण्यकशिपु
**अभक्षि** = खाइयो
**इति** = यस्तो
**वादिनः** = भन्दै
**वासवादयः** = इन्द्र आदि
**विबुधाः** = देवताहरूले
**दानवान् प्रति** = दानवहरूमाथि
**परं** = ठुलो
**युद्धोद्यमं** = लडाइँको तयारी
**चक्रुः** = गरे

**वाक्यार्थ–** धेरै पहिले जब हाम्रो बुबा (हिरण्यकशिपु) तपस्या गर्नको लागि मन्दराचल पर्वतमा जानुभयो त्यसपछि इन्द्र आदि देवताहरूले हाम्रो बुबालाई नदेखेर यो सारा लोकलाई सन्ताप दिने दुष्ट हिरण्यकशिपु कमिलाहरूद्वारा सर्प खाइए झैं आफ्नै पापहरूद्वारा आफैँ नष्ट भयो भन्दै सारा दानवहरूमाथि आक्रमण गर्ने तयारी गरे।

**तेषामतिबलोद्योगं निशम्यासुरयूथपाः।**
**वध्यमानाः सुरैर्भीता दुद्रुवुः सर्वतोदिशम्॥ ४॥**
**कलत्रपुत्रमित्राप्तान् गृहान् पशुपरिच्छदान्।**
**नावेक्ष्यमाणास्त्वरिताः सर्वे प्राणपरीप्सवः॥ ५॥**

**पदार्थ–**
**तेषाम्** = ती देवताहरूको
**अतिबलोद्योगं** = ठुलो बल र आक्रमणको तयारीलाई
**निशम्य** = सुनेर
**सुरैः** = देवताहरूद्वारा
**वध्यमानाः** = मारिने भयौं भनी
**भीताः** = डराएका
**प्राणपरीप्सवः** = प्राण बचाउन चाहने
**सर्वे** = सबै
**असुरयूथपाः** = दैत्यनायकहरू
**कलत्रपुत्रमित्राप्तान्** = पत्नी, पुत्र, साथीभाइ एवं गुरुजन
**पशुपरिच्छदान्** = पशु र अरू सामग्रीले सहित
**गृहान्** = घरहरूलाई समेत
**नावेक्ष्यमाणाः**= वास्तै नगरीकन
**त्वरिताः** = हतारिँदै
**सर्वतोदिशम्** = विभिन्न दिशामा
**दुद्रुवुः** = भागाभाग गरे

**वाक्यार्थ–** त्यसपछि देवताहरूको ठुलो बल र आक्रमणको तयारीलाई देखेर दानवहरू खुब डराए। देवताहरूको आक्रमणबाट अत्तालिएका दैत्यनायकहरू पनि पत्नी, पुत्र, साथीभाइ एवं गुरुजन केही नभनी पशु, घर र धन-सम्पत्तिको पनि वास्ता नगरी हतारिँदै आफ्नो प्राण बचाउनका लागि जतातत्तै भागाभाग गर्न लागे।

**व्यलुम्पन् राजशिबिरममरा जयकाङ्क्षिणः।**
**इन्द्रस्तु राजमहिषीं मातरं मम चाग्रहीत्॥ ६॥**
**नीयमानां भयोद्विग्नां रुदतीं कुररीमिव।**
**यदृच्छयागतस्तत्र देवर्षिर्ददृशे पथि॥ ७॥**
**प्राह मैनां सुरपते नेतुमर्हस्यनागसम्।**
**मुञ्च मुञ्च महाभाग सतीं परपरिग्रहम्॥ ८॥**

**पदार्थ–**
**जयकाङ्क्षिणः** = आफ्नो विजय चाहने
**अमराः** = देवताहरूले
**राजशिबिरम्** = राजभवनमा पनि
**व्यलुम्पन्** = आक्रमण गरे
**इन्द्रः तु** = इन्द्रले त
**राजमहिषीं** = दैत्यराजकी पत्नी
**मम** = मेरी

**मातरं च** = आमा कयाधुलाई पनि
**अग्रहीत्** = पक्डे (र लिएर हिँडे)
**तत्र पथि** = त्यस बाटोमा
**नीयमानां** = इन्द्रद्वारा लैजाँदै गरिएकी
**भयोद्विग्नां** = डरले थरर काँपेकी
**कुररीम् इव** = न्याउली चरीजस्तै
**रुदतीं** = रुँदै गरेकी मेरी आमालाई
**यदृच्छया** = आफ्नै इच्छाले (घुम्दै)
**आगतः** = आएका
**देवर्षिः** = देवर्षि नारदले
**ददृशे** = देख्नुभयो
**सुरपते** = हे देवराज इन्द्र
**अनागसम्** = पापरहित
**परपरिग्रहम्** = अर्काको पत्नीलाई
**नेतुम्** = लैजान
**मा अर्हसि** = योग्य छैनौ
**महाभाग** = हे देवेन्द्र
**सतीं** = पतिव्रता धर्ममा रहेकी
**एनां** = यिनलाई
**मुञ्च मुञ्च** = छाडिहाल
**प्राह** = भन्नुभयो

**वाक्यार्थ–** यसरी आफ्नो विजय चाहने देवताहरूले राजभवनमाथि पनि आक्रमण गरे। त्यसै वेला राजभवनमा रहेकी दैत्यराज हिरण्यकशिपुकी पत्नी मेरी आमा कयाधुलाई देख्नेबित्तिकै देवराज इन्द्रले पक्रिए र डोऱ्याएर लिएर हिँडे। बाटामा जाँदा-जाँदै दैवसंयोगले घुम्दै गरेका देवर्षि नारदसँग भेट भयो। त्यसपछि डरले थर-थर काँपेकी न्याउली चरीजस्ती मेरी आमालाई इन्द्रले लैजाँदै गरेको देखेर देवर्षि नारद मुनिले भन्नुभयो– हे देवराज ! अर्काकी पत्नीलाई तिमीले लैजान हुँदैन, यी पतिव्रतालाई छाडिहाल।

**इन्द्र उवाच** (इन्द्रले भन्नुभयो)

**आस्तेऽस्या जठरे वीर्यमविषह्यं सुरद्विषः।**
**आस्यतां यावत् प्रसवं मोक्ष्येऽर्थपदवीं गतः॥ ९॥**

**पदार्थ–**
**अस्याः** = यी कयाधुको
**जठरे** = पेटमा
**सुरद्विषः** = देवद्रोही हिरण्यकशिपुको
**अविषह्यं** = अत्यन्त प्रभावशाली
**वीर्यम्** = वीर्य गर्भको रूपमा
**आस्ते** = रहेको छ
**प्रसवं यावत्** = यिनी सुत्केरी नहुन्जेलसम्म
**आस्यतां** = मेरो नियन्त्रणमा बसून्
**अर्थपदवीं गतः** = आफ्नो इच्छा पूरा गरेपछि
**मोक्ष्ये** = यिनीलाई छाडिदिनेछु

**वाक्यार्थ–** हे देवर्षे ! यी कयाधुको गर्भमा देवद्रोही हिरण्यकशिपुको अत्यन्त प्रभावशाली छोरा बसेको छ। जबसम्म यिनी सुत्केरी हुन्नन् तबसम्म यिनलाई म मेरो नियन्त्रणमा राख्छु। यिनी सुत्केरी भएपछि यिनको शिशुलाई समाप्त गर्ने आफ्नो इच्छा पूरा गरेपछि मात्र म यिनलाई छाडिदिनेछु।

**नारद उवाच** (नारदजीले भन्नुभयो)

**अयं निष्किल्बिषः साक्षान्महाभागवतो महान्।**
**त्वया न प्राप्स्यते संस्थामनन्तानुचरो बली॥ १०॥**

**इत्युक्तस्तां विहायेन्द्रो देवर्षेर्मानयन् वचः।**
**अनन्तप्रियभक्त्यैनां परिक्रम्य दिवं ययौ॥ ११॥**

**पदार्थ–**
**अयं** = यो बालक
**निष्किल्बिषः** = निष्पाप छ
**साक्षान्महाभागवतः** = साक्षात् भगवान्को परमभक्त
**अनन्तानुचरः** = भगवद्गुणको अनुसरण गर्ने
**बली** = निकै शक्तिसम्पन्न र
**महान्** = प्रभावशाली छ (त्यसैले)
**त्वया** = तिमीद्वारा
**संस्थाम्** = मृत्युलाई
**न प्राप्स्यते** = प्राप्त गर्न सक्दैन
**इति** = यसरी
**उक्तः** = बताइएका
**इन्द्रः** = इन्द्र
**देवर्षेः** = देवर्षि नारदको
**वचः** = भनाइलाई
**मानयन्** = स्वीकार गर्दै
**तां** = ती मेरी आमालाई
**विहाय** = छाडेर
**अनन्तप्रियभक्त्या** = भगवान्का भक्तमाथिको अनुरागले
**एनां** = यी कयाधुलाई
**परिक्रम्य** = परिक्रमा गरेर
**दिवं** = स्वर्गतिर
**ययौ** = गए

**वाक्यार्थ–** हे इन्द्र ! यो गर्भको बालक निष्पाप छ। यिनको गर्भबाट भगवान्का परमभक्त भगवान्का गुणको अनुसरण गर्ने अत्यन्त शक्तिसम्पन्न र प्रभावशाली बालक जन्मनेछ। त्यसैले त्यो बालकलाई तिमीले मार्न सक्दैनौ। नारदको यस्तो कुरा सुनिसकेपछि इन्द्रले यो कुरामा विश्वास गर्दै मेरी आमालाई छाडेर भगवान्का भक्तमाथिको अनुरागले आमा कयाधुलाई परिक्रमा गरी आफ्नै लोक स्वर्गतिर लागे।

**ततो नो मातरमृषिः समानीय निजाश्रमम्।**
**आश्वास्येहोष्यतां वत्से यावत् ते भर्तुरागमः॥ १२॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**ऋषिः** = ती देवर्षिले
**नः मातरम्** = हाम्री आमालाई
**निजाश्रमम्** = आफ्नो आश्रममा
**समानीय** = ल्याएर
**आश्वास्य** = आश्वासन दिँदै
**वत्से** = हे पुत्री
**यावत्** = जहिले
**ते भर्तुः** = तिम्रो श्रीमान्को
**आगमः** = आगमन हुन्छ तहिलेसम्म
**इह** = यहीँ
**उष्यतां** = बस भनेर भन्नुभयो

**वाक्यार्थ–** त्यसपछि देवर्षि नारदले मेरी आमालाई आफ्नै आश्रममा लैजानुभयो र डराएकी मेरी आमालाई आश्वासन दिँदै भन्नुभयो– जहिलेसम्म तिम्रो श्रीमान् आउनुहुन्न तहिलेसम्म यहीँ मेरो आश्रममा बस।

**तथेत्यवात्सीद् देवर्षेरन्ति साप्यकुतोभया।**
**यावद् दैत्यपतिर्घोरात् तपसो न न्यवर्तत॥ १३॥**

**पदार्थ–**
**अकुतोभया** = निर्भय भएकी
**सा अपि** = ती मेरी आमाले पनि

| | | |
|---|---|---|
| **तथा इति** = हुन्छ भन्नुभयो र | **घोरात्** = डरलाग्दो | **देवर्षेः** = देवर्षि नारदको |
| **यावत्** = जहिलेसम्म | **तपसः** = तपस्याबाट | **अन्ति** = नजिकमा |
| **दैत्यपतिः** = दैत्यपति हिरण्यकशिपु | **न न्यवर्तत** = फर्किनुभएन तहिलेसम्म | **अवात्सीत्** = बस्नुभयो |

**वाक्यार्थ–** मेरी आमाले पनि नारदजीको कुरालाई स्वीकार गर्नुभयो र मेरा पिता दैत्यराज हिरण्यकशिपु घोर तपस्याबाट नफर्केसम्म देवर्षि नारदको सान्निध्यमा निर्भय भएर बस्नुभयो।

**ऋषिं पर्यचरत् तत्र भक्त्या परमया सती।**
**अन्तर्वत्नी स्वगर्भस्य क्षेमायेच्छाप्रसूतये॥ १४॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अन्तर्वत्नी** = गर्भिणी भएकी | **क्षेमाय** = कल्याणका लागि र | **ऋषिं** = ऋषिलाई |
| **सती** = पतिव्रता (मेरी आमा)ले | **इच्छाप्रसूतये** = श्रीमान् आएपछि मात्र पुत्रोत्पत्तिको कामनाले पनि | **परमया भक्त्या** = अत्यन्त भक्तिभावका साथ |
| **स्वगर्भस्य** = आफ्नो गर्भको | **तत्र** = त्यस आश्रममा | **पर्यचरत्** = सेवा गर्नुभयो |

**वाक्यार्थ–** मेरी आमा त्यस बखतमा गर्भिणी हुनुहुन्थ्यो। उहाँलाई पतिदेव फर्किएपछि मात्रै आफ्नो प्रसव भए हुन्थ्यो भन्ने इच्छा थियो। त्यसैले गर्भको कल्याण र इच्छापूर्तिका लागि उहाँले देवर्षि नारदजीको अत्यन्त भक्तिभावले सेवा गर्नुभयो।

**विवरण–** हिरण्यकशिपु तपस्या गर्न जाँदा कयाधुको गर्भमा भक्त प्रह्लाद आइसकेका थिए। सामान्यतया गर्भ रहेको दश महिनासम्ममा प्रसूति भइसक्नु पर्दछ तर हजारौँ वर्ष तपस्या गरेर हिरण्यकशिपु फर्किएपछि मात्र प्रह्लादको जन्म भएको छ। किन यस्तो भयो भन्ने शङ्काको समाधानका लागि यहाँ **इच्छाप्रसूति** भन्ने पद आएको छ। यसको अर्थ हो– आफ्नो इच्छाअनुसार बच्चा जन्माउन सक्नु। कयाधुले देवर्षि नारदसँग पति हिरण्यकशिपु तपस्याबाट फर्केपछि मात्र बच्चा जन्माउने इच्छा व्यक्त गरेकी थिइन्। कयाधुको भक्तिभावनाको कदर गर्दै नारदजीले त्यस्तो इच्छाप्रसूति हुने वर दिनुभएको हुनाले पति हिरण्यकशिपु आएपछि मात्र कयाधुले प्रह्लादलाई जन्म दिएकी हुन्। अतः हिरण्यकशिपुले तपस्यापूर्व नै गर्भाधान गरेर गए पनि प्रह्लादको जन्म ऊ फर्किएपछि मात्र भएको हो।

**ऋषिः कारुणिकस्तस्याः प्रादादुभयमीश्वरः।**
**धर्मस्य तत्त्वं ज्ञानं च मामप्युद्दिश्य निर्मलम्॥ १५॥**
**तत् तु कालस्य दीर्घत्वात् स्त्रीत्वान्मातुस्तिरोदधे।**
**ऋषिणानुगृहीतं मां नाधुनाप्यजहात् स्मृतिः॥ १६॥**

पदार्थ–

| | | |
|---|---|---|
| | **कारुणिकः** = अत्यन्त दयालु र | **ईश्वरः** = सर्वसमर्थ |

| | | |
|---|---|---|
| **ऋषिः** = देवर्षि नारदले | **उभयम् च** = यी दुबै | **ऋषिणा** = ऋषिद्वारा |
| **तस्याः** = ती मेरी आमाको र | **प्रादात्** = दिनुभयो | **अनुगृहीतं** = अनुग्रह गरिएको |
| **माम् अपि** = मलाई पनि | **मातुः** = आमाको | **मां तु** = मलाई त |
| **उद्दिश्य** = उद्देश्य गरेर | **तत्** = त्यो ज्ञान | **स्मृतिः** = त्यो ज्ञानको सम्झनाले |
| **धर्मस्य** = धर्मको | **स्त्रीत्वात्** = स्त्रीभाव भएकाले र | **अधुना अपि** = अहिले पनि |
| **निर्मलम्** = स्वच्छ | **कालस्य** = समयको | **न अजहात्** = छाडेन |
| **तत्त्वं** = तत्त्व र | **दीर्घत्वात्** = ठुलो अन्तरालले पनि | |
| **ज्ञानं** = ज्ञान | **तिरोदधे** = हरायो | |

**वाक्यार्थ–** त्यसपछि अत्यन्त दयालु र सर्वसमर्थ देवर्षि नारदले आफ्नी सेविका मेरी आमालाई र मलाई पनि उद्देश्य गरेर धर्मको स्वच्छ तत्त्व र ज्ञान समेत दिनुभयो। त्यो ज्ञान मेरी आमाले स्त्रीस्वभावको कारणले र धेरै समय भएको हुनाले बिर्सिसक्नुभयो तर ऋषिको अनुग्रहले गर्दा मलाई भने त्यो ज्ञान अहिलेसम्म पनि ताजै छ।

**भवतामपि भूयान्मे यदि श्रद्दधते वचः।**

**वैशारदी धीः श्रद्धातः स्त्रीबालानां च मे यथा॥ १७॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **अपि** = पनि (त्यो दुबै ज्ञान) | बालकहरूलाई पनि |
| **यदि** = यदि तिमीहरू पनि | **भूयात्** = प्राप्त होस् | **वैशारदी** = तत्त्वविषयक |
| **मे वचः** = मेरो कुरालाई | **यथा** = जसरी | **धीः** = ज्ञान |
| **श्रद्दधते** = श्रद्धा गर्छौ भने | **मे** = मलाई ज्ञान भयो त्यसरी नै | **श्रद्धातः** = श्रद्धाबाट नै प्राप्त |
| **भवताम्** = तिमीहरूलाई | **स्त्रीबालानां च** = स्त्रीलाई र | हुन्छ |

**वाक्यार्थ–** हे दैत्यकुमारहरू ! यदि तिमीहरू मेरो कुरामा श्रद्धा गर्छौ भने तिमीहरूलाई पनि त्यो धर्मविषयक र तत्त्वविषयक ज्ञान प्राप्त हुन्छ किनभने यदि कसैले श्रद्धापूर्वक सुन्छ भने स्त्री र बालक आदिलाई पनि ज्ञान हुन्छ।

**जन्माद्याः षडिमे भावा दृष्टा देहस्य नात्मनः।**

**फलानामिव वृक्षस्य कालेनेश्वरमूर्तिना॥ १८॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **फलानाम् इव** = फलहरूको झैँ | **दृष्टाः** = देखिएका हुन् |
| **ईश्वरमूर्तिना** = ईश्वरको | **देहस्य** = शरीरका | **आत्मनः** = आत्माका |
| प्रतिमूर्ति भएको | **इमे** = यी | **नः** = होइनन् |
| **कालेन** = समयको आधारमा | **जन्माद्याः** = जन्म आदि | |
| **वृक्षस्य** = रुखका | **षड् भावाः** = छ भावविकारहरू | |

**वाक्यार्थ–** ईश्वरमूर्ति कालको कारणले गर्दा वृक्षादिका फलफूलमा झैँ हाम्रा शरीरमा जन्मिनु,

हुनु, बढ्नु, बदलिनु, घट्नु र नष्ट हुनु आदि छ ओटा भावविकारहरू देखिन्छन् ती भावविकारहरू आत्माका होइनन्।

**विवरण—** अज्ञानीहरू शरीरलाई नै आत्मा मान्छन्। शरीरभन्दा छुट्टै आत्मालाई बुझ्नु नै तत्त्वज्ञान हो। आत्मतत्त्वलाई बुझ्न यसलाई शरीरबाट अलग्याउनु आवश्यक छ, जसलाई विवेक भनिन्छ। शरीर र आत्माको विश्लेषण गरेर यस श्लोकमा आत्मा र शरीरमा हुने यही भिन्नतालाई देखाइएको छ। यस क्रममा पहिले शरीरमा रहने धर्मलाई बताइएको छ र ती धर्महरू आत्मामा नहुने भएकाले शरीरलाई आत्माभन्दा भिन्न तत्त्वका रूपमा प्रस्तुत गरिएको छ। शरीरका धर्म हुन्— जन्मनु, हुनु, बढ्नु, परिवर्तन हुनु, घट्नु र नष्ट हुनु। यी छ ओटै विकारहरू आत्मामा छैनन्। यद्यपि आत्मामा हुनु अर्थात् सत्ताको प्रतीति छ तर त्यो सत्ता जन्मद्वारा उत्पन्न सत्ता होइन। यसकारण छ ओटा विकारभित्र पर्ने सत्ता र आत्माको नित्य सत्तामा फरक छ। यहाँ रुखको दृष्टान्त एकदेशीय उदाहरण मात्र हो। फलहरूको उत्पत्ति, स्थिति रुखमैं भए झैं संसार पनि आत्मामैं अडिएर जन्म, वृद्धि, मृत्यु आदि अवस्थाहरू प्राप्त गरिरहन्छ भन्न मात्र यो दृष्टान्त दिइएको हो। सावयव र नष्ट हुने वृक्ष अनि नित्य र व्यापक आत्माको तुलना त हुनै सक्दैन। यसरी यस श्लोकमा शरीरको स्वभाव बताएर आत्मालाई त्यसभन्दा भिन्न सिद्ध गरिएको छ।

**आत्मा नित्योऽव्ययः शुद्ध एकः क्षेत्रज्ञ आश्रयः।**
**अविक्रियः स्वदृग्हेतुर्व्यापकोऽसङ्ग्यनावृतः॥ १९॥**
**एतैर्द्वादशभिर्विद्वानात्मनो लक्षणैः परैः।**
**अहं ममेत्यसद्भावं देहादौ मोहजं त्यजेत्॥ २०॥**

**पदार्थ—**

**आत्मा** = आत्माको स्वरूप
**नित्यः** = उत्पत्ति र विनाशरहित
**अव्ययः** = अविनाशी
**अविक्रियः** = अविकारी
**शुद्धः** = शुद्ध स्वरूप
**एकः** = भेद रहित
**क्षेत्रज्ञः** = साक्षी स्वरूप
**स्वदृक्** = स्वप्रकाश
**आश्रयः** = सबैको आधार
**हेतुः** = सबैको कारण
**व्यापकः** = व्यापक
**असङ्गी** = सङ्गरहित र
**अनावृतः** = आवरणरहित छ
**विद्वान्** = विवेकीले
**एतैः** = यी बताइएका
**द्वादशभिः** = बाह्र ओटा
**आत्मनः** = आत्माका
**परैः** = श्रेष्ठ
**लक्षणैः** = लक्षणहरूद्वारा
**देहादौ** = शरीर र तत्सम्बन्धीमा
**अहं मम इति** = म र मेरो भन्ने
**मोहजं** = मोहबाट उत्पन्न हुने
**असद्भावं** = मिथ्या अभिमानलाई
**त्यजेत्** = त्यागोस्

**वाक्यार्थ—** आत्मा नित्य, अविनाशी, अविकारी, शुद्ध, एक (भेदरहित), क्षेत्रज्ञ (साक्षी), स्वप्रकाश, सर्वाधार, सबैको कारण, व्यापक, असङ्ग तथा आवरणरहित छ यी सबै आत्माका लक्षण हुन्। यी आत्माका बाह्र ओटा लक्षणलाई बुझेको विवेकीले मोहबाट उत्पन्न हुने शरीर र शरीरसम्बन्धी वस्तुमा म र मेरो भन्ने भावनालाई त्यागनुपर्दछ।

**स्वर्णं यथा ग्रावसु हेमकारः क्षेत्रेषु योगैस्तदभिज्ञ आप्नुयात् ।**
**क्षेत्रेषु देहेषु तथात्मयोगैरध्यात्मविद् ब्रह्मगतिं लभेत ॥ २१ ॥**

**पदार्थ—**
**यथा** = जसरी
**तदभिज्ञः** = कुशल
**हेमकारः** = सुनारले
**क्षेत्रेषु** = सुनका खानीमा रहेका
**ग्रावसु** = पत्थरहरूमा
**योगैः** = विभिन्न उपायद्वारा
**स्वर्णं** = सुन
**आप्नुयात्** = प्राप्त गर्दछ
**तथा** = त्यसै गरी
**क्षेत्रेषु** = क्षेत्ररूप
**देहेषु** = शरीर इत्यादिमा
**अध्यात्मवित्** = आत्मतत्त्वलाई बुझेको विवेकीले
**आत्मयोगैः** = आत्मप्राप्तिका उपायहरूद्वारा
**ब्रह्मगतिं** = ब्रह्मतत्त्व साक्षात्कार
**लभेत** = प्राप्त गर्दछ

**वाक्यार्थ—** जसरी सुन निकाल्न जानेको सुनारले सुनखानीमा ढुङ्गाहरूबाट उपाय लगाएर सुन निकाल्दछ त्यसै गरी आत्मविषयक विवेकीले पनि शरीर, इन्द्रिय आदिमा नै विविध आत्मदर्शनका उपायहरूद्वारा ब्रह्मतत्त्व साक्षात्कार गर्दछ।

**अष्टौ प्रकृतयः प्रोक्तास्त्रय एव हि तद्गुणाः ।**
**विकाराः षोडशाचार्यैः पुमानेकः समन्वयात् ॥ २२ ॥**
**देहस्तु सर्वसङ्घातो जगत्तस्थुरिति द्विधा ।**
**अत्रैव मृग्यः पुरुषो नेति नेतीत्यतत् त्यजन् ॥ २३ ॥**
**अन्वयव्यतिरेकेण विवेकेनोशतात्मना ।**
**सर्गस्थानसमाम्नायैर्विमृशद्भिरसत्वरैः ॥ २४ ॥**

**पदार्थ—**
**आचार्यैः** = कपिल आदि तत्त्ववेत्ता महर्षिहरूले
**प्रकृतयः** = प्रकृतिहरू
**अष्टौ** = आठ ओटा छन्
**विकाराः** = विकारहरू
**षोडश** = सोह्र ओटा छन्
**तद्गुणाः** = ती प्रकृतिका गुणहरू
**त्रयः एव हि** = तीन ओटा नै छन् भनेर
**प्रोक्ताः** = बताएका छन्
**समन्वयात्** = सबैमा साक्षीरूपले अन्वित हुने भएकाले
**पुमान्** = पुरुष चाहिँ
**एकः एव** = एउटा नै बताइयो
**देहः तु** = शरीर चाहिँ
**सर्वसङ्घातः** = प्रकृति र विकृतिको सङ्घातरूप छ जो
**जगत्** = जङ्गम र
**तस्थुः इति** = स्थावर गरी
**द्विधा** = दुई प्रकारको छ
**अन्वयव्यतिरेकेण** = अन्वय र व्यतिरेक सिद्धान्तको आधारमा
**विवेकेन** = विवेकपूर्वक
**उशता आत्मना** = शुद्ध मनले
**सर्गस्थानसमाम्नायैः** = जगत्को उत्पत्ति, स्थिति र लयलाई अनुसन्धान गर्दै
**विमृशद्भिः** = विचार गर्ने
**असत्वरैः** = धीर व्यक्तिहरूद्वारा
**नेति नेति इति** = 'यो आत्मा होइन, यो आत्मा होइन' भन्दै
**अतत्** = अनात्मपदार्थलाई
**त्यजन्** = त्याग्दै
**अत्र एव** = यही शरीरमा नै
**पुरुषः** = त्यो आत्मा
**मृग्यः** = खोज्नुपर्दछ

**वाक्यार्थ–** कपिल आदि तत्त्ववेत्ता महर्षिहरूका अनुसार आठ ओटा प्रकृति छन् जसभित्र मूल प्रकृति, महत्तत्त्व, अहङ्कार र पञ्चतन्मात्रा पर्दछन्। त्यसै गरी प्रकृतिका सत्त्व, रज र तम गरी तीन ओटा गुण छन्। त्यसै गरी सबैमा साक्षीरूपले बस्ने पुरुष एउटा छ र प्रकृति एवं विकृतिको संघातरूप शरीर स्थावर र जङ्गम गरी दुई प्रकारको छ। धीर व्यक्तिले शुद्ध मनले अन्वय र व्यतिरेक पद्धतिद्वारा विचार गरी संसारको उत्पत्ति, स्थिति र लयको कारणलाई अनुसन्धान गर्नुपर्दछ। अनि 'नेति नेति' वाक्यलाई आधार मानेर अनात्मपदार्थलाई त्याग्दै यही शरीरमा नै परमात्माको खोजी गर्नुपर्दछ।

**बुद्धेर्जागरणं स्वप्नः सुषुप्तिरिति वृत्तयः।**
**ता येनैवानुभूयन्ते सोऽध्यक्षः पुरुषः परः॥ २५॥**

**पदार्थ–**
**जागरणं** = जाग्रत् अवस्था
**स्वप्नः** = स्वप्न अवस्था र
**सुषुप्तिः** = सुषुप्ति अवस्था
**इति** = यी सबै
**बुद्धेः** = बुद्धिका
**वृत्तयः** = वृत्तिहरू हुन्
**ताः** = ती वृत्तिहरू
**येन एव** = जसद्वारा नै
**अनुभूयन्ते** = अनुभव गरिन्छन्
**सः** = त्यो
**परः** = शरीर र इन्द्रियभन्दा भिन्न
**पुरुषः** = अन्तर्यामी आत्मा
**अध्यक्षः** = सबैको साक्षी हो

**वाक्यार्थ–** जाग्रत्, स्वप्न र सुषुप्ति यी सबै बुद्धिका वृत्तिहरू हुन्। ती वृत्तिहरू जसद्वारा प्रकाशित हुन्छन् र तिनीहरूलाई जसले अनुभव गर्दछ त्यो शरीर, इन्द्रिय आदिभन्दा भिन्न अन्तर्यामी आत्मा सबैको साक्षी हो।

**एभिस्त्रिवर्णैः पर्यस्तैर्बुद्धिभेदैः क्रियोद्भवैः।**
**स्वरूपमात्मनो बुध्येद् गन्धैर्वायुमिवान्वयात्॥ २६॥**

**पदार्थ–**
**पर्यस्तैः** = अनात्मपदार्थ हुन् भनेर निराकरण गरिएका
**क्रियोद्भवैः** = कर्मबाट उत्पन्न
**एभिः** = यी
**त्रिवर्णैः** = त्रिगुणात्मक
**बुद्धिभेदैः** = जाग्रत् आदि अवस्थामा साक्षीको रूपमा
**अन्वयात्** = अन्वय छ भनेर
**गन्धैः** = फूलमा गन्धको आश्रयको रूपमा
**वायुम् इव** = हावालाई झैं
**आत्मनः** = आत्माको
**स्वरूपम्** = स्वरूपलाई
**बुध्येत्** = विवेकद्वारा बुझोस्

**वाक्यार्थ–** जसरी गन्धको ज्ञान गर्दा गन्धाश्रयको रूपमा हावालाई जानिन्छ त्यसै गरी विवेकी मानिसले सधैँ बदलिइरहने यी जाग्रत् आदि तीन वृत्तिको साक्षीको रूपमा सबैमा आत्माको अन्वय छ अर्थात् सबैमा आत्मा छ भनेर आत्मालाई बुझ्नुपर्दछ।

**एतद्द्वारो हि संसारो गुणकर्मनिबन्धनः।**
**अज्ञानमूलोऽपार्थोऽपि पुंसः स्वप्न इवेष्यते॥ २७॥**

| पदार्थ– | | |
|---|---|---|
| **गुणकर्मनिबन्धनः** = गुण र कर्मका कारण भएको | **एतद्‌द्वारः** = यही बुद्धिसँगको सम्बन्धका कारण देखिएको छ | **पुंसः** = मानिसको |
| **अज्ञानमूलः** = अज्ञानमूलक | **हि** = निश्चय नै | **स्वप्नः इव** = स्वप्नका पदार्थ झैँ |
| **संसारः** = यो संसारचक्र | **अपार्थः अपि** = यो संसार मिथ्या नै भए पनि | **इष्यते** = प्रतीत भइरहन्छ |

**वाक्यार्थ–** गुण र कर्मको कारण भएको एवं अज्ञानमूलक यो संसार बुद्धिवृत्तिको सङ्कल्पको आधारमा देखिएको छ। यद्यपि यो संसार वास्तविक होइन, मिथ्या नै हो तथापि निदाएको मान्छेको स्वप्नका पदार्थ झैँ यो सबैलाई प्रतीत भइरहेको छ।

**तस्माद् भवद्‌भिः कर्तव्यं कर्मणां त्रिगुणात्मनाम्।**
**बीजनिर्हरणं योगः प्रवाहोपरमो धियः॥ २८॥**

| पदार्थ– | | |
|---|---|---|
| **तस्मात्** = त्यसकारण | परिणामको हेतु भएका | **कर्तव्यं** = गर्नुपर्छ |
| **भवद्‌भिः** = तिमीहरूद्वारा | **कर्मणां** = कर्महरूको | **धियः** = बुद्धिवृत्तिहरूका |
| **त्रिगुणात्मनाम्** = तीन गुणका | **बीजनिर्हरणं** = बीजलाई नष्ट गर्ने काम | **प्रवाहोपरमः** = प्रवाहको विश्राम नै |
| | | **योगः** = योग हो |

**वाक्यार्थ–** त्यसैले हे दैत्यकुमारहरू! संसार बुद्धिमूलक छ भन्ने कुरा बुझेर तिमीहरूले तीन गुणका मूल कर्महरूको बीजलाई नष्ट गर्ने काम गर्नुपर्छ। वास्तवमा बुद्धिवृत्तिको प्रवाहलाई रोक्नु नै योग हो।

**तत्रोपायसहस्राणामयं भगवतोदितः।**
**यदीश्वरे भगवति यथा यैरञ्जसा रतिः॥ २९॥**

| पदार्थ– | | |
|---|---|---|
| **तत्र** = ती वृत्तिहरूको विश्राममा | **भगवता** = भगवान्‌ले | **भगवति** = भगवान्‌मा |
| **उपायसहस्राणाम्** = हजारौँ उपायहरूमध्ये | **उदितः** = बताउनुभएको छ | **यथा** = जसरी |
| **अयं** = यही एक उपाय नै | **यत्** = जो कि | **अञ्जसा** = सजिलैसँग |
| | **यैः** = जुन साधनद्वारा | **रतिः** = प्रेम हुन्छ |
| | **ईश्वरे** = सर्वनियामक | |

**वाक्यार्थ–** चित्तवृत्तिका प्रवाहलाई रोक्न शास्त्रमा हजारौँ उपायहरू बताइएका छन्। ती उपायहरूमध्ये जे गर्दा सर्वनियामक प्रभुमा सजिलैसँग प्रेम हुन्छ त्यही उपाय नै सर्वश्रेष्ठ उपाय हो भनेर स्वयं भगवान्‌ले भन्नुभएको छ।

**विवरण–** श्लोक २२-२९ मा ज्ञानको स्वरूपलाई बताएर त्यसका मुख्य साधनको चर्चा गरिएको छ। यी श्लोकमा उल्लेख गरिएअनुसार जाग्रत्, स्वप्न र सुषुप्ति यी तीन अवस्थाभन्दा त्यसको द्रष्टा आत्मा भिन्नै हो र यो संसारको बन्धन वास्तवमा नभए पनि स्वप्नसमान केवल प्रतीत

भएको मात्र हो। यो कुरो बुझ्न र अज्ञान नाश गर्नको लागि मुख्य साधन भगवान्को भक्ति नै हो। **भक्त्या मामभिजानाति यावान् यश्चास्मि तत्त्वतः** (श्रीमद्भगवद्गीता, १८/५५) अर्थात् भक्तिद्वारा नै मनुष्यले म जस्तो छु त्यही रूपमा मलाई जान्न सक्दछ भनी भगवान्ले बताउनुभएको छ। यस्तै उपनिषद्मा पनि **श्रद्धाभक्तिध्यानयोगाद् अवेहि** अर्थात् श्रद्धा, भक्ति र ध्यानयोगद्वारा आत्मालाई जान्नुपर्छ भन्ने कुरा बताइएको छ। त्यसैले संसारको मूल कारण अज्ञानको नाश गर्ने अनेकौँ उपायमध्ये सजिलो उपाय भक्तिलाई मानिएको छ। विवेक र वैराग्यको साधनाद्वारा निर्गुण परमात्मालाई आफ्नै मात्र प्रयासले पाउन सकिन्छ तर त्यो अव्यक्तलाई समात्ने बाटो अत्यन्त दुर्गम छ (श्रीमद्भगवद्गीता, १२/५)। त्यसको अपेक्षा भक्तिमा सुगमता छ किनभने यसमा भक्तको रक्षा र अज्ञाननाश गर्न भगवान् आफैँ लागिपर्नुहुन्छ। भक्तिको अन्तिम बिन्दु भनेको सजिलैसित परमात्मामा प्रेम हुनु हो। परमप्रेमद्वारा जब भक्तहरू परमात्मामा निरन्तर रमाउँछन् तब परमात्मा उनीहरूको अज्ञानको नाश गरिदिनुहुन्छ र उसका बुद्धिवृत्तिका प्रवाहहरू शान्त हुन्छन्। यसरी अज्ञाननाशपूर्वक अन्तःकरणका वृत्तिलाई शान्त गर्ने प्रमुख उपाय भक्ति नै हो।

**गुरुशुश्रूषया भक्त्या सर्वलब्धार्पणेन च।**
**सङ्गेन साधुभक्तानामीश्वराराधनेन च॥ ३०॥**
**श्रद्धया तत्कथायां च कीर्तनैर्गुणकर्मणाम्।**
**तत्पादाम्बुरुहध्यानात्तल्लिङ्गेक्षार्हणादिभिः॥ ३१॥**
**हरिः सर्वेषु भूतेषु भगवानास्त ईश्वरः।**
**इति भूतानि मनसा कामैस्तैः साधु मानयेत्॥ ३२॥**

पदार्थ—
**गुरुशुश्रूषया** = गुरुजनको सेवाले
**भक्त्या** = भगवान्मा भक्तिले
**सर्वलब्धार्पणेन** = प्राप्त भएका सम्पूर्ण वस्तुहरू अर्पण गर्नाले
**साधुभक्तानाम् च** = सज्जन र भगवान्का भक्तहरूको पनि
**सङ्गेन** = सङ्गतले र
**ईश्वराराधनेन च** = भगवान्को आराधनाले पनि
**तत्कथायां** = भगवान्को कथामा
**श्रद्धया** = श्रद्धाले
**गुणकर्मणाम्** = भगवान्का गुण र कर्महरूको
**कीर्तनैः** = कीर्तनद्वारा
**तत्पादाम्बुरुहध्यानात्** = उनै भगवान्का चरणकमलको ध्यान गर्नाले र
**तल्लिङ्गेक्षार्हणादिभिः च** = उनै भगवान्का प्रतिमाको दर्शन र पूजन आदिले पनि
**ईश्वरः** = सर्वनियन्ता
**भगवान्** = भगवान्
**हरिः** = श्रीहरि
**सर्वेषु** = सम्पूर्ण
**भूतेषु** = प्राणीहरूमा
**आस्ते** = बस्नुहुन्छ
**इति** = यसरी भावना गरेर
**भूतानि** = सम्पूर्ण प्राणीहरू
**तैः** = ती-ती सम्पूर्ण
**कामैः** = कामनाले पूर्ण बनून् भन्दै
**मनसा** = मन-मनले सबैको
**साधु** = यथोचित
**मानयेत्** = सम्मान गरोस्

**वाक्यार्थ–** गुरुहरूको सेवा गर्ने, भगवान्मा भक्ति गर्ने, प्राप्त भएका सम्पूर्ण कुराहरू भगवान्मा अर्पण गर्ने, सज्जन र भगवान्का भक्तहरूको सङ्गत गर्ने, भगवान्को आराधना गर्ने, कथा सुन्ने, श्रद्धापूर्वक कीर्तन गर्ने, भगवान्का चरणारविन्दको ध्यान गर्ने, भगवान्का प्रतिमाको दर्शन र पूजा गर्ने, सम्पूर्ण प्राणीहरूमा भगवद्बुद्धि गर्ने आदि उपायहरूद्वारा भगवान्मा स्वाभाविक प्रेम हुन्छ। त्यसपछि मनमनले सम्पूर्ण प्राणीहरूको कामना पूरा होस् भनी भगवान्सँग प्रार्थना गरोस्।

**विवरण–** माथिका तीन ओटा श्लोकहरूमा साधन भक्तिको चर्चा गरिएको छ। यहाँ उल्लेख गरिएका गुरुसेवा, सत्सङ्ग, कथाश्रवण, ईश्वराराधन, कीर्तन, चरणको चिन्तन यी सबै साधन भक्ति नै हुन्। यी साधन भक्तिहरूको उद्देश्य सर्वस्वरूप भगवान्मा अनन्य प्रेम उत्पन्न गराउनु हो। सबै पदार्थमा परमात्मा रहनुभएको छ, यो भावलाई मनभित्र राखी भक्ति गर्दै गएपछि सर्वात्मा भगवान्को यथार्थ स्वरूप जान्न सकिन्छ। सर्वात्मरूपमा ज्ञान भएपछि पनि भक्ति नष्ट हुँदैन अपितु परमात्मा अनन्त हुनुभएकाले उहाँको अनन्त प्रेम झन् बढिरहन्छ। ज्ञानी भक्तहरू आफूसमेत सबैलाई परमात्मरूप नै जानी आफैँले आफ्नो सेवाको आनन्द लिन्छन्। अनन्त आनन्दको आस्वादन गर्न कल्पना गरिएको यो सेव्यसेवक भावमा मस्त भई उनीहरू समुद्र र त्यसको तरङ्गजस्तै परमात्मा र आफूमा सम्बन्ध भएको पाउँछन्।

**एवं निर्जितषड्वर्गैः क्रियते भक्तिरीश्वरे।**
**वासुदेवे भगवति यया संलभते रतिम्॥ ३३॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **भक्तिः** = भगवान्को भक्ति | **वासुदेवे** = वासुदेवमा |
| **एवं** = यसप्रकार | **क्रियते** = गरिन्छ | **रतिम्** = परमप्रेमस्वरूप अनुराग |
| **निर्जितषड्वर्गैः** = काम, क्रोध | **यया** = जुन भक्तिद्वारा | **संलभते** = प्राप्त हुन्छ |
| आदि छ शत्रुलाई जितेका | **ईश्वरे** = सर्वनियामक | |
| व्यक्तिहरूद्वारा | **भगवति** = भगवान् | |

**वाक्यार्थ–** जब कोही साधकले यसरी पूर्वोक्त साधनहरूद्वारा काम, क्रोध, लोभ, मोह, मद, मात्सर्य गरी छ ओटा शत्रुलाई जितेर भगवान्को भक्ति गर्दछ तब त्यसपछि त्यो भक्तिद्वारा सर्वनियामक भगवान् वासुदेव खुसी हुनुहुन्छ अनि मात्र भगवान्मा परमप्रेमरूप निश्चल अनुराग प्राप्त हुन्छ।

**निशम्य कर्माणि गुणानतुल्यान् वीर्याणि लीलातनुभिः कृतानि।**
**यदातिहर्षोत्पुलकाश्रुगद्गदं प्रोत्कण्ठ उद्गायति रौति नृत्यति॥ ३४॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **कृतानि** = गरिएका | **अतुल्यान्** = अरू कसैमा नभएका |
| **यदा** = जुन बखतमा | **कर्माणि** = कर्महरू | **गुणान्** = भगवान्का गुणहरूलाई |
| **लीलातनुभिः** = लीलाले राम, | **वीर्याणि** = भगवान्का | **निशम्य** = सुनेर |
| कृष्ण आदि अवतार लिएर | पराक्रमयुक्त चरित्रहरूलाई र | **अतिहर्षोत्पुलकाश्रुगद्गदं** = |

ज्यादै हर्षले रोमाञ्चित हुँदै खुसीका आँसु बगाउँदै र गद्‌गद बन्दै
**प्रोत्कण्ठः** = मुक्तकण्ठ भएर
**उद्‌गायति** = भगवान्‌का पवित्र लीला चरित्र गाउँछ
**रौति** = चिच्याउँछ र
**नृत्यति** = नाच्छ

**वाक्यार्थ–** जब कोही भक्त भगवान्‌ले स्वेच्छापूर्वक विविध अवतारहरू लिएर गर्नुभएका अद्‌भुत कर्महरूको चिन्तन गर्छ तथा भगवान्‌का पवित्र चरित्र र गुणहरूको विषयमा सुन्छ तब अतिशय हर्षका कारण रोमाञ्चित भएर अत्यन्त गद्‌गद बन्दछ। त्यसका चित्तले भगवान्‌लाई मात्र विषय बनाएको हुनाले उसलाई अरू कुनै पनि विषयको प्रतीति नै हुँदैन। त्यस बखतमा ऊ मुक्त कण्ठले भगवान्‌का गुण र पवित्र लीलाचरित्र गाउँदै चिच्याउँछ र नाच्न थाल्दछ।

**यदा ग्रहग्रस्त इव क्वचिद्धसत्याक्रन्दते ध्यायति वन्दते जनम्।**
**मुहुः श्वसन् वक्ति हरे जगत्पते नारायणेत्यात्ममतिर्गतत्रपः॥ ३५॥**

**पदार्थ–**
**यदा** = फेरि कहिले
**ग्रहग्रस्तः इव** = ग्रहले समाते जस्तो गरी पागल भएर
**क्वचित्** = कहिलेकाहीँ
**हसति** = हाँस्छ
**आक्रन्दते** = कराउँछ
**ध्यायति** = भगवान्‌को ध्यान गर्छ (कहिले भगवान्‌को भावनाले)
**जनम्** = अन्य प्राणीहरूलाई
**वन्दते** = नमस्कार गर्दछ
**मुहुः** = बारम्बार
**श्वसन्** = लामो सास फेर्दै
**आत्ममतिः** = भगवान्‌मैं चित्त लगाउँदै
**गतत्रपः** = लाज छोडेर
**हरे** = हे हरि
**जगत्पते** = हे जगत्पति र
**नारायण इति** = हे नारायण भन्दै
**वक्ति** = कराउँछ

**वाक्यार्थ–** त्यो भगवान्‌को भक्त कहिले ग्रह लागेर पागल भएजस्तो एक्लै हाँस्दछ, कराउँछ र फेरि वेलाबखतमा एकाग्र भएर भगवान्‌को ध्यान गर्दछ। फेरि कहिले-कहिले भगवान्‌को भावनाले अन्य प्राणीहरूलाई नमस्कार गर्दछ। त्यो भक्तले फेरि कुनै बखतमा लामो सास फेरेर चित्त भगवान्‌मा लगाउँदै लाज-घिन त्यागी भगवान्‌को नाम लिएर 'हे हरि! हे जगत्पति! हे नारायण!' भनी बेसरी चिच्याउँछ।

**तदा पुमान् मुक्तसमस्तबन्धनस्तद्‌भावभावानुकृताशयाकृतिः।**
**निर्दग्धबीजानुशयो महीयसा भक्तिप्रयोगेण समेत्यधोक्षजम्॥ ३६॥**

**पदार्थ–**
**तदा** = त्यस वेला
**पुमान्** = पुरुष
**महीयसा** = महान्
**भक्तिप्रयोगेण** = भक्तिको आवेगले
**मुक्तसमस्तबन्धनः** = जन्म, मृत्यु आदि सारा बन्धन काटिएको
**निर्दग्धबीजानुशयः** = अविद्याका वासनाले रहित चित्त भएको र
**तद्‌भावभावानुकृताशयाकृतिः** = भगवान्‌को चिन्तनले अन्तःकरण तथा आकृति नै परिवर्तन भएको त्यस व्यक्तिले
**अधोक्षजम्** = भगवान्‌लाई
**समेति** = प्राप्त गर्दछ

**वाक्यार्थ–** यस्तो अवस्थामा पुगेपछि मात्र भक्तिको तीव्र आवेगले भगवान्‌को भक्तका जन्म र

मृत्युका सारा बन्धनहरू काटिन्छन्। यो चञ्चल चित्त पनि अविद्या, काम, कर्म आदि वासनाले रहित बन्दछ। भगवान्प्रतिको आकर्षणले गर्दा मन र आकृतिमा नै परिवर्तन आउँछ। त्यसपछि मात्र त्यस भक्तले भगवान्मा एकीभाव प्राप्त गर्दछ।

**अधोक्षजालम्भमिहाशुभात्मनः शरीरिणः संसृतिचक्रशातनम्।**
**तद् ब्रह्मनिर्वाणसुखं विदुर्बुधास्ततो भजध्वं हृदये हृदीश्वरम्॥ ३७॥**

**पदार्थ–**
**इह** = यो संसारमा
**अशुभात्मनः** = चित्त कलुषित भएका
**शरीरिणः** = व्यक्तिहरूको
**अधोक्षजालम्भम्** = शुद्ध चित्तद्वारा भगवान्को प्राप्ति नै
**संसृतिचक्रशातनम्** = जन्म र मृत्युरूप संसारचक्रलाई काट्नु हो
**तत्** = त्यो भगवत्प्राप्तिलाई नै
**ब्रह्मनिर्वाणसुखं** = मोक्षावस्थामा प्राप्त हुने ब्रह्मसुख भनेर
**बुधाः** = विद्वान्हरूले
**विदुः** = जान्दछन्
**ततः** = त्यसैले हे दैत्यकुमारहरू
**हृदये** = आफ्नो हृदयमा
**हृदीश्वरम्** = सर्वान्तर्यामी प्रभुलाई
**भजध्वं** = भजन गर

**वाक्यार्थ–** यो संसारमा राग, द्वेष आदिले कलुषित चित्त भएका व्यक्तिहरूका निमित्त चित्त शुद्ध गरेर भगवान्लाई प्राप्त गर्नु नै जन्म र मृत्युरूप संसारचक्रलाई काट्नु हो। विद्वान्हरू शुद्ध चित्तले भगवान्लाई प्राप्त गर्दा हुने सुखलाई नै मोक्षसुख भनेर भन्दछन्। त्यसैले हे दैत्यकुमारहरू ! सबै कुरा त्यागेर सर्वान्तर्यामी प्रभुलाई आफ्नै हृदयमा भजन गर।

**विवरण–** भक्ति र ज्ञान साधनावस्थामा भिन्न प्रक्रिया भएका तर सिद्धावस्थामा एकै किसिमको फल दिने साधन हुन्। यी दुबै साधनबाट परमात्माको प्राप्ति हुने भएकाले सिद्धावस्थामा यिनीहरूमा भिन्नता रहँदैन। ज्ञानको साधनामा आत्माबाहेक सम्पूर्ण संसारको निषेध गरेर सबैलाई आफूमा नै लीन गरिन्छ भने भक्तिमा परमात्मामा लगी आफूसमेत सम्पूर्ण संसारलाई लीन गरिन्छ। यसरी परमात्मभाव प्राप्त भएका ज्ञानी भक्तहरू अनन्त आनन्दको कारणले कहिले रुँदै, कहिले कराउँदै, कहिले भगवन्नाम लिँदै, कहिले गाउँदै र कहिले नाच्दै हिँड्दछन्। सिद्धावस्थाका भक्तहरूमा देखिने यी लक्षणहरू कृतकृत्यताका परिचायक हुन्। तैत्तिरीयोपनिषद्मा ब्रह्मज्ञानीले सम्पूर्ण संसारको रूपमा आफूलाई जानेर अत्यन्त आश्चर्यमा पर्दै रमाउने र सामगान गर्ने जुन वर्णन गरिएको छ त्यही कोटिका भक्तहरूको कृतकृत्यताको यो हर्षोल्लास हो भन्न सकिन्छ। ज्ञानी पनि अज्ञाननाशद्वारा चमत्कृत र प्रसन्न बन्दै रमाउँछ भने सिद्ध भक्त पनि परमात्मालाई सम्झँदै सबैतिर अनुभव गर्दै रुने, कराउने र नाच्ने गर्दछ। त्यसैले यहाँ भगवान्लाई मोक्षसुखरूप र ब्रह्मरूप भनी बताइएको छ।

**कोऽतिप्रयासोऽसुरबालका हरेरुपासने स्वे हृदि छिद्रवत् सतः।**
**स्वस्यात्मनः सख्युरशेषदेहिनां सामान्यतः किं विषयोपपादनैः॥ ३८॥**

**पदार्थ–**
**असुरबालकाः** = हे असुर-बालकहरू

**स्वे** = आफ्नो
**हृदि** = हृदयमा
**छिद्रवत्** = आकाश झैँ
**सतः** = विद्यमान भएको
**स्वस्य** = आफ्नो
**आत्मनः** = आत्मस्वरूप तथा
**सामान्यतः** = समानरूपले
**अशेषदेहिनां** = सम्पूर्ण प्राणीहरूको
**सख्युः** = हित गर्ने
**हरेः** = भगवान् श्रीहरिको
**उपासने** = उपासना गर्नमा
**कः** = कुन चाहिँ
**अतिप्रयासः** = धेरै प्रयास छ र
**विषयोपपादनैः** = बेकारका भोग र विलासका साधन बटुलेर
**किं** = के प्रयोजन सिद्ध हुन्छ र

**वाक्यार्थ–** हे असुरबालकहरू ! आफ्नै हृदयमा आकाश झैँ व्यापकरूपले विद्यमान रहनुहुने, आफ्नै स्वरूप हुनुभएका, समानरूपले सबै प्राणीहरूको हित गर्ने, सम्पूर्ण प्राणीहरूका साथी भएका भगवान् उनै श्रीहरिको उपासना गर्न के प्रयास गरिरहनुपर्छ र ? बरु, भोग विलासका साधन भएका यी विषयहरू बटुल्दा धेरै दुःख हुन्छ, जबकि यी विषयहरूको केही प्रयोजन छैन।

**रायः कलत्रं पशवः सुतादयो गृहा मही कुञ्जरकोशभूतयः।**
**सर्वेऽर्थकामाः क्षणभङ्गुरायुषः कुर्वन्ति मर्त्यस्य कियत् प्रियं चलाः॥ ३९॥**

**पदार्थ–**
**रायः** = धन
**कलत्रं** = पत्नी
**पशवः** = पशुहरू
**सुतादयः** = छोराछोरीहरू
**गृहाः** = घरहरू
**मही** = खेतवारी
**कुञ्जरकोशभूतयः** = हात्ती-खजाना एवं अन्य ऐश्वर्य आदि
**सर्वे** = सबै
**अर्थकामाः** = इच्छा गरिएका वस्तुहरू
**चलाः** = अनित्य छन्
**क्षणभङ्गुरायुषः** = थोरै मात्र आयु भएको
**मर्त्यस्य** = प्राणीलाई
**कियत्** = कहिलेसम्म
**प्रियं** = आनन्द
**कुर्वन्ति** = दिन्छन्

**वाक्यार्थ–** हे मित्रहरू ! हामीले इच्छा गर्ने धन, सम्पत्ति, पत्नी, पशुहरू, पुत्रहरू, घरखेत तथा हात्ती-खजाना एवं अन्य ऐश्वर्यहरू सबै अनित्य छन्। त्यसै गरी हाम्रो आयु पनि अत्यन्त छोटो छ। यी पदार्थहरूले मानिसलाई कहिलेसम्म सुख देलान्।

**एवं हि लोकाः क्रतुभिः कृता अमी क्षयिष्णवः सातिशया न निर्मलाः।**
**तस्माददृष्टश्रुतदूषणं परं भक्त्यैकयेशं भजतात्मलब्धये॥ ४०॥**

**पदार्थ–**
**एवं** = यसरी
**क्रतुभिः** = यज्ञ आदि कर्महरूद्वारा
**कृताः** = सिद्ध गरिएका
**अमी** = यी
**लोकाः** = स्वर्ग आदि लोकहरू
**क्षयिष्णवः** = नाशवान् छन्
**सातिशयाः** = पुण्यको कमीबेसीले गर्दा राम्रा-नराम्रा पनि छन् र
**न निर्मलाः** = राग, द्वेष आदिले युक्त हुने हुनाले निर्मल पनि छैनन्
**तस्मात्** = त्यसैले
**आत्मलब्धये** = आत्मप्राप्तिका लागि
**अदृष्टश्रुतदूषणं** = श्रुति आदिको आधारमा पनि दोष नदेखिएका
**ईशं** = सर्वनियामक
**परं** = श्रीहरि परमात्मालाई
**हि** = निश्चय नै

बन्दछ। यसै क्रमले ती जीवहरू फेरि जन्म ग्रहण गर्दछन्।

**निषेकादिश्मशानान्तैः संस्कारैः संस्कृतो द्विजः।**
**इन्द्रियेषु क्रियायज्ञान् ज्ञानदीपेषु जुह्वति॥ ५२॥**

**पदार्थ–**
**निषेकादिश्मशानान्तैः** = गर्भाधानदेखि अन्त्येष्टिसम्मका
**संस्कारैः** = संस्कारहरूद्वारा
**संस्कृतः** = संस्कृत भएको व्यक्ति
**द्विजः** = द्विज हो, (निवृत्ति-मार्गमा लागेको ब्राह्मणले)
**ज्ञानदीपेषु** = ज्ञानका लागि दीपक समान
**इन्द्रियेषु** = ज्ञानेन्द्रियहरूमा
**क्रियायज्ञान्** = इष्ट, पूर्त आदि क्रियामूलक यज्ञहरूलाई
**जुह्वति** = हवन गरिदिन्छन्

**वाक्यार्थ–** जसको गर्भाधानदेखि अन्त्येष्टिसम्मका संस्कारहरू गरिन्छ तिनीहरू द्विज हुन्। निवृत्तिमार्गमा लागेका द्विजहरूले ज्ञानका लागि दीपक समान ज्ञानेन्द्रियहरूमा सारा क्रियात्मक इष्ट एवं पूर्त कर्महरूलाई हवन गरिदिन्छन्।

**इन्द्रियाणि मनस्यूर्मौ वाचि वैकारिकं मनः।**
**वाचं वर्णसमाम्नाये तमोङ्कारे स्वरे न्यसेत्॥**
**ओङ्कारं बिन्दौ नादे तं तं तु प्राणे महत्यमुम्॥ ५३॥**

**पदार्थ–**
**इन्द्रियाणि** = इन्द्रियहरूलाई
**उर्मौ** = सङ्कल्पविकल्पात्मक
**मनसि** = मनमा
**वैकारिकं** = विकारले युक्त भएको
**मनः** = मनलाई
**वाचि** = वाणीमा
**वाचं** = वाणीलाई
**वर्णसमाम्नाये** = वर्णसमुदायमा
**तम्** = त्यो वर्णसमुदायलाई
**स्वरे** = अकार आदि स्वरले युक्त
**ओङ्कारे** = ओङ्कारमा
**न्यसेत्** = हवन गरोस्
**ओङ्कारं** = ओङ्कारलाई
**बिन्दौ** = बिन्दुमा
**तं** = त्यो बिन्दुलाई
**नादे** = नादमा
**तं** = त्यो नादलाई
**प्राणे** = प्राणमा
**अमुम् तु** = फेरि त्यो प्राणलाई
**महति** = परब्रह्ममा लीन गरोस्

**वाक्यार्थ–** ती इन्द्रियहरूलाई सङ्कल्पविकल्पात्मक मनमा, विकारयुक्त मनलाई वाणीमा, वाणीलाई वर्णसमुदायमा र वर्णसमुदायलाई तीन स्वरले युक्त भएको ओङ्कारमा हवन गरोस्। फेरि ओङ्कारलाई बिन्दुमा, बिन्दुलाई नादमा, नादलाई प्राणमा र त्यो प्राणलाई पनि परब्रह्ममा लीन गरोस्।

**अग्निः सूर्यो दिवा प्राह्णः शुक्लो राकोत्तरं स्वराट्।**
**विश्वश्च तैजसः प्राज्ञस्तुर्य आत्मा समन्वयात्॥ ५४॥**

**पदार्थ–**
**अग्निः** = अग्निको अभिमानी देवतासम्म पुग्छ, त्यसपछि

**सूर्यः** = सूर्याभिमानी देवता
**दिवा** = दिवसाभिमानी देवता
**प्राह्णः** = मध्यकाल
**शुक्लः** = शुक्लपक्ष
**राका** = पूर्णिमा तथा
**उत्तरं** = उत्तरायणको अभिमानी देवतासम्म पुगी
**स्वराट्** = ब्रह्मलोकमा गई त्यहाँको भोग भोग्दछ, त्यसपछि
**विश्वः** = स्थूलोपाधिक विश्वलाई
**तैजसः** = सूक्ष्मोपाधिक तैजसमा लीन गर्दछ र
**प्राज्ञः च** = सूक्ष्मोपाधिक तैजसलाई पनि कारणोपधिक प्राज्ञमा लीन गरी, त्यसपछि पनि
**तुर्ये** = साक्षीमा लीन गरी
**समन्वयात्** = यसरी सबैलाई समन्वय गरी ऊ स्वयम्
**आत्मा** = शुद्ध आत्मस्वरूपमा स्थित रहन्छ

**वाक्यार्थ–** यसरी लीन गर्दै-गर्दै निवृत्तिमार्गमा लागेको जीव शरीर छुटेपछि क्रमशः अग्निको अभिमानी देवता, दिवसाभिमानी देवता तथा मध्याह्न, शुक्लपक्ष, पूर्णिमा, उत्तरायण आदिको अभिमानी देवता हुँदै ब्रह्मलोकमा पुग्दछ र त्यहाँको भोग भोग्दछ। त्यसपछि स्थूलोपाधिक विश्वलाई सूक्ष्मोपाधिक र सूक्ष्मोपाधिक तैजसलाई पनि कारणोपाधिक प्राज्ञमा लीन गराउँछ। त्यसपछि त्यो प्राज्ञलाई पनि साक्षीमा लीन गराएर समन्वय गरी स्वयम् शुद्ध आत्मस्वरूप भएर रहन्छ।

**विवरण–** उत्तरायण मार्गद्वारा ब्रह्मलोक पुगेपछि मनुष्य कसरी मुक्त हुन्छ ? त्यसको प्रक्रिया यहाँ बताइएको छ। स्थूल, सूक्ष्म र कारण उपाधिलाई क्रमशः आत्मामा लीन गर्दै जीवको मुक्तिको प्रक्रिया सुरु हुन्छ। जीवका तीन अवस्था र स्वरूपहरू छन्। जाग्रत् कालमा जब स्थूल विषय र इन्द्रियरूप उपाधिद्वारा जीव विषयहरूको उपभोग गर्दछ तब त्यो विश्व बन्दछ। त्यही जीव जब मनरूप सूक्ष्म उपाधिलाई लिई वासनामय पदार्थहरूको भोग गर्दछ तब त्यसलाई तैजस भनिन्छ भने कारण उपाधि अज्ञानमा प्रतिबिम्बित भई अविद्यावृत्तिद्वारा नै अज्ञान, सुख आदिको अनुभव गर्ने सुषुप्तिकालीन आत्मालाई प्राज्ञ भनिन्छ। वास्तवमा आत्मा चाहिँ तीनवटै अवस्थाहरूदेखि पर निरुपाधिक छ भन्ने विवेचन माण्डूक्योपनिषद्, छान्दोग्योपनिषद् र बृहदारण्यकोपनिषद्मा गरिएको छ। स्थूल, सूक्ष्म र कारण तीन उपाधिमध्ये उत्तरोत्तर उपाधि श्रेष्ठ छन्। त्यसैले कारण उपाधिवाला जीव सुषुप्तिकालमा सर्वज्ञ सत्स्वरूप परमात्मासँग अभिन्न हुन्छ भनी बृहदारण्यकोपनिषद् (४/३/२१) र छान्दोग्योपनिषद् (६/८/१)मा बताइएको छ।

यहाँ के कुरा बुझ्न आवश्यक छ भने सुषुप्तिकालमा जीव आफ्ना उपाधिहरूलाई छाडी साक्षीसँग मिलेको हुन्छ। सर्वव्यापक ब्रह्मतत्त्वको सानो रूप नै साक्षी हो। यो ब्रह्म र जीवबीचको रूप हो। ब्रह्ममा कुनै उपाधि छैन तर साक्षीको उपाधि अन्तःकरण हो। जीव अन्तःकरणभित्र परेको ब्रह्मको प्रतिबिम्ब हो भने साक्षी अन्तःकरणद्वारा उपहित ब्रह्मचैतन्य हो। ऐना फुटाउँदा ऐनामा प्रतिबिम्बित आकाश पनि नष्ट हुन्छ तर घैँटो फुटाउँदा त्यहाँभित्रको आकाश नष्ट हुँदैन। यिनै दुई दृष्टान्तद्वारा साक्षी र जीवको स्वरूपलाई स्पष्ट पारिएको छ। अन्तःकरणको उत्पत्ति हुँदा त्यसको अडिने ठाउँ सर्वव्यापक ब्रह्मतत्त्व नै हो। परिच्छिन्न अन्तःकरण जति क्षेत्रमा अडिएको हुन्छ ब्रह्मतत्त्वको त्यत्ति भाग अन्तःकरणको प्रकाशक रूपले साक्षी बन्दछ भने त्यहाँभित्र प्रतिबिम्बित त्यही ब्रह्मतत्त्व जीव बन्दछ। साक्षात् द्रष्टा नै साक्षी हो। यसले अन्तःकरण र त्यसका

सम्पूर्ण कार्यहरूलाई नियाल्दछ। अन्तःकरणविना त्यसको साक्षीस्वरूप बन्न नसक्ने हुनाले यो स्वरूपलाई शुद्ध ब्रह्म मानिएको छैन। माण्डूक्योपनिषद्मा तुरीय आत्मा भनेर पनि यसैलाई सङ्केत गरिएको हो अनि छान्दोग्य र बृहदारण्यक उपनिषद्मा सत्स्वरूप प्राज्ञ परमात्मा भनेर पनि यसै साक्षीलाई बुझाइएको हो। यो तुरीय साक्षी आत्मा मायाकल्पित साक्ष्य पदार्थ (अन्तःकरण) आदिको विनाशपछि शुद्ध आत्मा नै हुन्छ। अविद्याकल्पित जाग्रत् आदि तीन अवस्थाको अपेक्षा यसलाई तुरीय भनिएको हो। जब आत्माले प्रकाशित गर्नुपर्ने ती अवस्थाहरू रहँदैनन् तब आत्मामा साक्षीत्व पनि रहँदैन। वास्तवमा अन्तर्यामीत्व र साक्षीत्व पनि ब्रह्ममा कल्पित नै हुन् भन्ने वेदान्तसिद्धान्त हो।

**देवयानमिदं प्राहुर्भूत्वा भूत्वानुपूर्वशः।**

**आत्मयाज्युपशान्तात्मा ह्यात्मस्थो न निवर्तते॥ ५५॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **उपशान्तात्मा** = शान्त चित्त भएको | तत्तत् अभिमानी देवतासम्म हुँदै |
| **इदं** = यो | **आत्मयाजी** = आत्मोपासक | **आत्मस्थः** = आत्मस्वरूपमा स्थित भएर |
| **देवयानम्** = देवयान मार्ग | **अनुपूर्वशः** = क्रमैले | **न निवर्तते** = फेरि फर्कंदैन |
| **प्राहुः** = भनियो | **भूत्वा भूत्वा** = उत्तरायणमार्गद्वारा | |
| **हि** = निश्चय नै | | |

**वाक्यार्थ–** यो देवयान मार्ग हो। यस मार्गबाट शान्त चित्त भएका आत्मोपासकहरू क्रमशः अग्नि आदि अभिमानी देवताद्वारा ब्रह्मलोक पुगेर आत्मानुभव गर्दछन्, फेरि फर्कंदैनन्।

**य एते पितृदेवानामयने वेदनिर्मिते।**

**शास्त्रेण चक्षुषा वेद जनस्थोऽपि न मुह्यति॥ ५६॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | देवताहरूको | **जनस्थः अपि** = यही देहमैं रहेर पनि |
| **एते** = यी दुई ओटा | **अयने** = मार्गलाई | **न मुह्यति** = मोहमा फस्दैन |
| **वेदनिर्मिते** = वेदद्वारा बताइएका | **शास्त्रेण चक्षुषा** = शास्त्रदृष्टिले | |
| **पितृदेवानाम्** = पितृहरूको र | **यः वेद** = जो जान्दछ त्यो | |

**वाक्यार्थ–** जो व्यक्ति वेदले बताएको देवयान र पितृयान यी दुई मार्गलाई शास्त्रीय दृष्टिले जान्दछ, त्यो व्यक्ति यही शरीरमा रहेर पनि मोहमा फस्दैन।

**आदावन्ते जनानां सद् बहिरन्तः परावरम्।**

**ज्ञानं ज्ञेयं वचो वाच्यं तमो ज्योतिस्त्वयं स्वयम्॥ ५७॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **आदौ** = सृष्टिभन्दा पहिला | **सत्** = जो सत्यरूपले छ र |
| **जनानां** = प्राणीहरूको | **अन्ते** = प्रलयपछि पनि | **बहिः** = बाह्य भोग्यरूपले |

| | | |
|---|---|---|
| **अन्तः** = भित्री भोक्ता रूपले | **वचः** = नामको रूपमा | **ज्योतिः तु** = प्रकाशको रूपमा |
| **परावरम्** = श्रेष्ठ रूपले र | (वाणीको रूपमा) र | पनि |
| कनिष्ठ रूपले | **वाच्यं** = वाच्य रूपमा वा | **अयं** = यो तत्त्ववेत्ता नै |
| **ज्ञानं** = ज्ञान रूपले तथा | (रूपकै रूपमा) | **स्वयम्** = आफैँ हुन्छ त्यसपछि |
| **ज्ञेयं** = ज्ञेय रूपले | **तमः** = अन्धकारको रूपमा र | कसरी मोह हुने |

**वाक्यार्थ–** त्यही परमात्मा तत्त्व नै सृष्टिभन्दा पहिला र प्रलयभन्दा पछि सत्यरूपले विद्यमान छ। बाहिर भोग्यरूपले र भित्र भोक्तारूपले पनि उही छ। श्रेष्ठ र कनिष्ठरूपले, ज्ञान र ज्ञेय (पदार्थ) रूपले, वाच्य र वाचकरूपले तथा अन्धकार र प्रकाश दुबै रूपले उही नै रहेको छ। वास्तवमा त्यो स्वरूप नै आफ्नो स्वरूप हो। यो बुझिसकेपछि जीवलाई मोह हुँदैन।

**आबाधितोऽपि ह्याभासो यथा वस्तुतया स्मृतः।**

**दुर्घटत्वादैन्द्रियकं तद्वदर्थविकल्पितम्॥ ५८॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **स्मृतः** = देखिन्छ | कल्पना गरिएको मात्रै हो |
| **आबाधितः अपि** = विचार गर्दा | **तद्वत्** = त्यसै गरी | **दुर्घटत्वात्** = अनुभवद्वारा |
| मिथ्या सावित हुने भए पनि | **हि** = निश्चय नै | असंभव भएकोले त्यो सत्य हुन |
| **आभासः** = प्रतिबिम्ब आदि | **ऐन्द्रियकं** = इन्द्रियका विषयहरू | सक्दैन |
| **यथा** = जसरी | पनि | |
| **वस्तुतया** = वास्तविक रूपमा नै | **अर्थविकल्पितम्** = यथार्थरूपले | |

**वाक्यार्थ–** जसरी विचार गरे पनि मिथ्या लाग्ने प्रतिबिम्ब आदि पदार्थहरू पनि पहिला सत्य जस्तै देखिन्छन्। त्यसै गरी यी इन्द्रियहरूका विषयहरू पनि विचार नगर्दा सत्य जस्ता देखिएका मात्र हुन्, अनुभव गर्दा सत्य साबित हुन सक्दैनन्।

**क्षित्यादीनामिहार्थानां छाया न कतमापि हि।**

**न सङ्घातो विकारोऽपि न पृथङ्नान्वितो मृषा॥ ५९॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **कतमा अपि** = कुनै पनि रूपमा | केही छैन |
| **इह** = यहाँ | **न हि** = छैन | **न अन्वितः** = न त आफ्नो |
| **क्षित्यादीनाम्** = पृथिवी आदि | **न सङ्घातः** = न त | अवयवभित्र अन्वित छन् |
| **अर्थानां** = पदार्थहरूको | पञ्चमहाभूतको समूह नै छ | **पृथक्** = न त अवयवदेखि भिन्न |
| **छाया** = विकारस्वरूप शरीर | **न अपि विकारः** = पञ्चमहा- | छन् त्यसैले |
| आदि | भूतको परिणाम (विकार) पनि | **मृषा** = सबै मिथ्या हो |

**वाक्यार्थ–** यहाँ विचार गरेको खण्डमा पृथिवी आदि पदार्थहरू र तिनका विकार शरीरादि कुनै रूपमा पनि सत्य छैनन्। न त पञ्चमहाभूतको समूह नै छ र न भौतिक विकारहरू नै छन्।

वास्तवमा अवयव-अवयवी केही पनि छैनन्, त्यसैले सबै मिथ्या हुन्।

**धातवोऽवयवित्वाच्च तन्मात्रावयवैर्विना।**
**न स्युर्ह्यसत्यवयविन्यसन्नवयवोऽन्ततः॥ ६०॥**

**पदार्थ–**
**धातवः** = यी पञ्चमहाभूतहरू
**तन्मात्रावयवैः विना** = तन्मात्रारूप अवयव नभईकन
**न स्युः** = हुन सक्दैनन्
**अवयवित्वात्** = यिनीहरू अवयवी हुन् (अवयवको सत्तादेखि अतिरिक्त सत्ता यिनको हुन सक्दैन)
**अवयविनि च** = अवयवीहरू
**असति** = मिथ्या हुँदा
**अवयवः** = तिनीहरूका अवयव पनि
**अन्ततः** = वास्तवमा
**हि** = निश्चय नै
**असत्** = मिथ्या नै हुन्

**वाक्यार्थ–** पञ्चतन्मात्रारूप अवयवहरू नभईकन अवयवी पञ्चमहाभूत हुन सक्दैनन् किनभने अवयवको सत्तादेखि अतिरिक्त सत्ता अवयवीको हुँदैन। जब यी अवयवी पञ्चमहाभूत मिथ्या छन् भने यी अवयव पञ्चतन्मात्रा पनि वास्तवमा मिथ्या नै हुन्।

**स्यात् सादृश्यभ्रमस्तावद् विकल्पे सति वस्तुनः।**
**जाग्रत्स्वापौ यथा स्वप्ने तथा विधिनिषेधता॥ ६१॥**

**पदार्थ–**
**वस्तुनः** = परमात्मामा
**विकल्पे सति** = नानात्व हुँदा
**सादृश्यभ्रमः** = सादृश्यको भ्रम
**तावत्** = अविद्या रहेसम्म
**स्यात्** = रहन्छ
**यथा** = जसरी
**स्वप्ने** = स्वप्नावस्थामा
**जाग्रत्स्वापौ** = जाग्रत् र स्वप्नको भेद देखिन्छ
**तथा** = त्यसै गरी
**विधिनिषेधता** = विधि र निषेध उत्पन्न हुन्छ

**वाक्यार्थ–** वास्तविकरूपले परमात्मामा भेद नहुँदा नहुँदै पनि स्वप्नावस्थामा जाग्रत् र स्वप्नावस्थाको भेदको अनुभव भए झैँ अविद्याद्वारा कल्पित भ्रमले गर्दा विधिनिषेध आदि भेद यहाँ देखिएको हो।

**विवरण–** श्लोक ५७-६१ मा संसारलाई मिथ्या सिद्ध गरिएको छ। जो सत् र असत् दुबै रूपले प्रतीत हुँदैन त्यो मिथ्या हो। संसारका सम्पूर्ण पदार्थहरू सत् र असत् दुबै होइनन्। घडा र टेबुललाई यसको उदाहरणको रूपमा लिन सकिन्छ। घडा र टेबुल असत् होइनन्।

**असत् चेत् न प्रतीयेत** अर्थात्, असत् भएको भए प्रतीति हुनु नपर्ने। असत्को प्रतीति हुँदैन अर्थात् जुन वस्तुको प्रतीति हुन्छ त्यो वस्तु असत् हुँदैन। घडा र टेबुलको आ-आफ्नै नाम छ, तिनीहरूको आफ्नै आकारप्रकार देखिन्छ र यिनीहरू व्यवहारमा पनि आउँछन् वा यिनीहरूको प्रतीति हुन्छ यसैले यिनीहरू असत् होइनन्। यस्तै घडा र टेबुल सत् पनि होइनन्।

**सत् चेत् न बाध्येत** अर्थात् सत् भएको भए बाधित हुनु नपर्ने। जुन वस्तु बाधित हुँदैन त्यो

सत् हो। घडा र टेबुल वस्तुतः नाम मात्र हुन्। तिनीहरूमा रहेका माटो र काठ नै सत्य हुन्। यसै गरी माटो र काठ पनि आफ्नो कारण परमाणुमा कल्पित मात्र हुन्। यस्तै परमाणु पनि परमात्मामा कल्पित हो। यसैले संसारका सम्पूर्ण पदार्थहरू परमात्मामा कल्पित भएकाले तिनीहरूको बाध हुन्छ, त्यसैले तिनीहरू सत् होइनन्। यसरी संसारका पदार्थहरू सत् र असत् दुबै नभएकाले मिथ्या हुन् भन्ने सिद्ध हुन्छ।

यहाँ पनि परमात्मालाई मात्र सत् वस्तुका रूपमा सिद्ध गरिएको छ। सृष्टिभन्दा पहिले र प्रलयभन्दा पछि, बाहिरी पदार्थमा भोग्य रूपले र भित्र भोक्ता रूपले परमात्मा मात्र रहेकाले यस्तै श्रेष्ठ र कनिष्ठ, ज्ञान र ज्ञेय, वाच्य र वाचक, अन्धकार र प्रकाश सम्पूर्ण रूपले परमात्मा नै रहेकाले परमात्मा बाहेक अरू कुनै पनि वस्तुको सत्ता सिद्ध हुँदैन। जसरी ऐनामा परेको प्रतिबिम्ब पहिले सत्य जस्तै देखिन्छ तर विचार गर्दा उक्त प्रतिबिम्ब बिम्बभन्दा भिन्न वस्तुका रूपमा सिद्ध हुन सक्दैन त्यसरी नै संसारका सम्पूर्ण पदार्थहरू वा इन्द्रियका विषयहरू विचार नगर्दा सत्य जस्ता देखिएका मात्र हुन्, विचार गर्दा सत्य साबित हुन सक्दैनन्। यस्तै विचार गरेको खण्डमा पृथिवी आदि पदार्थहरू र तिनका विकार शरीर आदि कुनै पनि पदार्थ सत्य साबित हुन सक्दैनन्।

यस्तै संसारका पदार्थमा अवयव र अवयवीको सत्ता पनि सिद्ध हुन सक्दैन। पञ्चतन्मात्रारूप अवयवहरू नभईकन अवयवी पञ्चमहाभूत हुन सक्दैनन्। किनभने अवयवको सत्तादेखि अतिरिक्त सत्ता अवयवीको हुँदैन। यसैले पञ्चतन्मात्रारूप अवयव नै मिथ्या हुन् भने तिनका अवयवीका रूपमा पञ्चमहाभूतको सत्ता सिद्ध गर्न सकिने स्थिति नै रहँदैन। पञ्चतन्मात्रा, पञ्चमहाभूत आदि सम्पूर्ण पदार्थहरू परमात्मामा कल्पित मात्र हुन्। यस तथ्यलाई यहाँ जाग्रत् र स्वप्नावस्थाको उदाहरणद्वारा स्पष्ट पारिएको छ। जसरी स्वप्नावस्थामा जाग्रत् र स्वप्नावस्थाको भेदको अनुभव हुन्छ त्यसै गरी परमात्मामा पनि अविद्याद्वारा कल्पित भ्रमले गर्दा विभिन्न सांसारिक पदार्थको प्रतीति भएको हो। वस्तुतः परमात्मा बाहेक सत् वस्तु केही पनि छैन। यसैले संसारका समग्र पदार्थहरू मिथ्या हुन्।

**भावाद्वैतं क्रियाद्वैतं द्रव्याद्वैतं तथात्मनः।**
**वर्तयन् स्वानुभूत्येह त्रीन् स्वप्नान् धुनुते मुनिः॥ ६२॥**

**पदार्थ–**
**आत्मनः** = आफ्नो
**भावाद्वैतं** = भावाद्वैत
**क्रियाद्वैतं** = क्रियाद्वैत
**तथा** = त्यस्तै गरी
**द्रव्याद्वैतं** = द्रव्याद्वैतलाई पनि
**वर्तयन्** = विचार गरेर
**मुनिः** = विचारशील व्यक्तिले
**स्वानुभूत्या** = अनुभवको आधारमा
**इह** = यो शरीरमा छँदा नै
**त्रीन्** = तीन ओटा
**स्वप्नान्** = स्वप्न आदि अवस्थालाई
**धुनुते** = निरस्त गर्दछ

**वाक्यार्थ–** जो विवेकी व्यक्ति आत्मामा भावाद्वैत, क्रियाद्वैत र द्रव्याद्वैतको विचार गर्दै केवल अद्वैतरूपताको मात्र साक्षात्कार गर्दछ त्यसले यो शरीर छँदा नै तीन अवस्थालाई (द्रष्टा, दर्शन र दृश्य आदि त्रिपुटीलाई पनि) निरस्त गर्दछ।

**विवरण–** सबै पदार्थहरूमा एउटै आत्मतत्त्वको अनुभूति गर्ने व्यक्तिहरू भ्रमपूर्ण सपनासमान यस संसारबाट ब्युँझिएका हुन्छन्। जसरी सपना देख्ने व्यक्ति सपनामा आफूले बनाएका घर र भोग्य पदार्थहरूलाई सत्य ठानी भुलेको हुन्छ त्यसै गरी यो मायारूप स्वप्नमा पनि मानिसहरू भुलेका हुन्छन्। जब उनीहरू अज्ञानरूप निद्राले रहित आफ्नो स्वरूपको स्मरण गर्दछन् तब उनीहरू यस संसारस्वप्नबाट झल्याँस्स ब्युँझिन्छन्। यहाँ पनि आत्मज्ञानीले जाग्रत्, स्वप्न र सुषुप्ति यी तीनै ओटा स्वप्नलाई नाश गर्दछ भनी बताइएको छ।

श्रीधर स्वामीले यस श्लोकको टीकामा तीन ओटा स्वप्नको अर्थ प्रकारान्तरले पनि गर्नुभएको छ। घैंटो, कपडा आदि वस्तुहरू छुट्टाछुट्टै हुन् भनी भेदबुद्धि गर्नु पहिलो सपना हो। अधिकारी र अवस्थाभेदले कर्महरूमा भेदबुद्धि गर्नु दोस्रो सपना हो भने ती कर्महरूको फल मलाई मिल्दछ भन्नु तेस्रो सपना हो।

यस प्रकार जाग्रत्, स्वप्न र सुषुप्ति यी तीन ओटा सपना अथवा वस्तुभेद, कर्मभेद र फलभेदरूपी तीन ओटा सपनालाई नाश गरी ज्ञानी आफ्नो स्वप्नरहित स्वरूपको साक्षात्कार गर्दछ। त्यस्तो ज्ञानी बाहेक संसारमा जागेका भनिने अरू सबै प्राणीहरू वास्तवमा अज्ञानमा निदाएका नै हुन् भन्नु यस श्लोकको आशय हो।

**कार्यकारणवस्त्वैक्यमर्शनं पटतन्तुवत्।**
**अवस्तुत्वाद् विकल्पस्य भावाद्वैतं तदुच्यते॥ ६३॥**

**पदार्थ–**
**विकल्पस्य** = कार्य र कारण भन्ने भेद
**अवस्तुत्वात्** = अवास्तविक हुनाले
**पटतन्तुवत्** = कपडा र धागो झैं
**कार्यकारणवस्त्वैक्यमर्शनं** = कार्य र कारणमा अभेद स्वीकार गर्नु
**तत्** = त्यसलाई नै
**भावाद्वैतं** = भावाद्वैत भनेर
**उच्यते** = भनिन्छ

**वाक्यार्थ–** जसरी धागो नै कपडा हो, यी दुईमा भेद हुँदैन त्यसै गरी कार्य र कारणमा केही भेद छैन। यसरी देखिएको भेद अवास्तविक हो भनेर बुझ्नु भावाद्वैत हो।

**यद् ब्रह्मणि परे साक्षात् सर्वकर्मसमर्पणम्।**
**मनोवाक्तनुभिः पार्थ क्रियाद्वैतं तदुच्यते॥ ६४॥**

**पदार्थ–**
**पार्थ** = हे युधिष्ठिर
**परे ब्रह्मणि** = परब्रह्ममा
**साक्षात्** = फलको आशा नगरीकन
**यत्** = जो
**मनोवाक्तनुभिः** = मन, वचन र शरीरले गरेका
**सर्वकर्मसमर्पणम्** = सम्पूर्ण कर्मको समर्पण गरिन्छ
**तत्** = त्यही नै
**क्रियाद्वैतं** = क्रियाद्वैत हो भनेर
**उच्यते** = भनिन्छ

**वाक्यार्थ–** हे युधिष्ठिर ! कुनै फलको आशा नराखी मन, वचन र कर्मले गरेका सम्पूर्ण कर्महरू परमात्मामा समर्पण गरिदिनु क्रियाद्वैत हो।

**आत्मजायासुतादीनामन्येषां सर्वदेहिनाम्।**
**यत्स्वार्थकामयोरैक्यं द्रव्याद्वैतं तदुच्यते॥ ६५॥**

**पदार्थ–**
**आत्मजायासुतादीनाम्** = आफू, स्त्री, पुत्र आदिको तथा
**अन्येषां** = अरू
**सर्वदेहिनाम्** = सम्पूर्ण प्राणीहरूको पनि
**स्वार्थकामयोः** = सम्पत्ति र भोग आदिको विषयमा विचारद्वारा
**यत्** = जो
**ऐक्यं** = ऐक्य दर्शन हुन्छ
**तत्** = त्यसैलाई
**द्रव्याद्वैतं** = द्रव्याद्वैत भनेर
**उच्यते** = भनिन्छ

**वाक्यार्थ–** आफ्नो तथा अन्य स्त्री, पुत्र आदिको र प्राणीहरूको पनि जो भोग, स्वार्थ आदि हुन्छ, त्यसमा विचारद्वारा ऐक्य दर्शन गर्नु वा केही फरक छैन भनेर बुझ्नु द्रव्याद्वैत हो।

**यद् यस्य वानिषिद्धं स्याद् येन यत्र यतो नृप।**
**स तेनेहेत कार्याणि नरो नान्यैरनापदि॥ ६६॥**

**पदार्थ–**
**नृप** = हे राजा
**अनापदि** = कुनै सङ्कट नपरेको बखतमा
**यस्य** = जसको लागि
**येन** = जुन साधनद्वारा
**यत्र** = जहाँ
**यतः** = जुन कारणबाट
**यत् वा** = जुनसुकै कर्म पनि
**अनिषिद्धं** = शास्त्रले निषेध नगरेको
**स्यात्** = छ
**सः नरः** = त्यो मानिसले
**तेन** = तिनै साधनबाट
**कार्याणि** = सम्पूर्ण कर्महरू
**ईहेत** = सम्पन्न गरोस्
**नान्यैः** = अरू निषिद्ध उपायद्वारा नगरोस्

**वाक्यार्थ–** हे युधिष्ठिर! यदि आफूलाई सङ्कट परेको छैन भने जसलाई जुन साधनद्वारा, जहाँ, जुन कारणबाट जसरी कर्म गर्न शास्त्रले निषेध गरेको छैन त्यसै गरी सम्पन्न गर्नू, निषिद्ध उपायहरूलाई स्वीकार नगर्नू।

**एतैरन्यैश्च वेदोक्तैर्वर्तमानः स्वकर्मभिः।**
**गृहेऽप्यस्य गतिं यायाद् राजंस्तद्भक्तिभाङ्नरः॥ ६७॥**

**पदार्थ–**
**राजन्** = हे राजा युधिष्ठिर
**एतैः** = यी र
**अन्यैः च** = अरू पनि
**वेदोक्तैः** = वेदद्वारा बताइएका
**स्वकर्मभिः** = आफ्ना कर्महरूद्वारा
**तद्भक्तिभाक्** = भगवान्मा भक्ति भएको
**नरः** = मानिसले
**गृहे** = घरमा
**वर्तमानः अपि** = रहेर पनि
**अस्य** = यी (श्रीकृष्ण) भगवान्को
**गतिं** = एकतारूप गतिलाई
**यायात्** = प्राप्त गर्दछ

**वाक्यार्थ–** हे युधिष्ठिर! यी र अरू वेदले बताएका उपायहरूद्वारा पनि भगवान्को भक्ति गर्ने

व्यक्तिले घरमा नै बसेर पनि भगवान्‌को गतिलाई प्राप्त गर्दछ।

**यथा हि यूयं नृपदेव दुस्त्यजादापद्गणादुत्तरतात्मनः प्रभोः।**

**यत्पादपङ्केरुहसेवया भवानहार्षीन्निर्जितदिग्गजः क्रतून्॥ ६८॥**

**पदार्थ—**
**नृपदेव** = हे राजा युधिष्ठिर
**हि** = निश्चय नै
**यथा** = जसरी
**यूयं** = तपाईंहरू
**प्रभोः** = सर्वसमर्थ
**आत्मनः** = परमात्मा भगवान्
श्रीकृष्णको कृपाले
**दुस्त्यजात्** = अत्यन्त कठिन
**आपद्गणात्** = आपत्तिहरूबाट
**उत्तरत** = तर्नुभयो र
**यत्पादपङ्केरुहसेवया** = जसको
चरणकमलको सेवाद्वारा
**निर्जितदिग्गजः** = दिग्गजहरूलाई
समेत जितेर
**भवान्** = तपाईंले
**क्रतून्** = राजसूय यज्ञ पनि
**अहार्षीत्** = गर्नुभयो

**वाक्यार्थ—** हे युधिष्ठिर! जसरी पहिला अत्यन्त कठिन परिस्थिति र आपत्तिबाट भगवान् श्रीकृष्णको सहायताले तपाईंहरू सजिलैसँग बच्नुभयो र पार पाउनुभयो त्यसै गरी आज पनि उहाँको चरणकमलको सेवाले सारा राजाहरूलाई जितेर यत्रो राजसूय यज्ञ गरिरहनुभएको छ।

**अहं पुराभवं कश्चिद् गन्धर्व उपबर्हणः।**

**नाम्नातीते महाकल्पे गन्धर्वाणां सुसम्मतः॥ ६९॥**

**पदार्थ—**
**पुरा** = पहिले
**अहं** = म
**अतीते** = बितेको
**महाकल्पे** = महाकल्पमा
**गन्धर्वाणां** = गन्धर्वहरूमा
**सुसम्मतः** = खुब सम्मानित
**उपबर्हणः** = उपबर्हण
**नाम्ना** = नाम भएको
**कश्चित्** = कुनै
**गन्धर्व** = गन्धर्व
**अभवं** = थिएँ

**वाक्यार्थ—** पहिलेको महाकल्पमा म गन्धर्वसमूहमा सम्मानित उपबर्हण नाम भएको गन्धर्व थिएँ।

**रूपपेशलमाधुर्यसौगन्ध्यप्रियदर्शनः।**

**स्त्रीणां प्रियतमो नित्यं मत्तस्तु पुरुलम्पटः॥ ७०॥**

**पदार्थ—**
**रूपपेशलमाधुर्यसौगन्ध्यप्रिय-दर्शनः** = सुन्दरता, सुकुमारता, मधुरता र सुगन्धले अति सुन्दर म
**स्त्रीणां** = स्त्रीहरूको
**प्रियतमः** = अत्यन्त प्यारो र
**पुरुलम्पटः** = स्त्रीहरूमा आसक्त
भएको थिएँ अनि
**नित्यं तु** = सधैं नै
**मत्तः** = रूप आदिको
अभिमानले उन्मत्त थिएँ

**वाक्यार्थ—** सुन्दरता, सुकुमारता, मधुरता र सुगन्धले गर्दा मलाई सबै स्त्रीहरूले प्यारो गर्थे। म पनि उनीहरूमा आसक्त भएर रूप आदिको अभिमानले उन्मत्त भएको थिएँ।

**एकदा देवसत्रे तु गन्धर्वाप्सरसां गणाः।**
**उपहूता विश्वसृग्भिर्हरिगाथोपगायने॥ ७१॥**

**पदार्थ—**
**एकदा तु** = एक दिन चाहिँ
**देवसत्रे** = देवयागमा
**गन्धर्वाप्सरसां** = गन्धर्व र अप्सराहरूको
**गणाः** = समूहहरू
**हरिगाथोपगायने** = भगवान् हरिको गाथा गाउनको लागि
**विश्वसृग्भिः** = प्रजापतिहरूद्वारा
**उपहूताः** = बोलाइए

**वाक्यार्थ—** एक दिन प्रजापतिहरूले देवयागमा भगवान्को गाथा गाउनका लागि गन्धर्व र अप्सराहरूलाई बोलाएका थिए।

**अहं च गायंस्तद्विद्वान् स्त्रीभिः परिवृतो गतः।**
**ज्ञात्वा विश्वसृजस्तन्मे हेलनं शेपुरोजसा॥**
**याहि त्वं शूद्रतामाशु नष्टश्रीः कृतहेलनः॥ ७२॥**

**पदार्थ—**
**अहं च** = म पनि
**तत् विद्वान्** = त्यो विद्वत्सभा हो भन्ने जान्दाजान्दै
**स्त्रीभिः** = स्त्रीहरूद्वारा
**परिवृतः** = घेरिएर
**गायन्** = गाउँदै
**गतः** = त्यहाँ गएँ
**विश्वसृजः** = प्रजापतिहरूले
**मे** = मबाट
**तत्** = त्यस्तो
**हेलनं** = सबैको तिरस्कार भएको कुरा
**ज्ञात्वा** = जानेर
**ओजसा** = क्रोधले
**कृतहेलनः** = सबैको तिरस्कार गर्ने
**त्वं** = तँ गन्धर्व
**नष्टश्रीः** = सारा शोभा नष्ट भएर
**आशु** = चाँडै नै
**शूद्रताम्** = शूद्रयोनिमा
**याहि** = जा भनेर
**शेपुः** = श्राप दिए

**वाक्यार्थ—** त्यो विद्वत्सभा हो भन्ने जान्दाजान्दै पनि म स्त्रीहरूद्वारा घेरिएर गाउँदै त्यहाँ पुगेँ। त्यो देखेर आफूहरूको तिरस्कार गरेको सम्झँदै ती प्रजापतिहरूले हाम्रो तिरस्कार गर्ने तेरो सारा शोभा नष्ट होस्, तुरुन्तै तँ शूद्रयोनिमा जा भनेर मलाई श्राप दिए।

**तावद् दास्यामहं जज्ञे तत्रापि ब्रह्मवादिनाम्।**
**शुश्रूषयानुषङ्गेण प्राप्तोऽहं ब्रह्मपुत्रताम्॥ ७३॥**

**पदार्थ—**
**तावत्** = त्यसपछि
**अहं** = म
**दास्याम्** = दासीबाट
**जज्ञे** = जन्मिएँ
**तत्र अपि** = त्यस शूद्रजीवनमा पनि
**ब्रह्मवादिनाम्** = विद्वान् सन्तहरूको
**शुश्रूषया** = सेवाद्वारा
**अनुषङ्गेण** = सङ्गतद्वारा
**अहं** = म
**ब्रह्मपुत्रताम्** = ब्रह्माजीको पुत्रको रूपमा
**प्राप्तः** = उत्पन्न भएँ

**वाक्यार्थ–** त्यसपछि म दासीपुत्र बनेर जन्मिएँ। त्यस समयमा पनि म साधुहरूको सेवा गर्दथें र सत्सङ्गमा रुचि राख्दथें, त्यसैको प्रभावले म ब्रह्माजीको पुत्र बनेर उत्पन्न भएँ।

**धर्मस्ते गृहमेधीयो वर्णितः पापनाशनः।**

**गृहस्थो येन पदवीमञ्जसा न्यासिनामियात्॥ ७४॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **पदवीम्** = पदमा | **गृहमेधीयः** = गृहस्थहरूको |
| **येन** = जुन धर्मको उपासनाद्वारा | **अञ्जसा** = सजिलैसँग | **धर्मः** = धर्म |
| **गृहस्थः** = गृहस्थ पनि | **इयात्** = प्राप्त हुन्छ त्यस्तो | **ते** = तपाईंलाई |
| **न्यासिनाम्** = संन्यासीहरूको | **पापनाशनः** = पापनाश गरिदिने | **वर्णितः** = वर्णन गरियो |

**वाक्यार्थ–** हे युधिष्ठिर! जुन धर्मको उपासनाद्वारा गृहस्थहरू पनि संन्यासीहरूको पदमा सजिलैसँग प्राप्त हुन्छन् त्यस्तो पापनाशक गृहस्थधर्म मैले तपाईंलाई बताएँ।

**यूयं नृलोके बत भूरिभागा लोकं पुनाना मुनयोऽभियन्ति।**

**येषां गृहानावसतीति साक्षाद् गूढं परं ब्रह्म मनुष्यलिङ्गम्॥ ७५॥**

**स वा अयं ब्रह्म महद्विमृग्यं कैवल्यनिर्वाणसुखानुभूतिः।**

**प्रियः सुहृद् वः खलु मातुलेय आत्मार्हणीयो विधिकृद् गुरुश्च॥ ७६॥**

**न यस्य साक्षाद् भवपद्मजादिभी रूपं धिया वस्तुतयोपवर्णितम्।**

**मौनेन भक्त्योपशमेन पूजितः प्रसीदतामेष स सात्वतां पतिः॥ ७७॥**

**टिप्पणी–** यहाँ आएका यी तीन पद्यहरू माथि यसै स्कन्धको दशौँ अध्यायको ४८-५० श्लोकको रूपमा आइसकेका छन्। यी पद्यहरूको पदार्थ र वाक्यार्थ सोही ठाउँमा हेर्नुहोला।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति देवर्षिणा प्रोक्तं निशम्य भरतर्षभः।**

**पूजयामास सुप्रीतः कृष्णं च प्रेमविह्वलः॥ ७८॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **निशम्य** = सुनेर | **कृष्णं च** = भगवान् श्रीकृष्णलाई |
| **इति** = यसरी | **भरतर्षभः** = युधिष्ठिरले | र देवर्षि नारदलाई पनि |
| **देवर्षिणा** = देवर्षि नारदद्वारा | **सुप्रीतः** = अति प्रसन्न भएर | **पूजयामास** = पूजा गर्नुभयो |
| **प्रोक्तं** = भनिएको | **प्रेमविह्वलः** = प्रेमले गद्गद् बन्दै | |

**वाक्यार्थ–** यसरी देवर्षि नारदले भन्नुभएको सुनेर युधिष्ठिरले अति प्रसन्न हुँदै र प्रेमले गद्गद् बन्दै भगवान् श्रीकृष्णलाई र देवर्षि नारदलाई पनि पूजा गर्नुभयो।

**कृष्णपार्थावुपामन्त्र्य पूजितः प्रययौ मुनिः ।**

**श्रुत्वा कृष्णं परं ब्रह्म पार्थः परमविस्मितः ॥ ७९ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **उपामन्त्र्य** = सोधेर | **पार्थः** = पृथा (कुन्ती)का पुत्र युधिष्ठिर |
| **पूजितः** = पूजा गरिएका | **प्रययौ** = जानुभयो | **परमविस्मितः** = अति चकित हुनुभयो |
| **मुनिः** = नारद मुनि पनि | **कृष्णं** = श्रीकृष्णलाई | |
| **कृष्णपार्थौ** = भगवान् श्रीकृष्ण र युधिष्ठिरलाई | **परं ब्रह्म** = परब्रह्मको रूपमा | |
| | **श्रुत्वा** = नारदबाट सुनेर | |

**वाक्यार्थ–** देवर्षि नारद पनि भगवान् श्रीकृष्ण र राजा युधिष्ठिरबाट बिदा लिएर त्यहाँबाट हिँड्नुभयो। त्यसपछि श्रीकृष्ण परब्रह्मको रूपमा रहनुभएको कुरा नारदबाट सुनेर युधिष्ठिर ज्यादै चकित हुनुभयो।

**इति दाक्षायिणीनां ते पृथग्वंशा प्रकीर्तिताः ।**

**देवासुरमनुष्याद्या लोका यत्र चराचराः ॥ ८० ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **पृथक्** = अलग-अलग रूपमा | **चराचराः** = स्थावर र जङ्गम |
| **इति** = यसरी | **प्रकीर्तिताः** = बताइयो | **लोका** = लोकहरू |
| **दाक्षायिणीनां** = दक्षकन्याहरूको | **यत्र** = जुन वंशमा | **जाताः** = उत्पन्न भए |
| **वंशाः** = सन्तानहरू | **देवासुरमनुष्याद्याः** = देवता, असुर तथा मनुष्य आदि | |
| **ते** = तपाईंलाई | | |

**वाक्यार्थ–** हे परीक्षित्! यसरी दक्षकन्याहरूको सन्तति परम्परा अलग-अलग रूपमा मैले तपाईंलाई बताएँ, जुन वंशमा देवता, असुर मनुष्य आदि सारा चराचर जगत् उत्पन्न भएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां सप्तमस्कन्धे प्रह्लादानुचरिते युधिष्ठिरनारदसंवादे सदाचारनिर्णयो नाम पञ्चदशोऽध्यायः ॥ १५ ॥**

**इति सप्तमः स्कन्धः समाप्तः ॥**